# नेपालको महाभूकम्प

( १९९० साल )

लेखक—

श्री. प्रबल गोरखा दक्षिण बाहु मेजर जनरल

ब्रह्मशम्शेर जङ्गबहादुर राणा बी. ए.

जोरगणेश छापाखानामा

छापियो।

बबरमहल
काठमाडौं, नेपाल

१९९२

मूल्य मो. रु. ।५० पैसा
हिन्दुस्तानलाई
कं. रु. आठआना

# भूमिका

धेरै वर्ष पछिसम्मलाई नेपालको इतिहासमा १९९० साल माघ २ गतेको दिन प्रख्यात भइरहने छ। कति वर्षको लडाईंले हानि गर्न नशक्ने तीन मिनेटको भूकम्पबाट छिनभरमै हुनआयो।

तर यस्तो भएता पनि हामीले बेफायदाबाट फायदा उठाउन कोशिश गर्नु पर्दछ। १९८० सालमा जापानमा पनि ठूलो भूकम्पको मार पर्नगयो परन्तु जापानीहरूले त्यसबाट झन फायदा उठाए। यो कुरा प्रख्यातै छ। यदि जापानीहरू त्यस बखत देखि झन् बर्ता उत्साही मेहनती, आत्म भरोसा गर्ने औ देश-प्रेमी भई ननिक्लेका भए यस्तो गुणको कताबाट प्राप्ति हुन्थ्यो? तसर्थ जापानी जातिको दृष्टान्त लिई यस्ता बखतमा पनि सबै देश औ जातिको भलाई पट्टि लागे भने हाम्रो देश पनि केको कम्ति होला र? हामी पनि एक स्वतन्त्र देशका जाति हौं, मनले नहारौं।

यो देशका विराजमान ओजस्वी राजन्य प्रोज्ज्वल नेपाल-तारा अतिप्रबल गोरखा दक्षिणबाहु पृथुलाधीश श्री ३ महाराज जुद्धशम्शेर जङ्गबहादूर राणा आहद् न्का द् ला लेजिओ द् अनेयर, जी. सी. सान्ति मरिजीओ ए लाज्जारो, जी. सी. एस. आइ., जी. सी. आइ. ई., यितेङ्ग पावटिङ्ग सुन चियान् लुचुयाँ स्याङ्ग च्याङ्ग, आनरेरी लेफ्टेन्याण्ट जनरल बृटिश आर्मी, आनरेरी कर्णेल अफ अल दी

गोरखा राइफल रेजिमेण्टस् इण्डियान आर्मी, प्राइम्मिनिष्टर आएण्ड सुप्रीम कम्याण्डर इनचीफबाट भूकम्पपीडित जनताहरूको लागी गरिबक्सेको बन्दोबस्त र बखत-बखतमा बक्सेको स्पीचहरू सबै यो पुस्तक भित्र परेका छन्। वाहाँको आफ्ना देश र दुनियाँ उपरको प्रेम यो पुस्तकका पाताहरूले स्वयं बक्नेछन्; यहाँ बर्णन गरिरहनाको दरकार छैन। यो प्यारो नेपाल—देशका गरीब दुःखीलाई सुखदिन, देशको उन्नति औ गौरव उच्च श्रेणीमा पुऱ्याउन वाहाँ बाट हर्दम कोशिश भइरहने छ भन्ने दृढ विश्वास छ।

यो पुस्तकको ( धरहराको ) मुखचित्र बनाई अरू सम्मति र समिति—अड्डाबाट यो लेख पास गरिदिने प्रबन्ध समेत मिलाइदिनु भएकोमा श्री क. प. बालकृष्णशम्शेर जङ्गबहादुर राणालाई मेरो धन्यवाद छ।

आद्योपान्त हेर्नु भई ठाउँ ठाउँमा सम्मति समेत दिनुभएकोमा प्र. मा. ने. ता. प्र. प्र. गो. द. वा. श्री गुरुज्यू हेमराज पण्डितज्यूलाई मेरो हार्दिक धन्यवाद दिन चाहन्छु; 'भूकम्प-पीडितोद्धारक-संस्था-अड्डा' विषयको रपोट जम्मा गरिदिएकोमा सो अड्डालाई पनि।

यो पुस्तकको काममा दिनुभएको हरेक किसिमको सहायताको लागि गो. द. वा. हेडमाष्टर रूद्रराज पाण्डे प्रति र मेहनतसाथ प्रुफकरेक्ट गरिदिएकोमा गो. प. सम्पादक पं० प्रेमराज प्रति धन्यवाद छ।

बीच-बीचमा सहायता दिने अरू सज्जनहरूको परिश्रम पनि बिर्सन सक्दिन, तिनीहरू सबैलाई यही मौकामा हार्दिक धन्यवाद अर्पण गर्दछु।

दुःख पाएका भाइ-बहिनीहरू उपर सबैको प्रेम र दया बढ्‌न जाओस् औ पछिकालाई समेत सो महाभूकम्प विषयमा केही ज्ञान र सूचना पनि हुनजाओस् भन्ने हेतुले यो एक सानु बयान लेखेकोहुं ।

सो महाभूकम्प भएको वर्षदिन पनिनाघिसक्यो । तसर्थ यही समयमा यो सानो पुस्तक प्रिय नेपाली पाठकहरूका समीपमा चढाउँदछु ।

तर जति लेखे ता पनि त्यो आपत्को भयङ्कर स्वरूप बिसंन दिन्न । यो नाशिएको देशको धुलोबाट हाम्रो देश र जाति झन् उच्च श्रेणीमा पुगोस् भन्ने आशा राख्तछु, बेफायदाबाट फायदाको जन्म होओस् भनी प्रार्थना गर्दछु । यदि यो पुस्तकबाट माथि लेखिएका इच्छाहरू पूर्ण गराउनामा केही न केही मद्दत हुनगए पनि यो पुस्तक लेखेको सार लाग्ने थियो ।

यो पुस्तकको प्रथम संस्करण-मा जम्मा २००० प्रति छापिए-कोथियो सो बिक्रि भई सकेको ले मेरा प्यारा देश बान्धव-हरूको समीपमा यो द्वितीय संस्करण सहर्ष सुमृपन्छु ।

बबरमहल,
काठमाडौं, नेपाल ।
वि. सं० १९९२ साल ।

ब्रह्मशम्शेर

# समर्पण

दैवी दुर्घटनाले दुःख पाएका प्यारा
मातृभूमिका लक्खौं र अकाल
मृत्युमा परेका हजारौं
भाइ बहिनीहरूको
सम्झनामा
समर्पण

—ब्रह्म शम्शेर,

# विषय सूची

श्रीः

# पहिलो भाग

## प्रस्तावना

यस महा भूकम्पको मार हिन्दुस्थानमा भन्दा पनि नेपालमा बढ्ता पर्नगयो। हिन्दुस्थान पट्टि बिहारको उत्तर र बीच भागसम्म मात्र नोक्सान पऱ्यो, जुन हिन्दुस्थानको लागि एक बहुतै सानो टुक्रा हो। परन्तु नेपाल-राज्यमा राजधानी लगायत आधा राज्यसम्ममा नोक्सान पर्नगयो; मृत्यु संख्यामा पनि नेपाल नै अग्रसर हुन-आयो। हिन्दुस्थान पट्टि ७१८८ ज्यानको मात्र नोक्सान हुन गयो; अर्थात् नेपालको भन्दा १३३१ कम्ति। उत्तर-बिहार जस्तो बाक्लो वस्ती (१५०००००० जन संख्या) भएका ठाउँमा भन्दा यो पहाड़ी मुलूकमा बढ्ता ज्यानको नोक्सान हुन गएकोबाट पनि समझदार पाठकहरूले यहाँ पर्नगएको विध्वंसको अड्डाम गर्न

शकान्। धेरैलाई यहाँको यस्तो परिस्थितिको पूरा ज्ञान नभएको बुझिन्छ। तल नोक्सानको एक छोटकरी फिरिस्त लेखिएको छ—

| मृत्यु-संख्या मर्दाना—जनाना—जम्मा | घरवास, देवालय र पाटिपौवा समेत |
|---|---|
| ३८५०-४६६९-८५१९ | २०७७४० |

अरू धनमालहरूको नोक्सान विषय केही फिरिस्त न बनेकोले यहाँ लेखिएको छैन। नगदी दामको हिसाबबाट करोड़ौं रुपियाँको धनमालको नोक्सान हुन-गयो हो, राजधानीका ठूला-ठूला दरबारहरूमा मात्र पनि लाखौं रुपियाँका मालहरूको नोक्सान हुन-गयो।

भूकम्पपीड़ितोद्धार सम्बन्धी काम दुइ विभागमा छुट्टिएको छ। पहिलो खण्डको मदत—तत्कालको दुःख-निवारण गर्ने, जस्तो दुःखी भोकाहरूलाई चामल ओढ्ने ओछ्याउने काठपात खर इत्यादि बाँड्ने, बास न भएका-हरूलाई टहरा बनाइदिने, घाइतेहरूको औषधि गर्ने, सुत्केरी बिरामीको स्याहार-सम्भार गर्ने—यस्ता कामहरू हुन। दोस्रो खण्डमा घर बास उठाउने काममा दुनियाँ-

लाई मद्दत दिने, सरकारी घर अड्डा, पूलहरूको मरमत गर्ने ( पुराना बस्तीका ठाउँमा नयाँ औ सफा शहर उपस्थित गराउने ) यस्ता कामहरू हुन् । यी दुवै खण्डमा भएका बन्दोबस्तहरू यो पुस्तकमा लेखिएका छन् । दोस्रो खण्डको काम खतम हुन अझ केही समय बाँकि नै छ ता पनि त्यस पट्टि अहिलेसम्म भएको र पछि हुने कामको विषयमा पनि लेखिएको छ ।

ज्योतिषीको हिसाबबाट भूकम्पको दिन अथवा माघ २ गते सोमवारको दिउँसो ४ बजेका टाइम्मा सूर्य, चन्द्र, मङ्गल, बुध, शनि, राहु, शुक्र समेत भई मकर राशिमा सातै ग्रह एकै ठाउँमा बस्ने भै पूर्ण-गोलयोग परेकोले केही उत्पातको अञ्जाम पहिले देखिनै भएको थियो । सबैको मनमा पनि केही न केही उपद्रव पर्न आउला भन्ने शङ्का हुनगएको थियो, परन्तु यसरी भूकम्प जाला भनी कसले विचार गरेको होला ?

त्यस बखत म यहीं थिएँ । दुःखी जनहरूको हृदय-विदारक दृश्य कैयन् देख्नु पर्‍यो । आफ्ना हृदय-प्यारा नेपाली भाई बहिनीहरूलाई यस्तो दुःख परेको फेरि

कहिल्यै हेर्नु न परोस् । तर यस्तो भएता पनि त्यसबाट हामीले जनाउ लिई उत्साह, जाति-मेल र देश-भक्ति जस्ता गुणहरू आफूमा बढाउन कोशिश गऱ्यौं भने सो दशाको दिनले पनि भाग्यको स्वरूप लिन पाउला । जब माघ २ गतेको दशालाई भाग्यको स्वरूप दिन शकिएला अनि पछि मात्र, हुरीको बेगमा बादल झैं सबैको मन-बाट सो विध्वंसको तसबीर मेटिन जाला । त्यो उद्देश्य ताकेर उद्योग गर्नु हामी नेपाली सबैको कर्तव्य हो— कुराले मात्र होइन कामले पनि ।

# दोस्रो भाग

## महाभूकम्प

नेपालमा गएको यो ठूलो भूकम्प पृथ्वी भरका ठूला-ठूला कम्पहरू सँग दाँजिन शक्तछ ।

भूकम्पकेन्द्र नेपालराजधानीबाट करीब ५२ कोश दक्षिण–पूर्वमा फेलापारेका छन् । त्यो ठाउँ ( जसलाई एपिसेण्टर भन्दछन् ) सो सीतामढ़ि र मधुबनीको बीच ( उत्तर–विहार मुग्लान ) मा पत्ता लगाएका छन् ।

महाभूकम्पको नक्सा



कलकत्ताको भूकम्प-यन्त्रले टिपेको नक्सा ( सोठाउँ यहाँ बाट ५०० माइल टाढ़ापर्दछ )

सो ठाउँ पूर्व ३ नं० को सीधा दक्षिण ( ओखलढुङ्गाबाट करीब ३५ कोश र उदयपुरगढ़ीबाट २५ कोश मात्र टाढा) परेकोले पूर्व ३ र ४ नं० पट्टि ज्यादा जोड पर्न गएको हो ।

हिन्दुस्थानको भूकम्प जाँच्ने कल (सिस्मोग्राफ) बाट नेपाल राजधानीमा भूकम्पको जोर सेकेण्डको आठ फीट गएको अड्डाम भएकोछ । तर भैंचालोको जोड़ जमीनको किसिमबाट फरक हुने भएकोले काठमाडौं र पाटन शहरमा सेकेण्डको ८ फीट गएता पनि भादगाउँ, लुँभु, सानागाउँ, बुङ्गमती, खोकनामा सेकेण्डको १० फीट्को तोड़ अथवा भूकम्प-केन्द्रको जग्गामा झैं हुन गयो भनी भूगर्भ-विद्या जान्नेहरूले भनेका छन् ।

भैंचालो कति बजे शुरू भयो भन्ने कुरामा धेरैको राय बाझ्दछ । तर हिन्दुस्थानको ( स्ट्याण्डर्ड ) टाइममा १४ घण्टा १३ मिनेट २२ सेकेण्ड चढ़ाउ भएकोले हिसाब गर्दा यहाँ दिनको २ बजी २४ मिनेट और २२ सेकेण्ड जाँदा गएको हुन आउँदछ । हुनत धेरैले २।१५ को अड्डाम गरेका छन् ता पनि २।२४।२२ लाई नै ठीक टाइम मान्नु पर्दछ ।

यसभन्दा पनि भूकम्प कति बेरसम्म अड्यो भन्ने कुराको मुकर्रर गर्न कठिन छ। त्यसको हिसाब जग्गै पिच्छे फरक-फरक पर्न गएकोछ। पूर्व तिर त १०।१२ मिनेटसम्मको पनि अड्डाम गरेका छन्, तर यहाँ ( राजधानी ) को त्यस बखत खुला मैदानमा बसिरहेको एक कारिन्दाले घड़ी हेर्दा ठीक दुइ मिनेटसम्म अड़ेको हिसाब गरेछ। अरू कुरा विचार गर्दा पनि २ देखि ३ मिनेट भित्रको अड्डाम गरिन्छ।

सो भूकम्पको जोड़ करीब ३०००००० वर्गमाइलको गिर्दासम्म पुग्यो ता पनि त्यस मध्ये धेरै जस्तो खण्डमा मामुली कम्प मात्र भयो। खास नोक्सान परेको ठाउँ ( १ ) नेपाल राज्यमा पश्चिम १ नं० देखि पूर्व सीमाना-सम्म र ( २ ) मुग्लानमा विहारको उत्तर र बीच खण्ड औ आसामको केही खण्ड हुनगयो।

सो ठूलो कम्प पछि साना-साना कम्प पनि धेरै गइरहे, अझसम्म पनि जाँदैछन्। यहाँ भूकम्प जाँच्ने कल न भएकोले कति यस्ता कम्प भए पूरा हिसाब राख्न शकेका छैनन्। माघ २ गते देखि ७ गते सम्ममा मात्र

पनि २८ साना-साना कम्प गए भन्ने हिन्दुस्थानको खबर छ। यहाँ पनि ती ६ दिन भित्र करीब त्यति नै गए होलान्। तिन मध्ये १।२ कम्प निकै कड़ा थिए। सो भन्दा पछिको गिन्ति अज्ञामको भरमा छ। यो कुरा विषयको अरू वैज्ञानिक जाँच एघारौं ( ११ ) भागमा केही खुलासा लेखिएको छ। त्यस भागमा यी कुरा विषय भूगर्भ विद्वानहरूले दिएको आफुस-आफुसको राय पनि लेखिएको छ।

त्यस बखत श्री ३ महाराजको सवारी पश्चिम नयाँ मुलूकमा भएको थियो। वाहाँको सवारी चलाउने मुख्य जनरल मेरो बुबा ( हाल पू० क० ज० ) सुप्रदीप्त मन्यवर जनरल बबरशम्शेर जङ्गबहादूर राणा जी. बी. ई., के. सी. यस्. आई., के. सी, आई. ई., ने, प्र. ब., अनरेरी कर्णेल बृटिश आर्मी होइबक्सिन्थ्यो। शिकारको बन्दो-वस्त गर्ने ज० केशरशम्शेर र हजूरिया जनरल बहादूर-शम्शेर होइबक्सिन्थ्यो। श्री ५ महाराजाधिराज त्रिभुवन-वीरविक्रम साहदेवको सवारी नागार्जुनमा थियो। पूर्व पहाडमा १ नं० देखि लिएर इलामसम्म र पश्चिममा ४

नं० सम्म जर्नेल कर्णेलहरू दौडाहा वा जाँच गर्न खटिई गएका थिए। कास्की लंजुङ्गमा नापी नभएको धेरै वर्ष भएकोले सो ठाउँ नापी गर्न भैरूँ र सूर्यदल २ पल्टन खटिएका थिए। साविक बमोजीम भीमफेदि–अमलेखगञ्ज-को बाटो मरमत गर्न २ पल्टन गएका थिए। श्री ३ को सवारीमा पनि पूरा २ पल्टन गएथे। नयाँमुलूक सवारी हुँदा यी पल्टनहरूलाई वगडिमा ज० सिंहशम्शेरको जिम्मामा छाडिवक्सेको थियो।

तसर्थ धेरै अफिसर र पल्टनहरू राजधानीबाट बाहिर गएका थिए (खास गरी तिनीहरू भूकम्पबाट कम नोक्सान भएको ठाउँमा पर्न गए।) मुक्त्यार श्री रुद्रशम्शेर ज. ब. रा. कायम-मुकायमी प्राइम्मिनिष्टर होइबक्सेर यहाँ रहेका धेरै जस्ता जर्नेलहरूलाई थप अड्डा र कामको भार पर्न गएको थियो। झन् त्यसै बखतमा भूकम्पको मार पर्न आउँदा राजधानीमा रहेका धेरै सर-कारी अफिसर कामदारहरूलाई ज्यादै भीड र झोँज पर्न गयो।

# राजधानीमा भूकम्प

## भूकम्पको बयान

माघ २ गतेको केही दिन अगाडि पौष २८ गतेमा केही पानी पर्‍यो। दिन र रात गरी करीब ·४१ इञ्च पानी परेको थियो। त्यसले गर्दा विहान पख हुस्सु पनि केही बढ्न गयो। अघिल्लो दिन संक्रान्ति भएकोले जतातत्तै संक्रान्ति मनाएको देखिन्थ्यो। माघ २ गतेमा पनि त्यही चाडबाडको हावा अडिरहेको थियो। सोही दिन सोमबारेऔंसी परेकोले धेरै जस्ता आईमाईहरू न्वाही धोई पूजा पाठ गरी व्रत बसिरहेका थिए। चाड-बाड मनाइसकेका दुनियाँहरू खेतमा काम गरिरहेका थिए। विहानपख हुस्सु लागेको थियो ता पनि अरू दिनको भन्दा घाम केही कडै थियो। त्यस बखत घामको तेज करीब ६०° डिग्री चढाउ भएको थियो *; तैपनि

*पानीको टेमपरेचर करीब ५७° डिग्री थियो।

आँगन, कौसि र सडक-सडकमा समेत घाम तापिरहने धेरै थिए। शहर गाउँका भट्टिहरूमा मतवाली नेवार भोटेहरूको भीड थियो। माघ महिना भएकोले गाउँलेहरू आफ्ना खेतको उबजाउ बेच्न शहरका बजारमा आएकाले बजार तिर पनि भीड थियो। सरकारी अड्डामा काम भइरहेको थियो। पल्टन कवाज खेलिरहेका थिए। ठीक २ बजी २४ मिनेट २२ सेकेण्ड जाँदा अकस्मात् जमीन भित्रबाट गुडगुडे आवाज आयो र साथ-साथै भूकम्पको शुरू भयो—१९९० माघ २ गतेको महाभैंचालोको उत्पत्ति भयो। यो जमीनको अपूर्व आवाजले गर्दा भूकम्प हो भन्ने ख्याल झट् चढ्न शकेन। पानीको लहरी झैं जमीनमा लहरी चल्यो। पहिलो अवस्थामा भूकम्पको बेग पूर्वबाट पश्चिम गएको अनुमान गरियो। दोस्रो अवस्थामा जमीन चक्कर खाई बटारिन थाल्यो; र सोही वेगमा धेरै जस्ता घर इमारतहरू लड्न गए। वेग यस्तो अनौठा थियो कि एक बिजुलिबत्तिको ग्लुप समेत त्यसको सकेट्बाट बाहिर उछिट्टिएको देखियो। त्यस घटनाबाट जमीन कस्तो जोड्ले काँपेछ केही अन्दाम गर्न शकिन्छ।

रुख बोट हुरीमा परे झैं लच्के। साना-साना बोटका टुप्पाले जमीन छोला-छोला जस्तो भयो।

पोखरीको वा भाँडामा राखिएको पानी बाहिर फ्याँकियो। समुद्र बढेमा झैं शान्त पोखरीहरूको पानी ठूला-ठूला छाल झैं, उछिट्टिन लाग्यो। घरको गाहारा किलासहरू हुरीमा ढोका झैं खुल्ने र बन्द हुने गर्न लागे। जमीन तल र माथि हुंदा धमाधम घरहरू लड्न थाले। अग्ला-अग्ला बुर्जा गजूरहरू पनि खसे। तोपको चढाइँमा झैं घर भत्केको भयङ्कर आवाज आउन थाल्यो। धूलोले गर्दा अन्धकार भयो। ८-१० हात अगाडि पनि देखिन नशक्ने भयो। शहरको धूलोले गर्दा टुंडिखेल जस्तो खुला जग्गामा पनि धूलोको कुइरीमण्डल हुन गयो। सबै मानिसहरू खुला जग्गातिर भाग्न थाले। कोही अड्न न शकी केही चीजको भर लिई खडा रहे, कोही चार हात-खुट्टा टेकी चौपाया झैं भाग्न थाले, कोही छिँडिमा लुके, कोही चोकमा दौडे, औ कोही बारीतिर कुदे। कहीं-कहीं आमाहरू आफू खुलामा आइसके पछि पनि आफ्ना छोरा-छोरीको मायाले घर भित्र पस्न जाँदा

मृत्युको मुखमा परे। धूलोले अन्धो पारेता पनि अतासले गर्दा सबै मानिस दौड्न थाले। साथ-साथै सबले अतासमा ईश्वरको नाम लिई कराउन थाले र चारै तर्फबाट कोलाहल शब्द निस्कन थाल्यो—सो शब्द घर भत्केको आवाजसँग मिल्दा कस्तो भयङ्कर आवाज आयोहोला, विचार गर्नुहोस्। खास गरी स्त्रीहरूमा धेरै जस्ताले धर्म हुन्छ भन्ने विचारले भाग्ने कोशिश नगरी पानी भर्ने वा औंलाले जमीन छुने यस्ता रकम-रकमका काम गरे। तर भाग्ने मानिसहरूले पनि सुख पाएनन्। शहरका साना-साना सडक र गल्लीहरू धराप बन्नगए। हजारौं घरले थिचिई अकाल-मृत्युको गाँसमा परे, हजारौं घाइते भए, टुडिखेलमा कवाज खेलिरहेका सिपाहीहरू उभिन नशकी धेरै जस्ता जमीनमा घोप्टो परे, पूर्वको १ खण्ड जमीन फाटिन गई पानी समेत निक्लनगयो। सोही बखत धरारा र घण्टाघर दुवै करौंतिले काटेका रुख झैं चिरा-चिरा पर्नगई २-३ टुक्रा भई ढले। धराराका टुक्राहरू त्यसको परखालको चक्का भित्रै परे। अरू घर ईमारतहरू पनि त्यस्तै किसिमले ढलेका देखिए। 'भूकम्प-

घण्टाघर ( वि. सं. १९९१ ) भूकम्प अघि





भूकम्प पछि

मा घरहरू तेसैं ढलेर भत्कन्छन्' भन्ने विचार धेरै दृष्टान्त-
ले सिद्ध भएन ।

खेत र सडकहरू चिरा-चिरा भई फाटिनगए । यी
चिरा परेका ठाउँहरूबाट पानी निस्कन थाल्यो । सबै
खोला नालामा बाढी आयो । बाग्मती विष्णुमती लगा-
यत अरू सबै खोलाहरू छिन भरमै कालो र मैलो पानी-
ले ढाकिए । कुनै ठाउँमा ८-१० हात माथिसम्म पानी
फोहोरा झैं जमीनबाट फुटी आयो । धेरै जस्ता खेत
पानीले जल-थल भए । कोही-कोही ठाउँमा जमीन
फाटिँदा तातो पानी र बालुवा समेत बाहिर आएको
देखियो—भनी भन्दछन् । बालाज्यू र शङ्खमूल नजीकमा
सडकहरू ठाउँ-ठाउँमा १-२ हातसम्म पनि भासिन गए ।
चिरा न परेका सडकहरू बहुतै कम थिए । यी चिरा
परेका ठाउँको गैन्हाइ ९-१० हातसम्म पनि हुन गयो,
लम्बाइको त कुरै छाड्नू ।

भूकम्प बन्द हुनासाथ सबै आफ्ना नाताहरूको
खोज तलाश गर्न थाले । बेपत्ता भएकाहरूको नाम पुकार्दै
सडकमा दौड्न थाले । घरमा न भएकाहरू आफ्ना घर

तिर दौड्न लागे । दुश्मनले हमला गर्दा झैं शहर भित्रका दुनियाँहरू आफ्ना मुख्य-मुख्य माल लिई बाहिर आउन थाले । एकै छिनमा सबै खुला ठाउँ यी आत्तिएका स्त्री पुरुषहरूले भरिए । माघेसंक्रान्ति मनाउन कोही-कोही माइत या कोही-कोही मित्रको घरमा गएकोले आफ्ना जाहान बचा नाता-गोता र इष्टमित्रहरूको पत्ता लगाउन विशेष कठिन पर्‍यो र त्यसले गर्दा उताका मानिस यता, यताका मानिस उता दौड्न थाले । आफ्ना नाता पुरिएकाहरूले शकी-नशकी घरको राश खोस्रन थाले । मद्दत नपुगेकाहरूले गुहार माग्नलागे, तर त्यस बखत सबै आफ्ना-आफ्नै नाताहरूको खोज तलासमा लागेकोले मद्दत पाउन कठिन भयो । घरको राशबाट बाँचेकाहरूको स्वर पनि सुनिन्थ्यो, परन्तु झिक्न पूरा सामर्थ्य भएन--यस्ताका नाताहरूको दिल कस्तो भयो हो कल्पना गर्न शकिंदैन । यस्ता मानिसहरू पल्टन भएका ठाउँमा अथवा ( काठमाडौंको लागि टुँडिखेलमा आई कराउन थाले । ) भूकम्प बन्द भएको केही बेर पछि नै सो ठाउँमा चीफ साहेब, लाठ साहेब र अरू

जर्नेल अफिसरहरू जम्मा भए। पहिलो काम उहाँ जम्मा भएका सिपाही फौजलाई उत्साह र आधार दिने भयो। त्यस पछि तिनीहरूलाई ठाउँ-ठाउँमा पठाउने काम गरियो। श्री ५ का छोरी मैयाँ २ र श्री ३ की नातिनी मैयाँ मरेको खबर त्यहीं आयो। अफिसरहरूको तैनाथमा राखी सिपाहीहरूको गठ-गठ गरी शहर र दरबारमा पुरिएका मानिस झिक्न खटन-पठन भयो। तिनीहरू गई शहरमा धेरै पुरिएकाहरूलाई बचाइदिए। अरू दरबारमा पुरिएकाहरूलाई पनि पल्टनले नै बचाए। आफ्ना घर जहान सम्झी मनमा कस्तो ताप परेको हुँदोहो ता पनि पल्टनियाँ जवानहरू आफ्ना कर्त्तव्यको सोझो रहे। खटाइएका ठाउँमा केही गान्हो नमानी गए—यस्तो देख्ता खुशी पनि लाग्यो, दया पनि उब्ज्यो। त्यस बखत ३ शहरमा करीब ९५०० सिपाही थिए। धेरै मानिसहरू घाइते हुनगएकोले अस्पतालमा ज्यादै भीड हुनगयो। घाइतेहरू साथ-साथै अरू शहरका बासिन्दाहरूले अस्पतालको कम्पाउण्ड ढाक्नथाले। तिनीहरू मध्ये कोही आमाहरू आफ्ना मरेका छोरा छोरीलाई हातमा लिई

बाँचेका छन् कि भन्ने आशाले डाक्टरलाई देखाउन आएको अपशोची दृश्य पनि देखिन्थ्यो। त्यस बेला अस्पतालको तैनाथवाला म भएकोले घाइतेलाई औषधि पुऱ्याउने काम मलाई पर्न आयो* त्यस बखत शहर भित्र कोही-कोही सज्जनहरूले दुःखी घाइतेहरूको स्याहार संभार गरेता पनि घेरै जस्ता वासिन्दाहरू अतासले होश-हीन भई बसीरहे।

श्री ५ महाराजाधिराजको सवारी त्यस बखत नागार्जुनमा थियो। केही बेरको लागि त्यहाँबाट आफ्ना नारायणहिटी दर्बारमा सवारी भई—विष्णुमतीको पूल भत्केकोले—छाउनीको बाटो गरी नागार्जुन फिऱ्यो। चलन बमोजीम छाउनी पास गरिबक्सँदा १ तोपको सलामी दिये। नागार्जुनका दरबारहरू पनि भत्केकाले पालमै राजभयो।

शहरका कोही घर र दरबारमा समेत भत्केका घरका काठपात आगामा पर्दा आगलागी हुनगयो, तर थोरै घरमा मात्र पर्न आएको र हावाको जोर पनि कम भए-

---

* छैठौं भागमा लेखिएको छ।



भादगाउँ को एक सडक



विष्णुमती को पुल (काठमाडौं नजदिकको)



बालाज्यू जाने सडकमा चिराचिरा परेको



टुँडिखेल (काठमाडौं) मा जमिन भासिएको

भूकम्प बाद बस्ति बसेको



टुंडिखेल (काठमाडौं) मा



जमल (काठमाडौं) मा

कोले सह्माल्न शके। खोकनाको तेल पेल्ने ठाउँमा पनि आगलागी भयो, परन्तु फिँजिन पाएन। फर्पिङ्को मुख्य विजुलीघरमा भूकम्प हुँदा आफसे आफ कल बन्द हुने प्रबन्ध भएकोले सबै ठाउँको करेण्ट बन्द हुन गयो। सो दैवी न भएको भए चुंडिएका तारहरूबाट आगलागी उत्पन्न हुन बहुत सम्भव थियो। आगलागी न हुनु एक भाग्यको कुरा संझनु पर्दछ। त्यस बखतको अवस्था तपसील मा प्रेमराजको एक बयानबाट राम्रोसँग अड्डाम गर्नशकिन्छ।

"होश-हतास हराएको दुइ मिनेट पछि आँखा खोलेर हेर्दा चारैतिर प्रलयको दृश्य, प्रलयको कोकोहलो स्वरले चिच्याउन र कराउन लागेको देखियो, सुनियो। मानिसको ता के कुरो मानिसका शरणमा परेका चराचुरंगी-हरू पनि च्याँ-च्याँर चूं-चूं गरेर आकाशमा कराउन लागे-का थिए। मूसो जस्तो छरितो जन्तुले पनि भाग्ने मौका पाएन; जहाँको तहीं थिचिएर मर्नु पर्‍यो।"

"छोराको सबै शरीर किचिइरहेछ, मुख पक-पक बाएको ईंटका अन्तरबाट अलि-अलि देखिन्छ, आ····मा··· भनेको मलीन आवाज अलि-अलि सुनिन्छ, ईंट काठ

पल्छ्याएर छोरो झिक्ने मदत पुग्दैन। यस्तो अवस्थामा त्यस अभागिनी आमाको तस्वीर खिँच्नु होस्! जहानमा ११ जना थिए, सबै किचिएर मरे, एउटा पाँच वर्षको बालक बाँच्यो। यो टुहुरोको संझना गर्नुहोस्। विवाह गरेको वर्ष दिन पनि भएको छैन १५ वर्षकी बाहुनी विधवा भई; यसले छाति पिटी-पिटी रोएको करुणाक्रन्दनको विचार, गर्नुहोस्! जहानमा कसैको टाउको फुटेको छ, कसैको हात भाँचिएको छ, कुनै बेपत्ता छन्, कसैलाई खोस्रेर झिक्तै छन्, कसैलाई पोल्न लगिसके। घ्याम्पो फुट्यो, अन्नको गेडो छैन। घरमा मुर्दा लडिरहेछ, कात्रो किन्न जाने पसल छैन, दाउरा किन्ने पैसा छैन। घर भत्केका काठपातले मुर्दा पोलिए। बाबु मर्‍यो, छोरोले किरिया गर्नालाई कपाल खौरन छुरा पाएन। पुरोहेत बाजेसँग किरिया गराउने पुस्तक छैन; घरले किचिएको छ, अथवा कहाँ छ पत्तो छैन। किरिया पुत्रीले नयाँ धोति नपाएर पुरानो पटुका फेरेर किरिया बस्नु पर्‍यो। सारा शहर भत्क्यो, पसल भत्के, केहीकिन्न पाइँदैन। रात पर्‍यो, माघे झरी पर्ने डर छ, ओत छैन!”

५५ झ्याले दरबार, भादगाउँ (वि. सं. १७५६)



भूकम्प अगि



भूकम्प पछि



च्यासिङ् देवल, पाटन (वि. सं. १७८०)



मछिन्द्रनाथको देवल पाटन
(१८९० सालको भूकम्पबाद जीर्णोद्धार भएको)

लास जलाउनालाई दाउरा नपाउँदा घेरैले भत्केका घरको काठले जलाए। सबै घाटहरूमा ठेलंठेला भयो। मुर्दाको सद्गत गर्न नशक्नेहरूले घाटमा मुर्दाहरू त्यसै फ्याँकि थाले, गाईवस्तुको त कुरै छाड्नु।*

वीरगञ्जसम्मको एकलो टेलिफोनको लाइन पनि टुट्न गएको र चारैतिर नोक्सान पर्न गएकोले बाहिरको खबर अन्धकारैमा रह्यो, न त यताबाट खबर पठाउन शकियो। श्री ३ कहाँ खबर लिई घोडचढी गए। बाटो बिग्रेकोले भादगाउँर वरिपरि गाउँको खबर पाउन पनि कठिन भयो। केही गोलमाल वा चोरीको बचाउलाई कौसी (सरकारी ढुकुटी) झ्यालखाना, तोपखाना र ठूला-ठूला दरबारमा पालो थप गरियो। राती रमन घुम्ने काममा विशेष कडा गरी थप अफिसर सिपाही खटाए। खोरका थुनुवाहरू भाग्न कोशिश गरेकोमा सिपाहीको मदत चाँडै आएकोले भाग्न शकेनन्। हिउँदको छोटो दिन—रात चाँडै पऱ्यो, तर बिजुली बत्ति आएन। आफ्ना नातादारहरूको खबर लिन पनि फुर्सद भएन। साना-साना कम्पहरू

---

* चौथो भागमा हेर्नें।

रातभर गइरहे, तिनको गिन्ति रहेन । ठूला देखि साना-सम्म सबैको खेत, बारी या खुला मैदानमा बास भयो । हजारौंले ओत नपाई खुला मैदानमा बसे, त्यस रातमा खान पनि थोरैले मात्र पाए । जाडो ज्यादा कडा थियो । ठण्डी २८ डिग्री सम्म झर्‍यो, पानी जम्न थाल्यो । त्यो रात जरोको निद्रा झैं बित्यो ।

भोलि पल्ट पुरिएका मानिस र मुर्दा झिक्ने काममा मदत दिन सिपाहीहरूलाई ठाउँ-ठाउँमा पठाए । धेरै जिउँदा मानिस निस्के । शहरको स्वरूपै बदलिएको र एकै ठाउँमा पनि ४०।५० जनासम्म पुरिएकोले जत्रो मदत पनि कम्ति देखिन्थ्यो । सिपाही र कोही-कोही अफिसरबाट तारिफ लायकको काम भयो । चार भंज्याङ भित्रका गाउँहरूको र नजीक-नजीकका पहाडहरूबाट खबर आउन थाल्यो । अफिसरहरू पनि गाउँ-गाउँमा बुझ्न गए । सबै ठाउँबाट उही खराब खबर आउन थाल्यो । दृष्टान्तको लागि एक भूकम्प सेवक पं० प्रेमराजको बयान तपसीलमा लेख्तछु ।

"म घुमेका ठाउँहरू मध्ये सानागाउँ र ठुंभु शहरको



श्री मे. ज. विक्रमसम्शेरको घर, वीरगञ्ज



बडाहाकीमको घर, मोरङ

भैरवमन्दिर, भादगाउँ (वि. सं. १७४२)





दृश्य अन्तको भन्दा हृदय-विदारक छ। १५००-२००० छाना अघि जुन ठाउँमा थिए, आज त्यही ठाउँमा ४-५ वटा छाना पनि देखिँदैनन्। अघिको झिँगटीका छानाले भरि-भराउ भएको बस्ति अहिले पटपटी फुटेको नांगो डाँडो देखिइरहेछ।"

वीरगञ्जसम्मको टेलिफोनको लाइन पनि सोही ३ गते नै खुल्यो। परन्तु रक्सौल भन्दा परको खबर केही पाइएन। "वीरगञ्ज स्वाहा भएको छ, रक्सौलदेखि माथिसम्म रेलको लाइन टुटेको छ। नेपाल सरकार लाइट रेलवेमा पनि नोक्सान पर्न गएको छ। तारको लट्ठा टुटेकोले हिन्दुस्थान पट्टिको केही खबर छैन। तर मुग्लान पट्टि पनि धेरै नोक्सान पर्न गएको अड्काम गरिन्छ।" भन्ने खबरसम्म आयो। अन्धकारको अन्धकारै भयो। पहाड तर्फबाट पनि बिस्तार-बिस्तार मात्र खबर आउन थाल्यो।

भूकम्प गएको दिनै देखि हररोज साना-साना भूकम्प जान थाले। माघ ४ गतेको रातमा एक निकै ठूलो कम्प गयो। आत्तिएका दुनियाँहरूमा झन् त्रास बढ्न गयो। हरेक कम्पमा मानिसहरूको कोलाहल सुनिन्थ्यो।

३-४ दिनसम्म यस्तो कोलाहल बराबर चलिरह्यो। पछि-पछि यस्तो कराउने कम हुँदै गयो। दुनियाँलाई भूकम्पमा बानि पर्न गयो। बास, खाना आदि हरेक कुराको हा-हाकार परेको बखतमा यस्ता साना-साना कम्पबाट झन् बढ्ता डर पर्न गयो। वरिपरिका गाउँ जतातत्तैबाट नोक्सानको खबर आउँछ, बाहिर देशपट्टिको भने केही खबर छैन, अब के आइलाग्ने हो भन्ने ख्यालले यसै आत्तिएका पुरुषहरूको मनमा झन अतास बढ्न गयो।

यो नयाँ अवस्थाको लागि तपसीलमा लेखिए बमो-जीमको विभाग-विभागमा काम भयो।

जङ्गी-लाठ ( हाल मुक्तियार ) पद्मशम्शेर जङ्गबाट हेड्क्वार्टर ( मुख्य अड्डा ) को जिम्मा लिइबक्सियो। वाहाँ-को त्यस बखतको परिश्रम र कर्तव्य उपरको भक्ति बिलकुलै प्रशंसा लायकको थियो।

( १ ) अन्न चामलको बन्दोबस्त गर्ने काम पहिला मोडमा त्यस तर्फ पनि ज. पद्मबाटै नजर भयो। तर ९-१० दिन पछि सो काम द. क. ज. ( हाल जङ्गी-लाठ ) मोहनशम्शेर जङ्गबाट नजर भयो। वाहाँलाई मद्दत दिने क. भैरवशम्शेर र क. शम्शेर विक्रम थिए।

( २ ) घाइते र बिरामीहरूलाई औषधि गराउने काम-यो काम म माथि पर्न आयो ।

( ३ ) पानी-काज–सो जनरल प्रचण्ड शम्शेरबाट नजर भयो ।

( ४ ) बिजुली र टेलिफोन–ज. कृष्णशम्शेर । बाहाँ मनि क. चेतशम्शेर र मिष्टर किल्बर्न थिए ।

( ५ ) लोक-रक्षा–सो पनि ज. पद्मबाटै नजर भयो । सो काममा बाहाँलाई मद्दत दिने अरू अफिसरहरू पनि थिए ।

( ६ ) पुलिस—त्यसको तैनाथवाला ज. सूर्यशम्शेर होइबक्सिन्थ्यो ।

( ७ ) पल्टन फौज—तिनीहरूबाट लोक-रक्षादेखि लिएर हरेक किसिमको काम हुन्थ्यो । ज. पद्मको अधीनमा थियो ।

( ८ ) शहर सफाइ—यो काम अस्पताल र म्यूनिसिपल अड्डाबाट भयो ।

यी माथि लेखिएका विभागहरू बाहेक सेन्सस लिने, ठाउँ-ठाउँको रपोट जम्मा गर्ने, जङ्गलमा डाँडा भाटा काटे-

को हेरचाह गर्ने, इत्यादि अरू शाखाहरू पनि क्रमै सँग उत्पन्न भए।

## ( ख ) भूकम्प पछिको अवस्था

सबैलाई बास र खानाको दुःख पर्न आयो। ५-६ दिनसम्म घर वस्ने १०० मा ८।१० जना पनि होओइनन्। धेरैका घर चिरा-चिरा भएका र सद्दे घर भएकाहरू पनि धेरै जस्ता डराएकाले बासको कठिनता पर्न आयो। राजधानी खाल्टो भित्रमा मात्रै पनि जम्मा ५५७३९ घरमा नोक्सान पर्न गयो, अर्थात् १०० मा ७० घर नोक्सान भए। १-२ दिनसम्म त कसै-कसैले रुख मनि बसी रात विताए। टुंडिखेल र भँडारखाल बगैंचा लगायत सबै सरकारी ठाउँमा बस्ति वस्न शुरू भयो। बारीहुनेहरू आफ्ना-आफ्ना बारीमा बसे। टुंडिखेलमा दुनियाँहरूको लागि सरकारी पाल टाँगियो, तर सबैलाई कसरी पुग्न सक्तथ्यो ? अफिसरहरूलाई पल्टनियाँ पालहरू बाँडिए। नभत्केका सरकारी घरहरूमा पनि मानिस राखिए। खास गरी परदेशी-हरूलाई सुविस्ता दिने उद्योग भयो। त्रि-चन्द्रकालेज र गेष्टहाउसमा परदेशी र कोही-कोही नेपाली-

हरूलाई राखे। आफ्ना आधारमा परेका परदेशीहरूको सुविस्ताको ख्याल गर्नु कर्तव्य सम्झी तिनीहरूलाई शकेसम्म सरकारले सुविस्ता दिए। बास नभएका शहर-बासिन्दाहरूलाई ठाउँ-ठाउँमा सज्जनहरूले आफ्ना खेत बगैंचामा बस्न टहरा बनाइदिए। जमल (रानीपोखरीको उत्तर ज. प्रतापशम्शेरको जग्गा) मा करीब १०० जनाको बस्ति त्यही हिसाबबाट बन्यो। १-२ जङ्गल बाहेक डाँडा भाटा काट्नाको निमित्त सरकारी बनहरू दुनियाँको लागि खोलिए। गाउँ-गाउँमा पराल भएकोले छाप्रा चाँडै बनाए। तर शहरमा केही कठिन पर्न गयो—पराल भकारिको भाउ धेरै नै बढ्यो। कर्कटपाता, कपडा र टार्पोलियनहरूको छत गरी बसे। हप्ता दिन जति बिते पछि आफ्ना-आफ्ना पक्की बास पट्टि दृष्टि दिन थाले। घर चाँडै बनाउन नशक्नेहरूले टहरो वा बलियो छाप्रो बनाउन थाले। घर मर्मत गर्नेहरू घर तिर लागे, परन्तु त्यस्ताको गिन्ति बहुतै कम थियो।

बास पछि खानाको हा-हाकार पर्न आयो। घरले धेरै अन्न पुरिएको र बाहिरबाट पनि अन्न आउन कठिन

देखि-एकोले अन्नको भाउ ज्यादै बढ्न गयो। फेरि गाउँ-गाउँ तिर कूत तिर्ने बखत भएकोले धेरैका घरमा धान मकै जम्मा गरेका थिए। घरले पुरिई धेरै अन्नको नोक्सान हुन गयो। कूत बुझाइ नसकेका रैतिहरूलाई दोहोरो आपत् पर्न गयो।

तसर्थ राजधानी भित्रका गाउँ-गाउँमा र पहाडमा समेत रैतीलाई अन्न विषे विशेष कष्ट पर्न गयो। भएको अन्न माटो लागि हाल्यो, किँनू भने पनि पैसा छैन—कस्तो आपत् पर्‍यो होला! पैसा भएका शहर-बासिन्दाहरूलाई त ३।४ दिनसम्म कठिन पर्‍यो भने उनीहरूको कस्तो हालत भयो होला? सो विचार गर्न शकिन्छ। अनिकालको डरले सबैले थोर-थोरै खान थाले। धेरै जस्ता गाउँलेहरूले मकै भटमास खाई पेट पाल्न थाले। पछि-पछि पुरिएका चामल माटोबाट केलाई पेट पाले। सरकारी गोदामबाट केही दिनको लागि धान कुटाउँदै दुनियाँलाई चामल बेचियो। त्यस काममा अफिसरहरू खटिएका थिए; जथाभावी नबेची दरकार परेकोसम्म मात्र बेचिने प्रबन्ध भयो। साहु महाजनहरूको पुरिएको

अन्न झिक्र र सो अन्न दुनियाँलाई वेच्नालाई पल्टनियाँ अफिसर र सिपाहीहरू गई मद्दत दिए। धान कुट्ने कल हुनेहरूलाई ठाउँ-ठाउँमा ती कलहरू खोल्न लगाइयो। अन्नको कम्ति भएको बखतमा झन् उल्टो बालकदेखि बूढासम्म-सबैको भोक जाग्यो (खुलामा बसेर हो वा केले हो ईश्वर जाने)। त्यस बखतमा यस्तो हुनु दशा जस्तै भयो। कोही-कोही साहू महाजनले अन्न लुकाएर अन्नको भाउ बढेकोले "साहू महाजनले यस्तो बखतमा ज्यादा नाफा लिन हुँदैन, साविककै दरमा अन्न बेच्नु पर्छ, अन्न लुकाउन पाउँदैनन्, नत्र सजाय हुन्छ" भन्ने इस्तिहार जारी भयो। साथ-साथै किन्नेहरूलाई चाहिने जति मात्र बेचिने गरियो, नत्र पछि महँगोमा बेच्नाको खातीर एउटैले पनि धेरै किन्ने सम्भव थियो। बिजुलीको पावर हाउस र रोपवेमा केही नहुनु बहुत भाग्यको कुरा भयो। त्यसले गर्दा रोपवेले ७ गते देखि पूरा काम दिन थाल्यो। मधेस तर्फबाट अन्न आउन शक्यो। फेरि केही दिनसम्म अन्न सिवाय अरू केही माल पनि ल्याइएन। त्यसले गर्दा अन्नको दुःख हरायो र साहु महाजनलाई पनि

सावीकको मोलमा बेच्न कर लाग्यो र अवस्थाको फायदा उठाई ज्यादा नाफा लिन पाएनन्। रोपवेले निकै ठूलो काम दियो। सो रोपवे मेरो स्वर्गवासी जीज्यूबुबा श्री ३ महाराज चन्द्रशम्शेर जङ्गबहादूर राणाका पालामा खुलेकोले दुनियाँले कृतज्ञता साथ वाहाँको नाम सम्झे। यो पहिले हप्तासम्मको कृत्य हो। परन्तु गाउँ-गाउँमा भने १५।१६ दिन पछि मात्र बेच्न पठाउने प्रबन्ध भयो। ठाउँ-ठाउँमा अन्नादिहरू लरिबाट लगियो ता पनि बाटो बिग्रेकोले टाढा-टाढा गाउँमा पुन्याउन मुश्कील भयो (पहाड तर्फको त कुरै छाडौं)। शहरका गरीबहरूलाई सरकार तर्फबाट सिधा बाँड्ने प्रबन्ध भयो। स्वयं-सेवक-हरूले समेत यस्ता धेरै भोका गरीबहरूलाई मदत दिए। तर गाउँ-गाउँतिरका गरीबहरूको केही दिन बाद मात्र सिधा पाउने बन्दोबस्त भयो।

तीन शहर भित्रको धारा र पाइपहरू समेत ठाउँ-ठाउँमा बिग्रेकोले पानीको पनि केही दुःख पर्न आयो। खास गरी माघ ४।५ गतेले त डरलाग्दो स्वरूप लेला जस्तो भयो, तर मुख्य रिजर्भ्वायर (पानीको मोहान)

हरूमा विशेष नोक्सान नभएकोले चाँडै मर्मत हुन शक्यो। तर पानीको केही कम्ति नै भएकोले दिनको दुइ टायम मात्र पानी छोड्ने बन्दोवस्त भयो। पहिला पटकको हा-हाकारमा पानी नपाउँदा कूवा र पोखरी समेतबाट पनि पानी खान थाले। सद्दे रहेका धाराहरूमा ज्यादा भीड हुन्थ्यो। हप्तादिन पछि सो पट्टि डर हराउँदै गयो। तर शहरमा भन्दा पनि गाउँ-गाउँमा त्यस विषयको बर्ता सङ्कष्ट देखियो। त्यहाँ कुलो र कूवाबाट पानी खान्थे। परन्तु भूकम्पले धेरै जस्ता कूवा बिगारी दियो र कुला-हरू घरका थुम्माले पुरिए। ढुङ्गेधारा नजीक भएका ठाउँमा त केही सुबिस्ता भयो, तर कूवा मात्र भएका ठाउँमा पानीको ज्यादा हा–हाकार पर्न गयो। ट्युबवेल पनि जगेरा नभएकोले केही मदत पाएनन्। ज्यान थाम्ना निमित्त मैला पोखरीको पानी पनि पिए। जब २।३ महिना पछि कूवा र कुलो सफा पार्नशके, अनि मात्र पानीको सङ्कष्ट हराउन गयो।

पेट्रोल (मोटरकारको तेल) को मौजात कम भएकोले जथाभावी खर्च हुन नपाओस् भन्नाको लागि पहिलो अवस्थामा सरकारले त्यस उपर पनि दृष्टि दिनु पर्‍यो।

खास गरी पहिलो हप्ता भित्र आत्तिएका दुनियाँ-हरूमा आज यस्तो हुन्छ, भोली यस्तो हुन्छ भनी अनेक किसिमका फटाही-हल्लाहरू पनि उड्न थाले, पत्यार पनि पर्न थाल्यो—आत्तिएको मनमा नराम्रो कुराको असर पर्न केही बेर लाग्दैन। त्यसैले आत्तिएका-जनताका मनमा शान्ति दिलाउनाको जरूरी देखियो। पल्टनियाँ सिपाही-हरूले आफ्ना घर संझेकाले तिनीहरूलाई पनि धैर्य र उत्साह दिनाको आवश्यकता थियो। सो काम प. क. ज. ( हाल चीफ ) पद्मशम्शेर जं. ब. रा. बाट राम्रो सँग भयो। "हामी गोरखाली सिपाही हौं, लडाइँ र यस्तो बखतमा धर्म छाड्न हुन्न, अर्काको उपकार र उद्धार गर्नु पर्दछ, अहिलेको परिश्रमले पछि पुण्य मिल्दछ। आफ्ना इज्जत र गौरव नफ्याँक।" इत्यादि दिलासा र उत्साह-प्रद वचनबाट धेरै उत्साह उत्पन्न गराइबक्सियो। त्यस बखत टुंडिखेल एक मुख्य जम्मा हुने ठाउँ थियो। सब स्पीचहरू त्यहींको खरिको बोटबाट हुन्थे।

पाँच छ दिनसम्म हररोज यो उत्साह दिने उपाय चलिरह्यो। त्यस बखतमा लोकलाई उत्साह दिलाउनाको

खातीर बुद्धि र परिश्रमको विशेष दरकार पऱ्यो। जातिको महत्व, जापानको यस्तै दशा, आफ्नो कर्त्तव्य र ईश्वरको भरोसा—इत्यादि विषयको वखत-वखतमा दुनियाँलाई बोध गराउने उपाय भयो। त्यस्ता वचन-हरूले मानिसको मनमा धेरै सान्त्वना दिलाए।

चोरी, लूटपीट हुने बढ्ता सम्भव यस्तै मौकामा हुन्छ। चोरहरूबाट वर्ता चोरी हुन लाग्यो। शहरमा मात्रै होइन कि गाउँ-गाउँमा समेत चोरहरूले शिर उठा-उन थाले। दुनियाँहरू भने कानून माफिक रहे, परन्तु यो चोरहरूले गर्दा झन् वर्ता अतास पर्न गयो। भूकम्प-को दिनै देखि ठाउँ-ठाउँमा पालो थप र शहरमा पुलिस-को कड़ा चेवा र कड़ा रमन हुन लागेको थियो ता पनि माघ ५ गते देखिन् शहरको मुख्य-मुख्य ड्यौढि, बस्ति, धन-माल धेरै भएका ठाउँमा सिपाहीहरूलाई बन्दूक गोली गठ्ठा दिई अखडा राखिए। साथ-साथ लोकरक्षाको खातीर "जङ्गी-कानून" पनि जारी भयो :—

( १ ) खास चोर वा शङ्काका चोर जस्ता भाएता पनि साबिकको इन्साफ पाउँनेछैनन्।

( २ ) त्यस दिन ( माघ ५ ) देखि बेलुकाको ८ बजे भन्दा अघि र बिहान तोप चले पछि मात्र घर बाहिर निस्कन पाउने। सो टायम भन्दा ढीलो वा अगाडि बाहिर भेट्टाएमा कडा सजाय हुनेछ।

( ३ ) चोरलाई मारिदिए केही बात लाग्दैन।

( ४ ) पिकेट ( अखडा ) का सिपाहीहरूलाई— "शङ्का परेको मानिसलाई तीन पटक सोध्नू, केही जवाफ दिएन वा भाग्न लाग्यो भने पक्रने कोशिश गर्नु, सो नशके गोली पिलाई मारिदिनू" भन्ने उर्दि भयो। जर्नेल, भारा-दार, अफिसर–जस-जसको बन्दूक थियो उनीहरूका घरमा पनि चोरलाई मारेमा बात लाग्दैन भन्ने उर्दि जारी भयो।

काठमाडौं शहरभित्र मुख्य दोबाटो लगायत ठाउँ-ठाउँमा जम्मा ७२ पिकेट थिए। काठमाडौं भित्रको यो पिकेट बाँड्ने काममा ४ डोर गरी डोरै पिछे १।१ अफि-सर तैनाथवाला गरी राखिए। पछि क्रमै सँग पिकेटको गिन्ति घटाउँदै लगी वैशाख १० गते सम्ममा सबै पिकेट झिकिए। पाटन-भाद-गाउँमा पनि त्यहींकै ब्रुगेडबाट

काम चलाइयो । त्यस माथि राती रमन घुम्नालाई थप अफिसर सिपाही खटिए । राणाजी अफिसरहरू पनि भादगाउँ, पाटन, लगायत गाउँ–गाउँमा राती-राती पेट्रोल ( रमन ) को काममा खटिए । अखडा अखडाका र दरबारका पालेहरूले बीच-बीचमा चोर उपर गोली चलाए । कोही नमारिए ता पनि काठमाडौं शहरमा मात्र करीब २०।३० चोर पक्रिए । यी चोरहरू मध्ये एउटा सिपाही पर्न आयो । त्यस उपर फौजले गरेको घृणा हेर्न लायकको थियो । त्यस चोरको दाइ लगायत धेरैले त्यसलाई ज्यानको सजाय दिनुपर्छ भनी जिकि्र गरे । चोरहरूलाई ल्याई खुला टुंडिखेलमा कोर्राले पिट्थे । वास्तवमा झुण्ड्याउने इरादा थिएन ता पनि नसियतको लागि "झुण्ड्याउने बखत नआएसम्म झेलखानामा थुन्नू" भन्ने उर्दि हुन्थ्यो । यस्तो दण्ड बखत हेरी मनासिब थियो—असाधारण अवस्थामा असाधारण कारवाइको आवश्यकता परि आउँदछ । यस्तो कारवाइ र कडा पालो पहराको फल बहुतै असल भयो—चोरी एकदम घट्दै गएकोले दुनियाँको आत्तिएको मनमा आधार

हुन थाल्यो । यसरी शान्ति मिलेकोले सरकार उपर तिनीहरू कृतज्ञ भए ।

चोट–पटक लागी घाइते हुने धेरै भए । अस्पतालमा समेत नोक्सान पर्न गएकोले घाइते बिरामीहरू पाल वा छाप्रामा राखिए । जनाना अस्पतालमा सुत्केरी राख्न एक बेग्लै ठाउं छुट्याएको थियो। गाउँ-गाउँतिर औषधि दिन घोडा चढी डाक्टर कम्पाउण्डर गए । राजधानी भित्र ठाउँ-ठाउँमा गरी जम्मा ४ र बनेपामा १ जम्मा ५ टेम्पोरेरी अस्पताल खडा गरियो । पल्टनियाँ कम्पाउण्डरहरूलाई प्रथम चिकित्साको निमित्त औषधि पट्टि दिई राजधानी भित्रका गाउँ र नजीक-नजीक पहाड तर्फ सदरैबाट पठाए । प्रथम चिकित्सा गर्ने काममा स्वयं-सेवकहरूबाट पनि बेस मदत भयो । त्यसमा थप कोही-कोही भूकम्प-सेवकहरूले अस्पतालहरूको काममा पनि सहायता दिए । राजधानी भित्रमा करीब १४००० मानिसको औषधि भयो । *

त्यस बखत मानिसहरूको बास र खानाको केही

---

* अरु बयान छैठौं भागमा लेखिएको छ ।

ठेकान नभएकोले केही रोग (खास गरी हैजा टाइफायड) फैलिएला भन्ने डर र सम्भव थियो। शहर लगायत सबै ठाउँमा मैला पोखरीको पानीले काम चलाउन थालेकाले झन् डर भयो। सो डर निवारण गर्नाको खातीर कूवा र पोखरीमा औषधि ( पोटास ) हालियो। डाक्टरहरू-लाई शहर-सफाइ जाँचमा पठाए, दुनियाँको टट्टिमा औषधि हाल्न लाउने इत्यादि बन्दोवस्त भयो। यी कामहरू अस्पताल र म्युनिसिपल अड्डा मिली गरे। त्यस वखत केही रोग फैलिएको भए धेरै ज्यानको नाश हुन जाने सम्भव मात्र होइन कि दुनियाँहरूमा ज्यादा अतास पनि पर्न जाने थियो। फाट-फुट बिरामी हुन्थे ता पनि केही रोग उठेन, यसैको निमित्त हामी ईश्वरलाई धन्यवाद समर्पण गर्दछौं।

बाहिरपट्टिको पहिला खबर माघ ७ गते राती बेतार-कलबाट सुनियो। बिजुलीको पावर हाउसमा केही नभए-कोले बिजुलीको इञ्जिनियर आर्. किल्बर्नले करेण्ट ल्याई आफ्नो बेतार-कलबाट बाहिर मुग्लानपट्टिको खबर दिए। सो खबरबाट हिन्दुस्थानको पूर्व–उत्तर खण्ड ( अर्थात्

बिहारको उत्तर भाग मुजफ्फरपुर, मुंगेर, दरभङ्गाहरू) मा ज्यादा नोक्सान भएको थाहा भयो। त्यसबाट नेपालको पश्चिम भाग बचेकोछ भन्ने अड्डाम गरियो। सो खबर पाउँदा धेरै आधार भयो। त्यस दिनदेखि दिनै पिछे २-३ वटा बेतारकलबाट खबर टिपियो। तर यहाँ बाट खबर पठाउने केही कल नभएकोले धेरै दिनसम्म अरु बाहिरियाहरूलाई हाम्रो देशको खबर लुक्र गयो। पहाड-तर्फको खबर पनि चाँडो आउन शकेन। नजीक १ नं. सम्मको माघ ४ गते सम्ममा र अरु ३।४ नं. को माघ ७ गते सम्ममा मानिस द्वारा खबर आउन थाल्यो। माघ १२ गते ( अर्थात् भूकम्प गएको १० दिन पछि ) मात्र श्री ३ कहाँबाट बडापत्र आयो। सो खबर भोलिपल्ट जङ्गी निजामती अफिसरहरू जम्मा गरी श्री चीफबाट पढी सुनाइबक्स्यो। सवारीबाट पठाइबक्सेको हजुरिया क.इन्द्रबहादूर १० गते वीरगञ्ज आइपुगेकोले उसबाट सवारी र बीच बाटाको पूरा हाल-खबर थाहा पाइयो। वीरगञ्जबाट मानिस द्वारा पठाएको यहाँको पहिला खबर श्री ३ कहाँ माघ ६ गते मात्र पुगेछ। त्यस बखत पश्चिम

सिमाना महाकाली मा सवारी थियो । माघ १५ गते बाद क्रमै सँग साबीकको जस्तो हिन्दुस्थानबाट चिठी तारको आवत–जावत हुन थाल्यो; राज्यका ठाढा–ठाढा जग्गा-हरूबाट पनि हुलाक द्वारा खबर आउन लाग्यो ।

भूकम्पले सडकहरूमा चिरा—चिरा पर्न गयो । भादगाउँ, साँखु, चापागाउँ, गोदावरी तिर मोटर चल्न नशक्ने भयो । तर मुख्य-मुख्य पूलहरूमा थोरै मात्र नोक्सान भएकोले भादगाउँ र साँखुको सडकमा माघ ६ र ९ गते तिर देखिन् मोटर चल्ने भयो । भीमफेदी-वीरगञ्जको बाटोमा केही नोक्सान नभएकोले मोटर चल्न बन्द भएन । अरु पहाडको बाटो खालि मानिस वा घोडा मात्र चल्ने भएकोले ठाउँ-ठाउँमा पैरो गएता पनि आवत–जावत र हुलाकलाई विशेष बाधा पर्न गएन । राजधानी र शहर भित्रका सडकहरू, भत्केका घरको थुप्रो र राशले पुरिएका थिए । सो सफा गर्ने काम पछि भर्ती-बाट भयो । काठमाडौं र पाटन भित्र ३०–३५ दिन पछि र भादगाउँमा करीब ५०–६० दिन पछि मोटर बग्गि चल्ने भयो । बिजुलीको मुख्य घर केही नभएकोले माघ ७

गते काठमाडौंका कोही-कोही सडकमा बिजुलीबत्ति आयो। त्यसको २–३ दिनबाद देखि नै शहर बाहिरका घर र दरवारहरूमा बिजुली–अड्डाका मानिसले जाँची बिजुली-बत्ति बाल्नाको निमित्त हेरी-हेरी करेण्ट छाडिदिए। टुंडिखेलमा रहेका अस्पताल र पसलमा पनि माघ १२ गते सम्ममा बिजुली जडियो। तर शहर भित्र भने १॥ महिना पछिदेखिन् मात्र साबीक बमोजीम भयो।

स्वयं–सेवकदलहरूबाट पनि राम्रो सेवा र उद्धार भयो। दाम, अन्न उठाई गरीबलाई बाँडिदिने, घाइतेको औषधिगर्ने इत्यादि अनेक किसिमको सेवा भयो। भूकम्प-सेवक ( रीलिफ वर्कर्स ), महाराजा सर्भेण्ट सोसाइटि, जुद्ध-सेवा सम्मेलन-यी तीन दल थिए। तिनीहरूमा नेपाली, विदेशी दुवै थरि थिए ता पनि वर्ता नेपाली नै थिए। यस्तो विषयमा स्वयं-सेवकको सेवा पहिलो हो ता पनि तिनीहरूबाट खूब राम्रो सेवा र काम भयो। पछि श्री ३ बाट पनि तिनीहरूको कामको निमित्त धन्यवाद प्रकट गरिबक्सियो।

भूकम्पको पहिला झोकाको समय अद्भुतको थियो–

हरेक मिनेट डरलाग्दो थियो। दुःखीको उद्धार होस् भन्नाको लागि जे परिश्राए पनि खुशी साथ मेहनत गर्ने बखत थियो। परस्परमा मद्दत गर्नाको फायदा र दरकार पनि त्यसै बखत देखियो। कोही-कोही जर्नेल, अफिसर, सज्जन र सिपाहीहरूको मेहनत प्रशंसा लायकको थियो; तर हरेकको बहादूरी विषयमा भिन्न-भिन्न गरी लेख्नालाई यो सानो लेखमा ठाउँ नभएकोले नलेखेकोहुँ। मौका अनुसारको परिश्रमबाट दुनियाँको मनमा भरोसा र भक्ति बढ्न गयो। त्यस बखत अफिसर तथा फौज, सिपाही-हरूको एउटा ठूलो जाँचको समय थियो। श्री पशुपति-नाथको कृपाले सो जाँचबाट राम्रै सँग उत्रे।

## ( ग ) श्री ३ महाराजको फिर्ती सवारी

श्री ३ महाराजको सवारी त्यस बखत पश्चिम महा-कालीमा थियो भन्ने कुरा अघि लेखिसकेको छु। त्यहाँ पर्न गएको असर यहाँ लेख्न प्रसंग-विरुद्ध परोइन। तपसीलको बयान त्यहाँ गएकाहरूको बयानबाट चुनेर लेखेको हुँ:--

"माघ २ गतेको केही दिन अगाडि देखिनै शिकारमा खडेरि पर्न थाल्यो। पौष ३० गते खालि पऱ्यो, माघे

संक्रान्तिमा पनि दुइ मुजूर मात्र मरे । माघ २ गते ( उही भूईंचालो गएको समय ) सवारी शिकारमा थियो। हात्तीमा सवार गरेकाहरूले धक्का अलिकति पनि थाहा पाउन शकेनन् । क्याम्पमा बस्नेहरूले भूईंचालोको पूरा चाल अनुभव गरे ता पनि उतातिर यहाँ गएको जस्तो ठूलो नगएकोले घरतिरको सोध-पूछलाई श्री ३ महाराजबाट तार त पठाइबक्सियो, तर यत्रो दुर्घटनाको धेरैलाई सपना पनि थिएन । १—२ दिन पछि बिहारतिरको कुसमाचार आउन लाग्यो । अनि नेपालको पनि अनिश्चित दशाको सपना देखिन लाग्यो, आकाशको अनुहारै नराम्रो सुझ्न लाग्यो । माघ ६ गतेको साँझतिर पहिला तार तथा खबर पुग्यो ।

माघ ७ गते श्रीपञ्चमीको दिन श्री ३ महाराजबाट "हाम्रो उहाँ ठूलो भूईंचालो गएछ । धन जनको धेरै नोक्सान भएछ····न हडबडाऊ, रेल पनि बिग्रेकोछ····म त छोटकरी हिसाबले चाँडै उहाँ पुग्न शक्तथें, तर मेरो सवारी साथ आएका सबलाई छुटछुटिएको मनमा पछि छोडेर आफू मात्र अगाडि जान चाहन्न····वहाँ पुगेपछि जो चाहिंदो

बन्दोबस्त गर्नेछु''''धन्दा न मान" भनी फौजलाई हुकूम भयो।

माघ ९ गते काली-तटको ढकनाबाधमा मण्डप खडा गरी विधिपूर्वकको १००० गाई दान भयो, जुन पुण्य भूईं-चालोमा मरेकाको उद्धारलाई बक्सेको कुरा श्री ३ महाराज-बाट बक्सेको वक्तृतामा परेको यस पुस्तकमा लेखिएकै छ।

मुग्लान पट्टि रेल पूल भत्केकोले केही दिनसम्म श्री ३ महाराजको सवारी महाकाली मै रोकियो। रेल्वे-कम्पनीहरूले सवारी चाँडै फिर्न शकोस् भन्नाको लागि बाटो मर्मत गर्ने काममा र इस्पेसल रेल पुऱ्याइदिने काममा खूब दिल दिएका थिए ता पनि जोड्दा-जोड्दै केही दिन लागेकोले माघ १५ गते मात्र त्यहाँबाट यस तर्फ सवारी रमाना हुन पायो। सवारीको बन्दोवस्त मिलाउने मेरा बुबा ज. ( हाल पू. क. ज. ) बबर शम्शेर ज. ब. रा. होइबक्सिन्थ्यो। सवारी फिरेको तपसीलको बयान गोर्खापत्रमा लेखिएको थियोः—

"माघ २ गतेका घटनाको खबर सवारी नयाँ मुलूकका बीचमा होइबक्सेको बखतमा पुगेछ। तुरन्त

सो ठाउँबाट मुलूकका सिमानामा सवारी भइबक्सिई यहाँ फिरिबक्सने कोशिश भएछ, तर बिहार–प्रान्तमा पनि यस भूईंचालाले ज्यादै बिगार गरेकोले रक्सौल-वीरगञ्जमा सवारी हुने बाटो बिलकुल बन्द भएको रहेछ। तसर्थ रेलको अर्कै बाटो सवारी भई नारायणी नदी पनि साधारण डुङ्गाबाट तरिबक्सिई कष्टको परवाह नराखी भिकनाठोरिमा हाम्रो मुलूक टेकिबक्सिएछ। बाटामा वीरगञ्जमा पनि सवारी भई मोटरबाट उत्रिबक्सी भत्केका ठाउँ एक-एक गरी नजर भई त्यहाँका साहू-महाजन, बासिन्दाहरूलाई आश्वासन प्रोत्साहन बक्सिएछ।”

सवारी वीरगञ्ज पुगेदेखि फोनबाट दिनै पिछे यहाँ कुरा हुन्थ्यो। पहाड, मधेश तर्फ दौडाहा जाँच गर्न गएका जर्नेल, कर्णेलहरूलाई “पीडितोद्धारको काम गर्न त्यहीं १।२ महिना बढ्ता बस्नू” भन्ने उर्दि पनि गयो। पल्टन, फौज साथ-साथमा लिई सवारी भएकोले माघ २२ गतेमा नेपाल राजधानीमा सवारी आइपुग्यो। दुनियाँ लगायत सबै सरकारी कामदारले वाहाँको खूब सत्कार गरे। सरासर टुंडिखेलको खरिको बोटमा सवारी भई वाहाँबाट तपसीलको स्पीच बक्स्योः—

"भाइ हो !

बडो अफशोसको कुरा छ कि मैले कस्तो नेपाल छोडेको थिएँ, अहिले कस्तो देख्नु पर्‍यो। के लाग्यो, दैवी विपत्तिलाई सहनै पर्दो रहेछ। उनको लीला अपार छ। यो भयानक भूकम्पले बिहार–प्रान्तमा पनि मोतिहारी, मुजफ्फरपुर, मुंगेर आदि धेरै शहर नाश हुन गए; बाटो पनि जताततै बिग्री रेल समेत बन्द हुन जाँदा आउन पनि ढीलो हुन गयो।

"यत्तिकै नभए पनि यस्तै विपत्ति ठीक शय वर्ष अगाडि नेपालले भोगेको थियो। उस बखतमा पनि हजारौं घर नाश हुन गई धेरै दिनसम्म साराले छाउनि र अरु यताउतिको मैदानमा बस्नु परेको थियो। त्यस बेलामा बिग्रेको शहर, बस्तिको जीर्णोद्धार गरी फेरि जस्ताको तस्तो गराए झैं अहिले हामी सबैले हिम्मत नहारी उत्साह बढाई भएको नोक्सान चाँडो मेट्ने उपायमा तन, मन, धन लगाउनु पर्दछ।

"हाम्रो यहाँ त कहिले काहीं मात्र ठूलो भूकम्प हुने हो, जापानमा बारम्बार गइरहन्छ ता पनि जति पल्ट

बिग्र्यो उतिपल्ट पुरानो शहरको जीर्णोद्धार गरिहाल्दछन्। त्यस्तै हामीले पनि उत्साह बढाई अगाडि बढ्नु पर्दछ, पछि हट्नु हुंदैन।

"अहिले यहाँ धेरै जसोले पालको, छप्पडको, मैदानको बास गरी निर्वाह गर्नु परिरहेको छ। क्या छोटा क्या बडा, प्रायः सबैको यही हाल छ! "ज्यूं-ज्यूं परे अवस्था त्यौं-त्यौं सहे शरीर।"

"यस अवस्थामा मैले गर्नु पर्ने गरिरहेकैछु। अब पनि गरी हुनेसम्म गर्नामा बाँकि राख्ने छैन। यस्तो विपत्तिको अवस्थामा पहिले गर्नुपर्ने खाने-पिउने, बस्ने ठाउँको प्रबन्ध मिलाउन पर्नेमा जस्तो हाम्रो आशय थियो, त्यस्तै कम्याण्डर-इन-चीफ, जङ्गी-लाठ, दक्षिण तर्फ लगायत भाइ, छोरा, भारादार, अफिसर-पगरी, जङ्गी, निजामती सबैले बखत अनुसार बन्दोबस्त मिलाई काम गरेको सुन्न पाउँदा हामीलाई सन्तोष लागेकोछ। यसमा तिमीहरू सबैलाई धन्यवाद छ।

"खेती-पातीमा एक जनाले अर्काको काम सगाउने मदत गर्ने चलन हाम्रा रैती दुनियाँमा चलिरहे भैं यो

दुर्घट अवस्थामा पनि सबैको हितको निमित्त परस्परको मदत र उपकारमा दिल झुकाउनु पर्दछ।

"धैर्य धारण गरी उत्साह बढाई, सहयोगमा लागी काम गरेको पक्षमा चाँडैनै दुःखको शमन नभई छोड्ने-छैन। साहू-महाजन, बेपारीले चीज वस्तुको भाउ नबढाई सर्वसाधारणलाई चाहिने दरकारी चीज पुऱ्याइदिने, ज्यामी, ज्यालादारी, सिकर्मी, डकर्मी, कालिगडहरूले ज्याला मजूरी नबढाई मेहनत र इमान्दारी साथ काम गरिदिने र बलियाले निर्धाको हेरचाह र हार-गुहार गरि-दिने इत्यादि यी सबै सहयोग पट्टिकै काम हुन्। ठस्सा भडकतिर नलागी एक जिउ भई सहयोगमा लाग्यौं भने यो दुर्घटनाको असर चाँडो मेटिन जाने मात्र होइन कि हाम्रो यो प्यारो जन्मभूमि नेपाल झन् उचो पदमा चढ्न जाने छ, अहिले कुरा भन्दा कामको बेला हो। अरुलाई परेको दुःख अफूलाई परे जत्ति कै संझी हामी सबैले काम पट्टि लाग्नु उचित छ।

"विपत्कालमा धैर्य धर्नु भन्दछन्, धैर्यगर, नहडब-डाऊ, एक चित्त भई काम गरेपछि परमेश्वरले हाम्रो मनो-वाञ्छा पुऱ्याइदिनु हुन्यैछ।

"दुर्घटनामा अकालमृत्यु भएका प्यारा ती प्रजाहरू-लाई संझदा मन झन् साह्रै रुन्छ। यस पालि महाकाली-का तीरमा मैले सहस्र गोदान गरेको पुण्य तिनीहरूलाई दिन्छु, त्यस धर्मको प्रभावले तिनीहरूको परत्र सुध्रियोस्।

"पश्चिम पट्टि त विशेष केही भएको खबर छैन। पूर्वतिर भने जोडसँग भूकम्प भएको हुनाले तिमी पूर्बिया जङ्गी निजामती दुवै थरि जागीरदारहरूलाई घरको धन्दा लागेको होला घरबिदामा कट्टी नहुने गरी १० दिन घर बस्न बिदा बक्सेको छु, यिनीहरू फर्केर आए पछि जरूरी भएका पश्चिम पट्टिकाले पनि बिदा पाउनेछौ।

"मैले पल्टन तर्फ ब्यारेक खडा गरेर सिपाहीहरूलाई सुबिस्ता गरुँला, मुलूकमा पनि बन्द-व्यापारहरू बढाई कलकारखानाहरूबाट पूरा तवरले यस मुलूकको उन्नति गरी तिमी दुनियाँहरूलाई सुख-सुबिस्ता दिलाउँला भन्ने ठूलो उमेद लिएको थिएँ; तर के गर्नु? हेर!

"मनसा चिन्तितं चान्यत् अन्यद्दै दैवचिन्तिम्"

"ईश्वरको यस्तै इच्छा रहेछ, मेरो इच्छा पूर्ण हुन पाएन किन भने अब त मैले यही बिग्रेको कुराको सुधार

गर्ने काममा तन, मन, धन र जन समेत लगाउनु पर्ने आवश्यक पर्न आएको हुनाले म त्यस कुरामा लागिरहेको छु । अब तिमीहरू सबैले त्यसै कुरामा आफूले गरी हुने कुरासम्मको सहायता गऱ्यौ भने यो बिग्रेका कुराको चाँडैनै सुधार हुन आउला भन्ने मैले ठूलो उमेद राखेकोछु ।"

अनि भूकम्पको बेलामा काम गर्नेहरूलाई आफ्नो धन्यवाद प्रकट गरिबक्स्यो । सवारी फिरेको भोलिपल्ट नै काठमाडौं र पाटन शहरहरू र बस्तिहरू नजर भयो । ३-४ दिन पछि-देखि धमाधम पीडितोद्धारको कामको लागि के गर्ने भनी छलफल शुरू भयो । बाटोमा फिर्दा आफैसँग ल्याइबक्सेको रग कम्बलहरू पनि राजधानी भित्रका गरीबहरूलाई बाँड्न लगाइबक्सियो । ठाउँ-ठाउँमा सवारी भई आफैबाट पनि दाम र रगहरू बाँडि-बक्सियो । तिनीहरूलाई सिधा बाँड्ने काम ( जुन भूकम्पको केही दिन पछि शुरू भएको थियो ) मा भाइ छोराहरूलाई समेत खटाई बाँड्न लगाइबक्सियो । भूकम्पको नोक्सानको उद्धार र पीडितहरूको सहायता कसरी गर्ने भन्ने छलफल चलि-रह्यो । सो साथ-साथै घर नभएकाहरूलाई छाउनि-

मा बस्नको लागि टहरो ( छाप्रो ) बन्न थाल्यो; अरु ठाउँमा पनि धेरैले बनाए। सो बने पछि टुंडिखेलका बासिन्दाहरू टुंडिखेलबाट एक-एक गरी क्रमै सँग गए। १५-१६ दिन पछि त खालि पसलहरू मात्र बाँकि रहे। तै पनि छाउनिमा बस्ने थोरै मात्र भए। धेरै जस्ता टहरा खालि नै रहे। खुलामा बस्न हाम्रा दुनियाँहरूमा रुचि हुनेले पनि घरबारको समेत हेर विचार गर्नु पर्ने हुनाले सकस सहेर पनि धेरैले बरु छिंडिमा भए ता पनि गुजरान गर्न तम्से। तर अफिसर, सिपाही लगायत धेरैनै पछिसम्म पनि भूकम्प–काजमा खटिएका थिए। सो काम अझ पनि चलिरहेकै छ। पाटन, भादगाउँको ब्रुगेडमा पनि सोही बमोजीम काम भयो। फाल्गुन १ गते शिवरात्रिको बढाइँ भयो; तर भत्केका घरहरूको यस्तो हालत थियो कि धेरै आवाजले पनि बर्ता भत्कन जाने देखिएकोले कम राउण्ड दिई साना-साना तोप र थोरै बन्दूकहरूबाट बढाइँ गर्ने काम भयो। त्यस पालिको शिवरात्रिलाई नेपाल आउन विदेशीहरूलाई मनाइ भएकोले भीड कम भयो। तिनीहरूलाई आउन दिएको भए

बस्ने ठाउँ दिन शकिन्नथ्यो, रोगहरू बढ्ने पनि सम्भव थियो। यस्तो मनाइ नभएको धेरै वर्ष भएको थियो ता पनि त्यस बखत आवश्यकनै थियो।

देश-देशावरका ठूला-ठूला सज्जनहरूबाट सहानु-भूतिको चिठी र तार आयो। अंग्रेज सरकार र विदेशी पीडितोद्धारकदलहरूले सहायता दिने इच्छा प्रकट गरे। परन्तु यी सबलाई धन्यवाद दिई "अहिले सहायताको दरकार छैन" भनी जबाफ गयो।※

गर्नुपर्ने कामको विचार र छलफल भए पछि "भूक-म्प-पीडितोद्धारक-संस्था" भन्ने एक अड्डा खुल्ने भयो। १९८० सालमा जापानमा गरे-झैं गरीब भोकालाई खुवाउने, सापटी दिने, घर बनाउने, अस्पताल र म्यूनिसिपलिटि तिर हेर्ने इत्यादि बेग्ला-बेग्लै विभाग खडा गरी हरेक विभा-गको जिम्मा मुख्य १-१ अफिसरलाई दिने भन्ने कुरा पनि चल्यो। तर यस्ता प्रबन्धको सट्टा राजधानी भित्र २ मुख्य र ११ साना डोरहरू खडा गरी हरेक डोर पिछे १।१ तालुकवाला रही सबै विभागको जिम्मा लिई काम गर्ने र

※ आठौं भागमा सब लेखिएकोछ।

त्यहाँ चाहिएको मदत प्रत्येक फाँटबाट लिने गरी राख्ने ठहरियो। खडा भएको भूकम्प-पीडितोद्धारक-संस्था द्वारा भूकम्प-सम्बन्धी गैन्ह पहाड मधेशको समेत निकासा दिने बन्दोबस्त गर्ने काम हुन लाग्यो।

यो संस्था र पीडितहरूको लागि "रीलिफ फण्ड" खोलिबक्सिन र आशा गरिरहेका दुनियाँलाई आफ्नो उदारहृदय थाहा दिइबक्सिन "फाल्गुन १८ गते खरिको बोटमा पल्टन, जङ्गी निजामती अफिसरहरू सबै जम्मा हुनू" भन्ने उर्दि भयो। भूकम्पको बखत स्वयं-सेवक भई काम गरेका मानिसहरूलाई पनि "त्यहाँ आउनू" भन्ने उर्दि भयो। यिनीहरू दुइ खण्डमा बाँडी अगाडि पट्टि राखिए। पहिला खण्डमा मैले जम्मा गरेका विद्यार्थी, माष्टर र अरु-हरू समेत गरी भूकम्प-सेवकहरू करीब ५० जना थिए। सो गठको मुख्य काम गर्ने हेडमाष्टर रूद्रराज पनि त्यहीं थिए। दोस्रो खण्डमा एकाउन्टेन्ट हनुमानप्रसाद कायस्थ-ले जम्मा गरेको 'महाराजा-सर्भेण्ट सोसाइटिका' र 'जुद्ध-सेवा-सम्मेलन' का मारवाडी र नेपाली साहू-महाजनहरू गरी जम्मा ४०-५० जना जति थिए।*

---

* सातौं भागमा लेखिएकोछ।

स्पीच खतम भए पछि यिनीहरूलाई अगाडि बोलाई आफ्नो धन्यवाद प्रकट गरिबक्सी "यिनीहरूको नाम लेखी राख्नू" भनी अऱ्हाइ पनि बक्सियो। यस्ता परोपकारी भूकम्प-सेवकहरूको कदर गरिबक्सनु श्री ३ महाराजको लागि स्वाभाविकै हो। पहिला फेरा जमेका यस्ता भूकम्प-सेवकहरूको कदरबाट दुनियाँमा दुःखीको उपकार र सेवा गर्न उत्साह र रुचि बढ्न जान्छ। सो बखतको स्पीच तल लेखिएको छ :—

"भाइ हो! भयङ्कर भूकम्पले हाम्रो मुलुकलाई ठूलो हानि गरायो। प्रजालाई सुख र मुलुकको उन्नति तिरका उपाय उद्योगमा हामी लागिरहिबक्सेको तिमीहरूलाई थाहै छ। बीचमा अकस्मात् यस्तो दैवी परिआयो। यसले गर्दा त्यो उन्नतिको उपाय-उद्योगलाई केही पछाडि धकेलेको छ ता पनि यो परिआएको आपत् टारी फेरि त्यो उपाय-उद्योगको बाटोमा चाँडै नै लाग्न शक्य हुन शकौंला भन्ने दृढ निश्चय मानिरहेकोछु।

"ग्रहका चालको असरले यस्तो सङ्कट परेको हो भन्ने यहाँ धेरैको मनमा विश्वास परेको छ। जोहोस्, मुलुक-

लाई यस्ता तरहको आपत् अकस्मात् आइपरेमा हाम्रो इच्छा आशय र आदर अनुसार भाइ, छोरा, भारादार, अफिसर, फौज, डाक्टर, माष्टर, इञ्जिनियर, ओभर्सियर, विद्यार्थीहरूबाट र साहू-महाजनहरूबाट पनि पहिले झट्टै हुनु पर्ने सहायताको काम राम्रो हिसाबसँग हुन जानु बहुतै सन्तोष-लायकको कुरो हो। आफूसमा सहानुभूति र राजभक्ति देखाई काम गर्ने ती सबैलाई धन्यवाद छ।

"आपत्कालमा आपत्कालको धर्म अनुसार हामीले चल्न पर्दछ। त्यस्तो बेलामा हाम्रा अफिसर, सिपाहीहरूले र स्वदेशी, विदेशीहरूले समेत भत्के बिग्रेका घर, परखालले थिचिएका र पुरिएकालाई खोदली, पत्ता लगाई, झिक्ने काम गर्दा जिउँदै फेला परेकालाई बचाई, पुनर्जीवन गराइदिई जीव-दानको पुण्य लुटेका र झिकी जाँचि हेर्दा मरेका ठहरिएका जतिको लाश पन्छाई सद्‌गत गराउने काम गरी तारीफ-लायकको काम गरेका छन्। त्यस्तो अवस्थामा मुर्दा-छूतको दोष लाग्ने होइन। आपत्कालको धर्मको कर्तव्य पालनाले पुण्य मिल्दछ, यसका अनेक दृष्टान्त इतिहास र धर्म-ग्रन्थमा पाइन्छन्। यस्तो ठूलो

दैवी परेको बेलामा त्यस्ता तरहसँग आपत्कालको कर्तव्य-पालन गर्नेहरूको कामको तारीफ म यहाँ खुशी साथ गर्दछु।

"अहिले तीन शहर र चार भञ्ज्याङ भित्रका गाउँ-गाउँमा समेत दश फाँट गरी ठाउँ-ठाउँको हेरविचार र बन्दोबस्तलाई पनि खटाइराखि बक्सेको छ। पहाड तिर पूर्व पट्टि गौंडा इलाकाहरूमा पनि हेरविचार र चाहिने बन्दोवस्त गर्नालाई जिल्ला-जिल्लाका अफिसरहरूलाई खटाई, अरु हाम्रा भाइ, छोरा अफिसरलाई पनि पठाइ-बक्सेको छ।

"यो आपत्ति आफू एक दुइ जनालाई परेको जस्तो ख्याल कसैले लिन हुँदैन। देशैलाई परेको संझनु पर्दछ। बेकामको फजूल कुरा बकबक गर्ने बेला यो होइन। ठूला साना सबैले आफ्ना-आफ्ना शक्य अनुसार काम गरी मातृ-भूमिको दुःख मोचन गर्ने मौका छ। हरएकले आफूसमा बन्धुभावको समझ मनमा लिई परस्पर सहायता गर्ने गर्नु पर्दछ। ठूला साना सबैबाट हुँदै रहने छ भन्ने आशा भरोसा मानेकोछु।

"हाम्रो यहाँ मात्रै भूकम्पबाट आपत्ति पर्न आएको होइन। बिहार-प्रान्तमा र हालसालै चीन, अमेरिका तिर पनि यस्तै किसिमको दैवी धन, जन, घरहरूको पनि ठूलो नोक्सान भइरहेको छ।

"नेपाल चार भञ्ज्याङ भित्र र पहाड मधेश तर्फ पनि पालेको जङ्गल खुला गरी दिइबक्सेकाले बनेका कटेरा, छाप्राहरूमा र टिनका शेडमा सरकारी पालमा पनि धेरै जसोले अहिले निर्वाह गुजारा चलाइआएका छन्। यसरी विपत्तिको पहिलो अवस्था धेरै समालिएर आएको छ ता पनि पछिको अवस्थाको ख्याल राखेर सबैले काम गर्दै जानु पर्दछ। घर धेरै बिग्रेका छन्, बनाउनु पर्दछ।

"हाम्रा देशका बासिन्दाहरू परिश्रमी, उत्साही र मेहनत गरेर जीविका गर्ने जाति हुन् भन्ने प्रसिद्धै छ। तिनीहरूले आफ्नो व्यवहारको काम हुने सम्म आफैले गर्ने गरी आएको देखिएकै छ। पहाडियाहरूले र यहीं-काले पनि धेरै जसोले सानो-तिनो घर बनाउनु परेमा आफ-आफैले ढुङ्गा इत्यादिको गारो लाउने, चाहिने काठ, खाँबा, दलिन, मुसि इत्यादि तयार गर्ने र आफ्नै

जहान बच्चाहरूले पनि ज्यामी समान भई काम गर्ने गरेको र यस्तै यहाँ पनि डकर्मीको साथ-साथै मिली डोले, ज्यामी र अरूहरूले पनि डकर्मीको काम गरेको देखिएकै छ। तिनीहरूले पनि आफू-आफूले जानेको कामबाट अरूलाई मदत दिने; आफू, आफ्ना जहान, इष्टमित्रहरूले पनि शकेसम्मको काम काज गरिदिने गरे भने चाँडैनै सबैको घरबास तयार हुने र २-४ पैसाको बचाउ पनि हुन्यै छ। यो इलम यही जातले गर्नु पर्दछ भन्ने नियम केही छैन, सबै किसिमको इलम जसलाई पनि बखतमा काम लाग्दछ। "बाऱ्ह हजार तेली, बाऱ्ह हजार धोबी, बाऱ्ह हजार नाऊ" भन्ने गोरखालीको उखानै छ। के यो जातिलाई लिएर भनेको हो र? सबैले सबै काम जानेका र गर्ने गरिआएको छ भनेरै यो भनेको हो। यस्तै "घर-घरका डकर्मी" भन्ने अर्को उखान खडा गराउन पाए के देशलाई यस बखतमा असल होइन? अघिपछि पनि कसैलाई विशेष ईँट चाहिने भएमा आफ्ना तर्फबाट अबाल पोलाई वा पोलिएको अबालबाट खरीद गरी, ल्याई काम चलाउने पनि गर्ने गरेकै न

हो। यस्तै अहिले पोलिरहेका अबालको भरमा मात्र नपरी अरु–अरुले पनि नयाँ–नयाँ अबाल खडा गरी गराई पोलाउने गरे भने चाहिने ईंट धेरै नै तयार हुन शक्ने हुनेछ। काठ ल्याउनेहरूले पनि ठाउँ–ठाउँ जङ्गल-बाट घर बनाउने काठहरू अघि ल्याउने गरे भन्दा पनि बढाई, ल्याई बजारमा उतारिदिने र व्यापारीहरूले पनि घर बनाउन चाहिने काठ र टिन, किला काँटा इत्यादि अरु सामानहरू समेत प्रशस्त ल्याउने, झिकाउने काममा जाँगर बढाएर सुपथ मोलमा दिने गरे भने व्यापारीहरू-लाई पनि २ पैसा फायदा हुने, लोकले पनि आफूलाई चाहिने माल सामानहरू भने जति सुपथ मोलमा पाउने भई दोहोरै भलाइ हुने कुरा छ। यसै गरी जस-जस-ले जुन–जुन काम द्वारा लोकलाई सहायता दिनु पर्ने हो सोही बमोजीम गरी तन–मन दिई सबैले मद्दत दिने गरी काम हुनु पर्दछ।

"पक्की घर तयार गर्नेहरूलाई सुबिस्ता र मद्दत होस् भन्नाका लागि ठाउँ–ठाउँमा लाखौं ईंट र चुन पोलाउने, किसिम–किसिम नापका दलिन, थामहरू तयार गराउने,

तीन लाख रुपियाँको टिन–पाता जस्ता-पाता झिकाउने आदर गरिबक्सेकोले सुपथ मोलमा पाउने भै आफ्नै बलले उठ्नलाई पनि केही न केही त्यसबाट मदत हुन्यै छ।

"सबैलाई एकै पल्ट पर्न आएकोले सारालाई चाहिने माल सामान र कामदार कालिगढहरू भने जति पुग्न पनि नशक्ने हुनाले अहिलेलाई धेरै तलाका ठूला–ठूला घर तयार गर्ने पट्टि नलागी आफ्ना निर्वाह लायक तला घटाई साना घर, कटेरा, छप्परहरू बनाउने र सजेर हुने घरहरू मर्मत गरी तयार गर्ने गरेमा वर्षा हुनु भन्दा पहिले नै बासको केही न केही प्रबन्ध हुन. जाला भन्ने लाग्दछ। अहिले जमीनको हालत जाँच्न झिकाएका भूगर्भ जान्ने विद्वान्ले पनि त्यत्रो ठूलो भूकम्पले चिरा-चिरा भएको जमीन क्रमैले बस्तै गई अझ राम्ररी मिलिसकेको छैन; त्यसैले बीच-बीचमा भूमिको कम्प र थरथराहट भैरहेको छ। ठूला अग्ला घरहरू खडा गर्नालाई केही दिन गमखाई वर्षा पछि बनाउनु बेस होला भन्ने राय प्रकट गरेका छन्। जापानीले भूमि-कम्पको बारंबार अनुभव गरी साना-साना तलाका, भूकम्पमा

अड्ने किसिमका, घर बनाउँदछन् भन्ने सुनिन्छ । हामीले पनि अब घर बनाउँदा त्यस तर्फ पनि ध्यान दिएर बनाउनालेनै कल्याण छ ।

"फेरि यो कुरा पनि म भन्द छु कि—यता उति परेका फुटे-टुटेका ईंट र भाँचिएका काठ र किलासको गारो जमीन तलाका निमित्त आफ्ना साँध-सँधियार, छर-छिमेकी सँग तेरो-मेरो भनी बाझ्ने-जुझ्ने, झगडा गर्ने, नालिस गर्ने मौका होइन । यस बखतमा त्यस्तो सानो-तिनो स्वार्थपट्टि लागी कर्तव्यपट्टि ध्यान लगाएनौ भने कसरी तिमीहरूको चाँडो स्थिति बस्ला ? वर्षा भन्दा अगाडि नै जहान-बचा कसरी थन्क्याउन शकौला ? त्यस्तै केही पर्न आएमा दुवै थरिको कुरा सुनी उन्निखेरै संझाई, बुझाई, मिलाइदिना निमित्त अफिसरहरू ठाउँ-ठाउँमा खटाई पठाएको छु । पछि चाहियो भने बढ्ता पनि खटाइदिने छु । तिनीहरूले परस्परमा खडबड पर्न आएको कुरामा जसरी हुन्छ मिलाइदिने छन्, त्यसमा तिमीहरूले चित्त बुझाउनु पर्दछ, नालिस सुनिने छैन ।

"शहर भित्र सन्धि-सर्पन परी वा सांगुरो भै अथवा

शहर भित्र बस्ने इच्छा नभई अन्तै बाहिर आधा रोपनि एक रोपनिसम्म जग्गा पाए म्यूनिसिपलिटिका रूल बमोजीम अर्कै शहर हुने गरी छुट्टा-छुट्टै घर बनाई बस्तो हुँ भन्ने कसैका इच्छा भए त्यस्ताले आफ्नो टोल, ठाउँ, नाउँ खुलाई सरकारमा दरखास्त दिइराख्नू ; त्यस्ता मानिस कहाँ कति हुने रहेछन्, तिनलाई बस्न माफिकको जग्गा भए नभएको समेत हेरी टाउन प्लानिङ तर्फ अर्थात् नयाँ काइदाको शहर बनाउने तर्फ विचार गरिबक्सने छौं ।

"यो दुर्घटनाले पीडित भएका, निराधार, दीन दुःखीहरूको उद्धार, सुधार, सहायताहरू गर्नाका उद्देश्यले "भूकम्प-पीडितोद्धारक-संस्था" खडागरी, त्यसमा "भूकम्प-पीडितोद्धारक-फण्ड" भन्ने नामको एउटा फण्ड खोलिबक्सेको छ । त्यसमा हामीबाट ३ लाख र बडा महारानीबाट १ लाख रुपियाँ राखिबक्सेको छ । यो ठूलो पुण्य-कार्यमा हामी पनि द्रव्य अर्पण गर्न चाहन्छौं भनी खूद आफ्नै इच्छाले श्रद्धा गरी अर्पण गर्न ल्याएको द्रव्य यो फण्डको संस्थाबाट यही सत्कार्यमा लगाइने छ । दिनेहरूको नाम पनि प्रकाशित हुने छ ।

"यो अवस्थामा प्राय: सबैको घर भत्की, बिग्री धेरै थोरै आर्थिक बोझ सबैलाई पर्न आएकै हुनाले आफ्नो-आफ्नो घर तयार गर्ने काममा आफू-आफूले खर्च गरी आफ्नै बलले आफू उठ्नु पनि फएडैमा राखे जस्तो संझि-बक्सने छौं।

तीन शहर राजधानी भित्रका घरहरू बनाउन मर्मत गर्न अहिले आफ्ना पासमा रहेको धनको साबगासले पुग्न नशकी मद्दत चाहनेहरूलाई जाँचबुझ गरी मद्दत दिनुपर्ने देखिएमा सरकारबाट घर जेथा धितो लेखाई लिई मना-सिब देखिएसम्मको रुपियाँ पटक-पटक गरी उपल्लो ४ वर्षसम्मलाई निर्व्याजी सापटी दिनालाई "भूकम्प-पीडित-सहाय-ऋण" का रूपमा अहिले ५० लाख रुपियाँ पनि हामीबाट परसारिबक्सेको छ। सो रुपियाँ सापट लिनेले लिएका मिति देखि ४ वर्षसम्ममा चुक्ति गरी सरकारमा बुझाइसक्नु पर्ने छ। म्यादभन्दा अगावै पटक-पटक गरी वा एकै मुष्ट बुझाउन ल्याएको पनि बुझिने छ।

"अघि ठीक एक शय वर्ष अगाडि १८९० सालमा नेपाल तीनै शहरमा यत्तिकै नभए पनि यस्तै ठूलो भूईं-

चाल्लो जाँदा घरहरू धेरै भत्के बिग्रेका थिए ता पनि सबै दुनियाँहरूले हरेस नखाई क्रमै सँग उद्योग गर्दै जाँदा आफ्नै मदतले ५।७ वर्ष भित्रमा फेरि शहर उस्तै पारेको कुरा इतिहासबाट देखिन्छ। अहिलेलाई माथि लेखिए बमोजीम हामीबाट गरेर हुनेसम्मको प्रबन्ध मिलाइबक्सेका छौं। यस्तोमा सबै कुरा सरकारले मात्र गरेर निर्वाह चल्न शक्ने होइन। सरकारले खूद आफैले बनाउनु पर्ने दरबार, अस्पताल, अड्डा इत्यादिलाई पनि लक्खौं रुपियाँ लग्नेछ भन्ने कुरा तिमीहरूले पनि देखेकै छौ। छोटा बडा सबैले धैर्य धारण गरी उत्साह बढाई जहाँसम्म शकिन्छ आफ्नो बल र पाएको मदतले अगाडि बढ्दै जानु पर्दछ। खेती-पातीमा परस्परमा गरेर सहायता दिए झैं घर-बासहरू बनाउने काममा पनि परस्पर सुख दुःखको साथी बनेर दया र प्रेम गरी ठस्सा, भडक तिर नलागी सबैले आफूसमा मिली-जुली काम गर्‍यौ भने चाँडैनै बासस्थान तयार भै शहर, गाउँहरू पहिले जस्तै गुलजार हुने छन्। व्यापारीले व्यापारबाट शरीरले मेहनत गरी जीविका गर्नेहरूले मेह-नतबाट धन कमाई आफ्नो जीविका निर्वाहका साथ घर-

बासको स्थिति र उन्नति समेत गराउने मौका आएको हुनाले आफ्नो-आफ्नो काममा अघिभन्दा जाँगर बढाई तत्पर हुँदै जानु पर्दछ। त्यसो गर्दै जानाले दुःखको अवस्था समालिँदै गई दिनपरदिन सुबिस्ता, सुधार, उन्नति पनि अवश्य हुँदै जानेछ भन्ने आशा लिएको छु।

"हाम्रो यहाँ राजधानीमा रहेका फौजका मानिस-हरूले र पुलिस, चप्रासीहरूले पनि त्यो सङ्कटको समयमा आफ्नो घर-बार, डेरा-डण्डा, जहान-बचाहरूको समेत ध्यान नराखी भोक, प्यास, नीद, सही पुरिएकालाई जिउँदै झिक्ने, मरिसकेकाको लाश उठाई सद्गत गराउने, पीडि-तहरूलाई सहायता गर्ने, कडा पालो-पहरा गरी धन-माल बचाइदिने इत्यादि आडर बमोजीमका काम तन-मन दिई बखतको कर्तव्य संझी रुजु रही गरेको देख्न सुन्न पाउनाले भित्रै देखि खुशी लागेको छ। त्यस्तो अवस्थामा रुजु रही ज-जसले यो काम गरेका छन् तिनी जमादार देखि सिपाही-सम्म र पुलिस, चप्रासीहरूलाई बाँडिदिनालाई एक लाख रुपियाँ हामीबाट बक्सेको छ। त्यसबाट भाग-शान्ति तिनीहरूलाई बाँडिने छ।"

अनि सारोले श्री ३ महाराजको जय पुकार गरे पछि फेरि श्री ३ महाराजबाट बक्सेको :—

"भाइ हो ! अहिले तिमीहरूले खुशी भई हौसला बढाई जय मनायौ, त्यसले हामीबाट बहुतै साधार मानिबक्स्यौं । जस्तो साधार लागेको छ उसै गरी तिमीहरू सबैले मिली-जुली, झै-झगडा, रीस-राग तिर नलागी ठूलाले सानालाई र साना-सानैमा पनि परस्परले परस्परमा सहायता दिई यो दुर्घटनाले नाशिन गएका यी शहरले फेरि राम्रो रूप धारण गरी तिमीहरूलाई सुविस्ता भएको चाँडै देख्न पाएँ भने सबै मिली मातृ-भूमिको उद्धार गर्ने तिमीहरूको पनि म भित्र दिलै देखि जय-जय पुकार गरी ईश्वरमा धन्यबाद टक्र्याउने छु ।"

सो स्पीच बाद संस्थाले काम गर्न शुरू गऱ्यो । यस संस्थामा श्री चीफ साहेब ( त्यस बखत लाठ साहेब ) पद्मशम्शेर जङ्ग र गुरुज्यू हेमराज तालुकवाला हुनु भयो । साबीकका अड्डा-अड्डाबाट बढ्ता मानिस त्यस अड्डाको काममा झिकिए । यिनीहरू बाहेक धेरै म्यादी कारिन्दा पनि भर्ना भए । माथि लेखिए बमोजीम तीन शहर राज-

धानी भित्र र गाउँ-गाउँमा समेत डोर-डोर बाँडी सहायता दिने काम शुरू भयो। चैत्र महिना देखि बकस बाँड्ने कामलाई अफिसरहरू र भाइ, छोरा, जर्नेल, कर्णेलहरू समेत खटिई काम शुरू भयो। वैशाख देखि सापटी दिने काम पनि शुरू भयो।*

१९९१ ज्येष्ठ महिनामा हुरि बतासले गर्दा छाप्रो र ओतमा बसेका बासिन्दाहरूलाई विशेष सङ्कष्ट पर्न गयो। घर बनाउने काम खासगरी वर्षा शुरू हुनु भन्दा अगाडि-का महिना अर्थात् चैत्र देखि आषाढ सम्ममा खूप चल्यो। ठाउँ-ठाउँमा घर भत्काउने काममा मानिसहरूको ज्यानको समेत खतरा पर्न गयो। अझसम्म पनि साना-साना कम्प हुँदैछन्। ज्येष्ठ १९ गतेको रातमा पनि एक बाजि राम्रोसँग थाहा पाइने गरी कम्प गयो। तर ठूलो कम्प पछि साना-साना कम्प केही समयसम्म गइरहनु प्रकृतिको चलन हो भन्ने मानिएको छ। जापानमा पनि त्यस्तै भए-थ्यो। आषाढ महिनामा वर्षाले गर्दा राम्रोसँग नछोपिए-

* संस्थाबाट राजधानी भित्र घर बनाउने कामको र अरु किसि-मका मद्दत दिने गरेका प्रबन्धहरूको बयान नवौं भागमा लेखिएको छ। पहाड र मधेशको लागि भएको सहायता विषय पनि त्यहीं लेखिएको छ।

का र मर्मत नभएका घरहरू ठाउँ-ठाउँमा भत्कनपनि गए। सो भत्केर १-२ ज्यानको खतरा समेत पर्न गयो। बनाउन लागेका घर पनि ठूलो पानीको जोड सहन नशकी कसै-कसैको भत्कन गयो।

अब यो दफा खतम गर्नु भन्दा अगाडि श्री ३ को ६० वर्ष प्रवेशको जन्मोत्सवको दिन (ज्येष्ठ १९, १९९१) श्री चीफबाट चढाइबक्सेको मानपत्र तल लेख्तछु। यसबाट भूकम्प भए देखि सो बखत सम्मका प्रबन्धहरूको छोटो बयान समेत राम्रोसँग बुझ्न शकिन्छ :—

"महाराज! भाइभारादार र दुनियाँको तर्फबाट 'आज हजुरको जन्म-दिनको शुभ उत्सवमा' गत वर्षमा देशका खातीर हजुरबाट गरिबक्सेको काम कुराको वर्णन गरी निगुता सहितको गुणानुवाद जाहेर गर्न इजाजत पाऊँ।

"सब भन्दा तारीफ लायकको कुरा भूकम्पले पारेको पीडाको उद्धार हुन आयो। माघ २ गतेको भीषण भूकम्प इतिहासमा चढिसक्यो। हजुरबाट जो बन्दोवस्त त्यसको पीडा हटाउन गरिबक्सियो सो पनि इतिहासमा अवश्य लेखिने छ। खबर सुन्ना साथ शिकार त्यागी, रेलकोबाटो

जम्मै खुलि नशक्तै, सवारी फिरी "भूकम्प-पीडितोद्धारक-संस्था" खोली, आफ्नो सवारी साथ बोकाई ल्याइबक्सेको वस्त्र, खर, टिन दुःखीलाई बाँडिबक्सियो। फेरि तुरुन्तै घर बनाउनालाई निर्व्याजी सापटी दिनालाई मोहरू पचास लाख परसारिबक्सी, दुःखीलाई बकस दिनाको लागि आफ्ना तर्फबाट तीन लाख र श्री ३ बड़ा महारानी मुमाज्यूका तर्फबाट एक लाख बक्सी, "भूकम्प–पीडितोद्धारक-फण्ड" खोलिबक्सियो । गरिबक्सेको बन्दोबस्तको पृथक-पृथक बयान छोटकरी हिसावले गरे पनि हजुरको अमूल्य बखत धेरै खेर जाने हुनाले २–४ कुरा सम्म जाहेर गर्छु ।

" भूकम्प–पीडितोद्धारक-संस्था " सदरमा खोली त्यसका हाँगाहरू ११, तीन शहरमा जाँच्ने ८ डोर र रुपियाँ दिने कोशालय समेत जम्मा २२ अड्डा खडा गरिबक्सी भाइ-छोराहरूलाई समेत सो काममा लगाइबक्सेको छ ।

"तराइबाट खर, डाँडा, भाटा, बाँस मगाई टहरा बनाई दुनियाँलाई वस्न र आफै बनाउँदछु भन्ने दरकार भएकालाई बेदाममा सो माल र मकै नपाकुञ्ज्याल अन्न समेत बक्सियो। वन्द भएका जङ्गलहरूपनि खोलिबक्सियो।

"मद्दतका लागि सरकारिया गोदामबाट परल मोलमा काठ खोलाई, ठेकदार खडा गरी, हुनेसम्म किफायत दरमा दलिन र ४० लाख ईंट, भन्सार र रोप महसूलमा नोक्सान सही अढाइ लाखको कर्कट-पाता दरकार भएका किन्नेलाई सजिलो र किफायतहुने बन्दो-बस्त गरी, देशबाट थप अवाले, डकर्मी, सिकर्मीहरू पनि झिकाई, सरकारिया काममा र भाइभारादारका घरमा काम लगाउन लगाइ बक्सेको हुनाले शहरका र पहाडिया डकर्मी, सिकर्मीहरूलाई गरीब दुनियाँले काम लगाउन पाए।

"शहर, गाउँको ईंट, माटो पन्छ्याउने कामलाई डेढ लाख रुपियाँ परसारी तीन हजार जति भर्ती भर्ना गरिब-क्सेको छ।

"जतातत‍ै डाक्टर, वैद्य, कम्पाउण्डरहरू खटाई घाइते, रोगीको औषधि गराई रोग नउठ्ने उपाय गराइबक्सेको छ।

"जिल्ला-जिल्लाका हाकीमहरूलाई तुरून्त रुपियाँको मद्दत पठाई बिउ नहुनेहरूलाई बिउ बाँड्ने बन्दोबस्त गरिबक्सेको छ।

"पहाड तर्फ पैन्होमा पर्नेहरूलाई बालि माफ गरी प्रत्येक घरवालालाई २५-५० रुपियाँको दरले बकस बक्सियो ।*

"भूकम्पले ज्यादा बरबाद भएका पश्चिम १ नम्बर देखि पूर्व इलामसम्म र चार भञ्ज्याङ भित्रमा घर हुने निजामती, जङ्गी जागीरदारहरूलाई ४ महिनाको तलब पेस्कि बक्सियो ।

"भूकम्प हुँदा हजुरही हुकूमको श्रद्धा गरी परिआएको जस्तोसुकै काम पनि तन मन दिई गर्ने पल्टन, पुलिस र चपरासीलाई लाख रुपियाँ इनाम बाँडिबक्सियो ।

"जाने गै—गए भनी तिनीहरूको समेत माया नमारि उनीहरू तरून् भनी महाकालीको किनारमा गरिबक्सेको सहस्र—गोदानको पुण्य अकालमा पर्ने हजुरका प्यारा रैतीलाई अर्पण गरिबक्सियो ।

"पछि—परन्तुसम्म दयाको दृष्टि पुऱ्याई भूगर्भ-विद्या जान्ने जियोलजिष्ट र इञ्जिनियर मगाई तिनीहरूले दिएको सल्लाह प्रकट गराउन लागिबक्सेको छ ।

---

* पूर्व ३ नं० र ४ नं० मा ।

"मुलूकको हित र उन्नतिको खातीर कैयौं बन्दोवस्त गर्न लागिबक्सेको वखत यो भूकम्प आई ती कुराहरू केही टायमलाई थन्क्याउनु परेता पनि हिकमत नहारी देश-विदेशमा जो काम गरिबक्सेकोछ, त्यसको पनि संक्षेप वर्णन गर्दछु ।

"मुलूकको सुधार होओस् भनी ८४ सालसम्मको अड्डा–अड्डामा जम्मा भएको रु. ८५ लाख जति बक्यौता माफ गरिबक्सियो ।

"नयाँ बिजुलीको ५ लाखको काम, झापासम्मको टेलिफोनको २ लाखको काम हुन लागि रहेको छ । भूकम्पले कामनरोकिएको भए, गएको चैत्रमा लाइन खुल्ने थियो । फेरि सदरमा काम छिटो चलोस् भनी अड्डा-अड्डा र तैनाथवालाका घरसित दरबारको टेलिफोन जोरिबक्सियो । पोष्टआफिसको उन्नतिमा पनि लागिबक्सेको छ ।

"विद्यार्थीहरूको प्रोत्साहलाई तक्मा बाँडी संस्कृत कालेज खोल्ने इन्तजाम र राणाजीहरूको बास, काम र खाने उपाय पट्टि राम्रो दृष्टि बक्सी उद्धार गरिबक्सियो ।

"डेढ लाखको मद्दत बक्सी "नेपाल ट्रेडिङ कम्पनि" यहाँ र कलकत्तामा खोलाइबक्सियो। दुनियाँलाई सुबिस्ता होस् भनी पेट्रोल, सलाईको ठेकाको नाफा त्यागी व्यापारको उन्नति तर्फ पट्टि पनि ध्यान बक्सिएको छ।

"देशमा मात्रै होइन बिदेश पट्टि पनि हजुरको यस कीर्ति फैली त्यता पट्टि पनि मुलूकको रोब-रवाफ जमाईबक्सेको मरुन्यातै छ।

"बेलायतमा राजदूत राखी परस्पर दूतलाई मिनिष्टर कहलाइबक्सियो। फ्रान्स सरकारबाट ग्राँहद्रु न्का द्रु ला लेजिञो द्रु अनेयर्, इटालिबाट जी. सी. सान्ति. मरिजीओ ए लाज्जारो, अंग्रेज सरकारबाट जी. सी. आई. ई; अनरेरी लेफटेन्याण्ट जनरल बृटिश आर्मि, अनरेरी कर्णेल अफ् अल् दि गोरखा राइफल रेजिमेण्टस इण्डियान आर्मि, टक्र्याइसके। चीन सरकारबाट पावटिंगको पहिला दर्जाको तक्मा र जङ्गी तर्फको उपल्लो दर्जा लिई राजदूतहरू रवाना भएका छन्।

"ओजस्विराजन्यको तक्मा खडा गरी बेलायत र इटालिका बादशाहहरूबाट सो नेपाली खिताप कबूल भयो।

"यहाँका भाइभारादार विदेश जाँदा हुने कदर र लिगेशनसितको रेवाजमा पनि टएटा हटाई इज्जत बढाइबक्सियो ।

"यो राज्य एक्लो स्वतन्त्र हिन्दुराष्ट्र हो । धर्म मुख्य यसको ध्वजा हो । धर्म-विरुद्ध जम्न आएको परिस्थिति हटाई जो स्थिति शान्ति पूर्वक बाँधिबक्सियो, त्यसको महत्वको हामी हजुरको दया-पात्रहरूले कहाँतक बयान गरौँ; विदेशमा छापिएका छापाहरूले पनि प्रशंसा गरेका छन् । हामी खालि यति अर्ज गर्दछौं कि हजुरको साक्षात् धर्म-मूर्ति रहेछ । अब हजुरबाट धर्मावतारको पदवी कबूल गरी हामीहरूलाई कृतज्ञ तुल्याई बक्सियोस्, महाराज जो हुकूम ।

"ईश्वरको कृपाले हजुरको दीर्घायु भई यस मुलुकको बेहत्तरी हुँदै जाने छ भन्ने हामीले सन्तोष लिएका छौं । ६० वर्षको उमेरमा पनि दौड-धूप गरी घोडा चढ्नमा कोही भन्दा कम होइबक्सिन्न । सरकारको आरोग्य र दीर्घायुले नै हामीहरूको परम कल्याण छ, महाराज जो हुकूम ।"

# मोफसलमा भूकम्प र तत्कालको मद्दत

## ( १ ) पहाड

पहाड तर्फ पश्चिममा १ नं. सम्म र पूर्वमा सिमानै-सम्म कम्पको जोड पर्न गयो। उत्तर पहाड पनि बच्न गएन। पश्चिम तिर २–३ नं. सम्म पनि केही नोक्सान पर्न गयो, परन्तु त्यस भन्दा पश्चिम तर्फ मामुली किसिमको कम्प मात्रै गयो। विशेष पूर्व ३ नं., ४ नं., भोजपुर र उदयपुर गढीमा धन-माल लगायत धेरै ज्यानको नोक्सान हुन गयो। अरु ठाउँमा भन्दा पैन्हो पनि बढ्ता त्यहीं गयो। पहाड तर्फ सो बखत वनमा गाई वस्तु चराइरहने वा घाँस, दाउरा जम्मा गरिरहने समय भएकोले पैन्होबाट पनि कसैको मृत्यु हुनगयो। फेरि, पैन्हो गएर ठाउँ-ठाउँ-का साना-साना खोलाहरू पुरिन गएकाले पानीको दुःख पनि हुन गयो। माथि लेखिएका चार इलाका तिर बढ्तै जोडले भूकम्प भएको बुझिन्छ। त्यस तर्फ पहाड र जङ्गल-

हरूको साह्रै नराम्रो हालत भएथ्यो; भूकम्प गएको २-३ महिना पछि पनि बराबर पैह्रो जाने हुन्थ्यो। कहीं-कहीं त यस्तो बिघ्न खलबलिएको थियो कि मानिस हिंड्दा पनि पैह्रो जान्थ्यो भन्ने खबर थियो। पूर्व पहाड पट्टि जम्मा १२४९३२ घर र ३९७४ ज्यानको र पश्चिम पट्टि ४३३९ घर र ६५ ज्यानको नोक्सान भयो। पूर्व पहाड पट्टि गएको भूकम्पको अंजाम सो बखत दौडाहा गर्न गएका एक उच्च अफिसरको बयानबाट लिन शकिन्छ :—

"भोजपुर ( पूर्व ४ नं. )

"१९९० साल माघ २ गते रोज २ को दिन दिउसोको २ बजी १० मिनेट जाँदा अन्दाजी ७-८ मिनेटसम्म भयानक सँग भूकम्प भयो। सो भूकम्प हुँदा जमीनहरू बराबर चिरिंदै जोडिने र ठूला-ठूला पहाडहरूमा बेहिसाब-सँग पैह्रो गई चारै तर्फ धूलो बेहिसाब सँग उडी २०।२५ मिनेटसम्म त केही पनि देखिएन। जब धूलो हराई चारै तर्फ देखिन थाल्यो त, पहिले हराभरा भैरहेको पहाडहरू सब सेतो र फुस्रो भैरहेको र भोजपुर बजार सबै पाताल भई मानिसहरू कोलाहलसँग रोइ-कराइरहेको मात्र सुनियो।

सो दिन बेलुकाको परेठ थियो। सिपाहीहरू टुंडिखेलमा मौजुद हुनाले सबभन्दा पहिलो काम सबै सिपाहीहरूलाई ल्याई बजारमा पुरिएर मरेका लाश र जीउँदै पुरिएका मानिसहरू भिक्र शुरु गर्‍याँ। अड्डाखानाहरू र २ सौँचा तहवील, भ्यालखानाहरू जम्मै पाताल भएको हुनाले सो सबै ठाउँमा पालो पहरा कडा हिसाबसँग राखी कैदीहरू भाग्न नपाउने सबै बन्दोवस्त भयो सो दिन बजारबाट मरेको लाश झिकेको ६ र जीउँदै पुरिइरहेका झिकेको ४ घाइतेलाई डिस्पेन्सरिबाट हुन शक्नेसम्मको औषधि गराए। सोही बेलुका सबै हाल खबर मुलूकी अड्डा मार्फत जरूरी डाँकबाट जाहेर पनि गरे।

"भोलि पल्ट देखि सबै इलाका भर कति–कति नोक्सान परेको र मानिस कति मरे भनी अफिसर, सिपाही-हरूको डोर पनि लगत गर्न खटिई गए। माघ ११ गते नेपालबाट सब भन्दा पहिले मद्दतको निंति "यो भूकम्प-मा परी अनाज, धनमालहरू भिक्र नशक्ने गरीबहरूलाई गाउँ-घरमा चलेको भाउबाट, राज-भकारि, धर्म-भकारि-बाट अनाज पछि असूल हुने गरी सापटी दिनू" भन्ने एक-

छापे बडापत्र आएकोले सोही बमोजीम काम तामेल भयो। त्यहाँ पछि माघ २७ गते खान नपाउने गरीबहरूलाई बाँड्न भनी मोरु. ५०० र अड्डाखाना मर्मत गर्न भनी मोरु. १५०० सम्म निकासा भै आएको हुनाले सोही बमोजीम काम तामेल भयो। त्यहाँ पछि फेरि फाल्गुन ३ गते "भूकम्पले दुनियाँहरूलाई पीर, बाधा परेको हुनाले अड्डाखानाबाट भएको दण्ड जरिबाना हाल असूल पक्राउ गर्नु पर्दैन, सोही बमोजीम उर्दि, पुर्जि गरिदिनू" भन्ने बडापत्र भै आएकोले सोही बमोजीम काम पनि तामेल भयो।"

यो बयान बाहेक अरू पनि इलाका-इलाकाबाट आएका भूकम्प विषयका खबरहरू मध्ये कुनै-कुनै ठाउँका खबरहरू दृष्टान्तको लागि यहाँ लेख्त छु:—

# पूर्व पहाड

## १.—पूर्व १ नं. कोडारि-चौकि

"माघ २ गते अन्दाजी २ बजेको टायममा भूईंचालो गई सरकारी कोत, गोदाम, बारूदखाना, छाउनि, खलङ्गा समेत भत्के बिग्रेकोछ दुनियाँको घर पनि चर्की, फुटी, साबूत नभएको, ६।७ जना मानिस पनि नोक्सान भएको, तर

यति घर मानिस नोक्सान भयो भन्ने यकीन भएको छैन। मानिसहरू बारिमा बसेका छन् ।"

## २—पूर्व २ नम्बर

"आज माघ २ गतेका दिन भूईंचालो गई सरकारिया गोदाम, ३ साँचा, २ साँचा, सीलखाना, गोश्वारा, हुलाक-घर, जागीरदार बस्ने घर, छाउनि, धर्म-भकारि समेत जम्मै र दुनियाँदारहरूको घर समेत भत्की कहीं-कहीं मानिस समेत परेको हुंदा ३।२ साँचामा डबल पालो पहरा राखिएको छ ।"

## ३—पूर्व ३ नम्बर

"आज माघ २ गते भूकम्प भै सरकारी र दुनियाँ-दारका घरहरू समेत बिग्रेकोले, सरकारी नगदी, जिनिस टुंडिखेलमा बार बारी जङ्गी र अदालतका जवान समेतको पालो पहरा राखिएको छ। यहाँ धर्म-भकारि, गारत, गोदाम समेत पाताल भयो। गाउँ मौजाका घरहरू सबै भत्के। मानिस पनि पुरिई मरेको खबर आएको छ ।"

## ४—पूर्व ४ नम्बर

"माघ २ गते भूकम्प भै यहाँ मूल छोटी सरकारी कचहरी घर, धर्म-भकारि, सीलखानाहरू लगायत सबै

भत्के चर्केको र दुनियाँको पनि गाउँ-गाउँमा धेरै घर लडी पाताल भए। पँधेरा, कूवा, झारहरूमा मूल फूटी पानी बग्यो। ३ गते रात तक उत्तर खण्डमा बखत-बखत ठूलो आवाज आइरहने भै दुनियाँ हा-हाकारमा छन्।"

## ५—धनकुटा

"भूइँचालोले पूर्व ४ नं० भोजपुर र पूर्व ६ नं० अदालतमा समेत धेरै नोक्सान भयो। धरानको धर्म-भकारि पनि बिग्र्यो। धेरै मानिसको नोक्सान भयो। ठाउँ-ठाउँमा जमीन फाटी, पैह्रो गई, मूल फूटी, नदी-नाला बढे। सरकारी घरहरूमा बारूदखाना एकमा मात्र कम नोक्सान भयो।"

## ६—पूर्व ६ नम्बर, चैनपुर

"माघ २ गते आज करीब २ बजेका टायममा अकस्मात् ठूलो भूकम्प भयो। त्यस दुर्घटनाले गर्दा पाटि, पौवा, देव-मन्दिर, घरहरू भत्के; हुलाक बस्ने घर, अदालत अड्डा-घर पनि भत्के। भयालखानाको छाना भत्की खसेका झिंगटिले लागी कैदीहरू धेरै जना घाइते भए।"

## ७—इलाम

"माघ २ गते भूकम्प भै अड्डाखाना, सरकारिया घर,

दुनियाँदारका घरहरू समेत कोही लडी, कोही चर्केकोले जागीरदार र अरु रैती समेत छाप्रो कटेरा बनाई बाहिर बसेका छन्। दार्जिलिङ तर्फ धेरै नोक्सान भयो भन्ने हल्ला छ।"

## ८—सिंधुलिगढि ( पूर्व )

"भूकम्पले गर्दा जिल्लामा ढुङ्गाको गाऱ्हो भए जति घर नोक्सान भए। मानिस मरेको यकीन भएको छैन। सरकारिया घर पनि कुनै भत्के कुनै लच्केका छन्। हाकिम बस्ने घरले किची लेफटेनकी छोरी १ घाइते भई छोरो १ मऱ्यो।"

# पश्चिम पहाड

## १—पश्चिम १ नम्बर

"नुवाकोट भैरवनाथको देवल चारैतिर चर्की माथिको तला केही ढल्केको छ। श्री भैरवीको सत्तल हाल मालअड्डा बस्ने गरेको उत्तर तर्फ भत्की दुवैतिर छाना भासिएको भै बस्न नहुने भएको छ। बूढी देवीको देवल पनि केही ढल्केको छ। ७ तले घरको माथिल्लो एक तला खसी २।३ तलामा ठाउँ-ठाउँ चिरा पर्न गयो।"

## २—गोरखा, पश्चिम २ नम्बर

"माघ २ गते आज दिउसो ठूलो भूकम्प भै श्री कालिका देवीको मन्दिर भएको माथिल्लो दरबार गजूर भए पट्टि उत्तरको पाखो ३० हात लमाई र ३ हात जति चौडाइ र यसैको पश्चिम पट्टिको ३ हात जति चौडाइ र १४ हात जति लमाइको छानु भत्क्यो, खम्बाहरू पनि चिरिए। श्री गोरखनाथजीको गुफा माथिको ठूलो ढुङ्गाको र दरबारका पेटिको जोरमा २ अंगुल जति चिरिई फाटेको छ। तल्ला दरबारको पश्चिम पट्टि बुर्जाको २० हात जति लामो छानु भत्क्यो। दक्षिण पट्टि लडमा गारो चर्केको छ।"

## ३—पश्चिम ३ नम्बर

"माघ २ गते भूईंचालो गएकोमा सो बखत मोटर चलाउँदा आवाज आए जस्तो शब्द भई रह्यो। कास्कि जिल्लाको ठाउँ-ठाउँको पहाडहरूमा पैन्हो गयो औ पोखरामा १ घर भत्क्यो। मानिस वस्तुभाउको नोक्सान भएन।"

"बन्दिपुरमा ५०-६० घर चर्की मानिस बस्न डरलाग्दो, १०-११ घर पातालै भएको, मानिस जीवा जन्तु-

को विशेष नोक्सान न भएको, सरकारी घरहरू चर्की भत्केको हुनाले वर्षामा नोक्सान हुने सम्भव देखिन्छ ।"

### ४—पाल्पा-गौंडा

"रिडिमा १, तानसेनमा १ पुरानो घर भत्क्यो; अरु कुनै कुराको नोक्सान छैन।"

### ५—चिसापानी गढी

"भूकम्पले जागीरदारहरू बस्ने सरकारी घर, बटुक-भैरवको मन्दिर, खजानाघर, गढीको नयाँ बङ्गाला, भन्सार अड्डा-घर, भीमफेदी, सिमलटार, मार्खु, चितलाङ्का बङ्गालाहरू; भीमफेदी, कुलेखानि, चितलाङ; टिष्टुङ, पालुङ समेत ठाउँ-ठाउँमा घर भत्की मानिसहरू धेरै मरेका औ ठाउँ-ठाउँमा पैन्हो गई बाटोहरू पनि फाटेको खबर छ।"

## उत्तर पहाड

### १—उत्तर १ नम्बर सिन्धुपालचोक

"यस इलाकामा यही माघ २ गतेको भूकम्पले गर्दा डाँडा-काँडा पहाड-पर्वतहरू हल्लिए। डाँडा-काँडामा पैन्हो चल्यो; सारा दुनियाँका घरहरू कोही पाताल भई भत्के, कोही चिरिए। त्यस्तो भएको हुनाले सबै जनाले चित्रा,

भकारि, फलेकले छाई, घरका अगाडि पछाडि बारि, मैदान, चउर आदिमा डेरा गरी बसेका छन्। तातापानीको नुन-गोदाम औ कोदारि चौकिको कोदो-गोदाम भत्के। हाकिम कारिन्दाहरू समेत सबै बारिमा छाप्रो हाली बसेका छन्। पालचोक छापागाउँ भन्ने गाउँमा जम्मा ११३ घर रहेछन्; ती जम्मै घर पाताल भै भत्के। तौथलिकोट गाउँका घर पनि जम्मै भत्के।"

## २—रसुवा गढी

"माघ २ गते करीब २॥ बजे तिर ठूलो भूकम्प हुँदा ६०–७० जना मानिसले उचाल्न नशक्ने ढुङ्गा लडी, पहाड फुटी, लडी, आई ढुङ्गाले ठकर लागी र कोही भूकम्पले मात्र पनि धेरै घरहरू भत्के। सरकारी घर, चौकि, नुन-गोदाम, कोदो-गोदामहरू पनि भत्के। धेरै मानिसहरू घाइते भएका छन। *"

घर भत्कँदा धेरैको अन्न, घर–घरै भएको समय परेकोले बहुतै नोक्सान भयो र खानाको दुःख पर्न गयो।

* त्यसतर्फ भूकम्प विषयको जाँच गर्न गएका १ विद्यार्थीले दिएको केही अरु बयान पनि एघान्हौं भागमा लेखिएको छ।

धेरैले घरवास भत्कन गएता पनि सरकारबाट जङ्गल खोलिदिबक्सेकोले नगीचको पाहि–पाहिको जङ्गलबाट झटपट जो चाहिने काठपात जोरजाम गरी, ल्याई, ओतको निमित्त छाप्रो चाँडैनै उठाउन शके।

सो बखत भूकम्प-पीडितहरूको तत्काल-सहायताको लागि ठाउँ-ठाउँका दौडाहा जानेहरू र बडा-हाकीमहरू-लाई तपसीलमा लेखिएको किसिमको उर्दि गयो :—

तपसील

"( १ ) दुनियाँदारको अनाज, धनमाल पैऱ्होमा पुरिई थिचिइरहेको भए गाउँघरको र जङ्गी परेठको मदत-बाट झिक्न लाउनू।

"( २ ) मुर्दा उठाउन नशकेको भए उठाउन लाउनू।

"( ३ ) धनमाल पुरिएर झिक्न नशकी खान नपा-उने भए, गाउँका धनी मानिसबाट गाउँ खोलामा चलेको दर भाउले किन्न पाउने बन्दोबस्त मिलाउनू।

वा

"( ४ ) गाउँ घरबाट हुन नशके धर्म-भकारिबाट भए पनि पछि असूल गर्ने गरी मनासीव माफिक अन्न दिन लाउनू।

"( ५ ) ठाउँ-ठाउँमा पाटि, पौवा, पूल, बाटो इत्यादि भत्केको अवस्था हुनाले भोटेनि–बल तर्फका बेपारी बाहेक अरु तीर्थ गर्न र भेटघाट गर्न आउने भुटानीहरूलाई संझाई, बुझाई, भोटेनिबल तर्फै फर्काउनू ।

"( ६ ) अनाज घरभित्र पुरिएर झिक्न नशकी खान नपाउनेलाई मकै-बालि नपाकुन्जेल रोजको १ मानाको दरले गोस्वाराबाटै खुवाउने बन्दोबस्त मिलाउनू ।

" ( ७ ) बाँकि बक्यौता, दण्ड जरिवाना, हाल धडपकड गरी असूल तहसील नगर्नू ।

"( ८ ) अदालतका पुराना बाँकिवाल मध्ये सरकारको तहवील मासी खाएका, राजकाज सम्बन्धी, ज्यानमारा, चोरी, डाका मुद्दाका कसूरदारहरूलाई लाग्ने बाहेक अरु दण्ड, सजाय, बाँकी, बक्यौतामा हाल पक्राउ गर्न पर्दैन ।

"( ९ ) रैतीको घर बनाउन नजीक जङ्गलबाट बन नबिग्रने गरी काठ काट्न पाउने बन्दोबस्त गरीदिनू ।"

यी माथिका उर्दिहरूको साथ-साथै तपसीलमा लेखिएका कुराहरू बुझी जाहेर गर्नू भन्ने आडर पनि गयो :—

## तपसील

"( १ ) गाउँ, मौजा इत्यादिमा धेरै जिन्सि कस-कससँग कति-कति छ फाँटवारी बनाई जाहेर गर्नू ।

"( २ ) ओखति गर्दा पनि निको नहुने र लत्ता-कपड़ा घरभित्र पुरिएर झिक्न नशकी ओड्ने-ओछ्याउने नभएका जवान कति छन् जाहेर गर्नू ।"

"( ३ ) सरकारबाट बकस नपाई घर बनाउन नशक्ने को घर बनाउनालाई लाग्ने खर्च सहितको लगत पठाउनू ।

"( ४ ) पोतसम्म तिर्न नशक्ने कति छन् जाहेर गर्नू ।"

दुःखीहरूको तत्कालको सहायताको लागि दौडाहाहरूको नाममा केही ( १२ हजार जति ) रुपियाँको निकासा पनि भई गयो ।

त्यसको २-३ महिना पछि पूर्व पहाडका घर बनाउन नशक्नेलाई बकस बाँड्न र अन्नको बिउ न भएकालाई बिउ बाँड्नको लागि करीब मोरू २५००० निकासा भई गयो ।*

---

* घर बनाउन नशक्नेलाई बाँडिएको फिरिस्त नवौं भागमा लेखिएको छ । हाल पौष माघमा भएको बन्दोबस्त विषय पनि सबै

एकै बाजि सबैलाई आपत् पर्न आएकोले पाहाड तर्फका रैतीहरूलाई घर-बास उठाउन विशेष कठिन पऱ्यो। सहकालमा पनि कुटो-कोदालो, ज्याला-बनि गरी जीविका गर्ने यी पहाडिया भाइहरूलाई भूकम्पले गर्दा कस्तो सङ्कष्ट पर्न गयो होला !

## ( २ ) मधेश

पूर्व सिमाना देखि लिएर चितबनसम्म भूकम्पको मार पर्नगयो। जलेश्वर र हनुमान नगर जिल्लामा विशेष जोरदार कम्प गयो। यी जिल्लाहरू एपिसेएटर ( भूकम्प-केन्द्र ) भित्रै परेका हुन् भने पनि हुन्छ। यस्तो नसंझी बाहिरै परेका हुन् भने पनि, धेरै कोशको फरक छैन। भूकम्पले सबै पकी घरहरूलाई चूर-चूर पाऱ्यो। बीरगञ्जमा मुरलीदरबार र बडा-हाकीम बस्ने घर लगायत अरु साहेबज्यूहरूका घरहरू धेरै जस्ता भत्के। बडाहाकीम बस्ने घर भत्की बडाहाकीमलाई समेत थोर-बहुत चोट

---

नवौं भागमा लेखिएको छ, अथवा पहिलेदेखि लिएर अहिलेसम्ममा पहाड तर्फ करीब मो. रु. २,१०,००० खर्च भयो। सो खर्चको फाँटवारी पनि सोही नवौं भागमा राखिएको "भूकम्प-पीडितोद्धारक-फण्डैको हिसाबमै लेखिएको छ।

लाग्यो । निजका दाइ जनरल पुण्य शम्शेरलाई अर्को घर भत्केर साह्रै नै कडा चोट पऱ्यो । पूर्व मधेश पट्टिका शहर-हरूले धेरै नै नोक्सान खाए । कुनै-कुनै ठाउँमा त एकात घरहरू जमीनको २-३ हात भित्रसम्म पनि धसिए । जम्मा १२२४८ घर र १८४ ज्यानको नोक्सान भयो; त्यस मध्ये धेरै मानिस शहरैको बस्तिभित्र रहने नै मरे । गाउँ-गाउँतिर भने फुस, बाँसको घर ज्यादा हुनाले थोरै ज्यान र थोरै धनमालको नोक्सान हुनगयो ।

जतातते—खास गरी हनुमाननगर र जलेश्वरमा जमीन धेरैनै फाटिन गयो। सो फाटेर कसैको केही धनमाल पनि बेपत्ता भयो । यी फाटेका जमीनहरूबाट पानी आई खेत र बाटो २-३ दिनसम्म जल-थल हुन गयो । कहीं-कहीं जमीन फाटेका ठाउँमा २-३ बाँससम्म गहीरो र ३-४ गज-सम्म चौडा थियो । कोही-कोही खेत बालुवाले पनि पुरिन गयो । ठाउँ-ठाउँका मोटर, गाडी चल्ने बाटामा चिरा-चिरा पर्न गएकोले मोटरहरू नचल्ने भए । अमलेखगञ्ज देखि रक्सौलसम्मको सरकारी रेलको लाइनमा पनि ठाउँ-ठाउँमा धेरैनै नोक्सान पऱ्यो ।

भूकम्पको नोक्सान जाहेर गरी इलाका-इलाकाबाट आएका छोटकरी रिपोर्टहरू मध्ये कुनै-कुनै दृष्टान्तको लागि यहाँ लेख्तछु :—

## १—बीरगञ्ज

"माघ २ गतेका भूकम्पले बीरगञ्जका ठूला-ठूला पक्की घर भत्की धेरैको ज्यान समेत नोक्सान भएको बुझिन्छ। रेल दुबै तिर बन्द छ। ठाउँ-ठाउँमा ज़मीन फुटी पानी निस्क्यो। श्री जनरल विक्रम शम्शेरको घर भत्की श्रीजनरल पुण्य शम्शेरलाई र वहाँका रानीसाहेब समेत-लाई धेरै ठाउँमा ठूलो चोट-पटक लाग्यो। वहींको केटी १ घरले पुरी बेपत्ता छ। श्री बडाहाकीम राज हुने गोस्वारा घर भत्की वहाँलाई केही चोट लाग्यो। रानीसाहेबको माथमा चोटलागी एक दिन बेहोश भै बक्स्यो। सुकुवैद्य भन्नेको घर भत्की १०-१२ जना पुरिएका थिए। निजका बहिनी, छोरी, जुवाईं समेत मरे। घरहरू भत्की प्रायः दुनियाँको र सरकारको गरी ३-४ लाख नोक्सान परे-जस्तो छ।"

## २—महोत्तरि

"माघ २ गतेका भीषण भूकम्पले जलेश्वरको सरकारिया बडाहाकीम बस्ने घर केही चर्केको र असिष्टेएट सुब्बा बस्ने घर १ जगै देखि भत्केको छ। जनकपुरमा श्री रामचन्द्र, जानकीका मन्दिरहरु केही भएका छैनन्। महन्तहरू बस्ने घर जगै देखि लडे। त्यसमा ४-५ जना मानिस समेत परेका थिए ता पनि जिउलाई केही भएन। जनकपुरका दुनियाँदारहरूको पक्की घर भत्की स्वास्नीमानिस र केटा-केटी गरी ५ जना मरेछन्। अमिनिको झ्यालखाना घरहरू भत्की आजसम्म कैदी २ जना भागी बेपत्ता छन् भन्ने बेहोरा माघ ५ गते जाहेर गरेको।"

## ३—मोरङ बिराटनगर

"माघ २ गतेका भीषण भूकम्पले मोरङ विराटनगरमा सरकारिया बडाहाकीम बस्ने घर भत्की गारतका सुबेदार समेत ६ जना परे मध्ये १ जना साह्है बेहोश छ। झ्यालखानाको चौगिर्दा चर्की १-२ जनालाई चोट लाग्यो, कैदीलाई केही भएन। वनजाँचको हाकिम बस्ने घर, मालको हाकिम बस्ने घर, असिष्टेएट अडिटर, ओभर्सियर बस्ने

समेत सबै गारो फुटी बेकम्वा भए। धर्म-भकारि पनि चर्की बेकम्वा भयो। भूकम्प हुंदा ठाउँ-ठाउँ पृथ्वी फुटी पानीको भुल्को निस्की अन्दाजी २० मिनेटसम्म रही पछि बन्द भयो मुग्लाना जोगवनिको इष्टेशन-घर, मुसाफिरखाना र तार, रेल समेत बन्द भएको बुझिनाले जाहेर गरेको छ भन्ने माघ २ गतेको जाहेरी।"

## ४. झापा

"माघ २ गतेका भूकम्पले यस जिल्लामा पक्की घर नभएकोले खालि खामा गाडेको टिन र फुसको मात्र हुनाले घर, मानिस कुनै नोक्सान भएन। जमीनको हकलाई झापा बजारमा र मौजा–मौजामा १॥–२ हात-सम्म चिरिई फुटी नोक्सान भयो। इनारहरू भत्केर बालुवाले भरिई पानी खान मुश्कील छ।"

## ५. बुटौल

"माघ २ गतेका भूकम्पले यस बुटौल बजार र वालख बसेको ठाउँमा समेत केही नोक्सानी र मानिस-लाई समेत केही भएन।"*

* त्यस तर्फ भूकम्पको जाँच गर्न गएका १ विद्यार्थीले दिएको-केही अरु बयान एघारौं भागमा पनि लेखिएको छ।

मधेशका सरकारी घर, धर्म-भकारि मर्मत गर्नालाई र पुरिएका कूवाहरू सफा गर्ने इत्यादि कामलाई र खान-नपाउने दुनियाँको मद्दतलाई भनी भूकम्प हुना साथ तपसीलमा लेखिए बमोजीम निकासा भई गयो ❋ :—

| | | |
|---|---|---|
| १. | बीरगञ्ज | १०१०० |
| २. | सप्तरि सिन्हा | १०१०० |
| ३. | महोत्तरि सर्लाहि | १७७०० |
| ४. | मोरङ्ग विराटनगर | ५१०० |
| ५. | झापा | १६०० |
| ६. | पाल्हि | १६०० |
| ७. | खजनि स्युराज | ३१०० |
| ८. | बाँकेबर्दिया | १६०० |
| ९. | कैलालि कञ्चनपुर | १६०० |
| १०. | चितवन | २२५ |
| | | ५२७२५ |

मधेश तर्फ र त्यसमा पनि खास गरी गाउँ-गाउँतिर, राजधानी र पहाडमा जस्तो पक्की र ढुङ्गाको घर नभई

❋ मधेशपट्टि पछि भएको बन्दोबस्त नवौं भागमा लेखिएको छ ।

धेरै जस्ता कच्ची घरहरू भएकाले धेरै जस्ता घरहरू सद्देनै रहे। त्यस कारणले श्रोत पाउन विशेष मुश्किल भएन। बालिनालि भरखर तयार भएकोले र फुसको घरमा माटो मिल्ने सम्भव पनि कम भएकोले र खानाको हाहाकार मचिएन। कूवाहरू झन् गहीरिएर गएकोले र पुरिएकोले भने ठाउँ-ठाउँमा पानीको तकलीफ पर्न गयो। बालुवाले पुरिएका खेत जतिमा खेती चलाउन अझ १ वर्षको लागि मुश्कीलै छ भन्दछन्। बिहारमा जस्तो बालुवाको बाक्लो थुप्रो जम्न नगएता पनि, त्यसले र जमीनका चिराहरूले गर्दा त्यस्ता खेतमा खेती गर्नालाई केही बाधा पर्न जाने हुन गयो।

# तेस्रो भाग

## भूकम्पले मानिसको मनमा परेको असर

प्रकृतिले गरेको उत्पातबाट पनि मनुष्यको मनमा बहुतै ठूलो असर पर्दो रहेछ। यसको दृष्टान्त यही गत भूकम्पबाट थाहा भयो। नेपाल, खासगरी राजधानीका बासिन्दाहरूको मनमा यस भूईँचालोले कस्तो असर पैदा

गरायो त्यो पाठक वर्गलाई थाहा दिनु यस परिच्छेद्को मतलब हो । भूकम्पका कारण मानिसहरूले आफ्ना बुद्धि अनुसार भिन्दै-भिन्दै संझे । तिनीहरूको मुख्य तीन विचार छन्, ती तल लेख्तछु ।

( १ ) माघ २ गतेको दिन ७ ग्रह एकै राशिमा जुट्ने भएकोले पहिले देखिनै मानिसहरूले भूकम्प या लडाइँ जस्तै कुनै उत्पात हुने शङ्का गरेका थिए । हुन पनि सोही दिनमा भूकम्प हुन गएकोले धेरै जस्ताले भूकम्पको कारण सप्तग्रह जुटेकै संझे । ज्योतिषको भविष्यबाद मुताबिक घटना पनि मिल्न गएकोले ज्योतिषहरू उपर धेरैनै पत्यार बढ्न गयो । त्यसको परिणाममा ७–८ महिना पछिसम्म पनि दुनियाँहरूले अनेक किसिमका ज्योतिषी हल्लामा पत्यार गर्ने भएका थिए ।

( २ ) सर्वसाधारण दुनियाँहरूमा "परम्परा देखिनै" पृथ्वीमा पाप धेरै बढ्न गएमा पृथ्वीलाई थामिराख्ने देवताले ( कसैले नाग या माछा पनि भन्दछन् ) पापको बोझ थाम्न नशकी एक कुमबाट अर्को कुममा पृथ्वीलाई सार्दा भूइँचालो जान्छ भन्ने विश्वास भएकोले सोही

कारणबाट भूमिकम्प गएको भनी संझने पनि कोही भए।

( ३ ) यही सालमा हिमालयको सबभन्दा उच्च शिखर 'माउण्ट एभरेष्ट' माथि यूरोपियनहरूले हवाइ-जहाज लगेका थिए। यो शिखर शिवस्थान हो भनी विश्वास गर्ने दुनियाँहरूले यसैलाई भूइँचालोको कारण संझे। नेपाली-हरूमा यो विश्वास परेको छ भनी कोही बिराना देशका छापामा पनि निस्केको थियो।

दुनियाँहरूको बेग्ला-बेग्लै विचार माथि लेखेँ। भूकम्प हुनु प्रकृतिका धेरै खेलहरू मध्ये एउटा हो भनी संझने कमका पनि कम मात्रै हुँदा हुन्। अब भूकम्प द्वारा परेको तात्कालिक असरको विवरण गर्दछु।

( १ ) पहिला ४-५ दिनसम्म कोही-कोही दुनियाँ-हरूमा अब प्रलयको बखत चाँडै आइपुग्छ भन्ने डर परी 'मर्नु जतिको परेपछि मीठा-मीठा भोजन र राम्रा-राम्रा पहिरन गरी मर्नु नै बढिया छ' भन्दै स्वादिष्ट खानेकुरो खाने र राम्रा लुगा लाउने पनि कोही-कोही भए। यस्तो विशेष आइमाई तिर देखियो। १९२३ सन्को भूकम्पमा जापानमा पनि यस्तै अवस्था भएथ्यो रे। तसर्थ, दुनियाँ-

हरूमा खास गरी अपठितहरूमा यस्तो असर पर्नु स्वाभाविकै रहेछ भनी संझनु पर्‍यो ।

( २ ) भूकम्पको अतासमा परी होश-हवास हराएको मानिस झैं ब्याकुल भई आत्म-भरोसा वा परोपकार गर्न पट्टि केही वास्ता नराखी, चूप-चाप बसिरहने पनि एक थरि थिए । यिनीहरूको संख्या कम थिएन ।

( ३ ) तेस्रो, एकथरिमा बहुत असल असर परेको देखियो । यिनीहरूबाट दुःखीहरूको उपकार भयो, आफ्ना दुःख सुखको परवाह नराखी गरीबहरूको सेवामा लागे। तर यिनीहरूको संख्या थोरै मात्र थियो। छोटकरीमा यस्तो भन्न शकिन्छ कि सज्जनहरूको सद्गुण र दुष्टहरूको दुष्टयाइँ बढ्न गएको थियो ।

( ४ ) भूकम्पको एक असल परिणाम—हाम्रो देशमा आत्म-भरोसाको आवश्यकता कसै-कसैमा झल्क्यो । विराना मुलूकको भरमा रहने बानिले यस्तो समयमा कस्तो मालमत्ताको अभाव र आपत पर्न जाँदो रहेछ भन्ने कुराको ज्ञान हुन आयो । त्यसले गर्दा स्वदेशी चीज उपर कसै-कसैको रुचि बढ्न गएको देखिन्छ । यसरी देश-

बान्धवहरूमा स्वदेशी वस्तु उपर रुचि बढ्नगएको पक्षमा हाल र भविष्य दुवै समयको लागि यो भूकम्पको एक वहुतै असल परिणाम हो भनी संझनु पर्दछ।

यस परिच्छेदमा लेखिएका कुराहरूमा राय फरक-फरक हुन शक्तछ भन्ने लाग्दछ ता पनि आफूले देखेसम्म-को कुरा लेखेको छु।

# चौथो भाग

## मृत्यु-संख्या

राज्यभरमा भूकम्पले गर्दा ८५१९ ज्यानको नोक्सान हुन गयो। हिन्दुस्थान (बिहार) पट्टि भने ७१८८ ज्यान-को मात्र नोक्सान पऱ्यो भनी छापामा छापिएको देखिए-को छ! हाम्रो मुलूक पहाडी भए पनि हिन्दुस्थानमा भन्दा बढ्ता ज्यानको नाश भयो। हाम्रो देशमा मरेकाहरूको फिरिस्त ठाउँ-ठाउँ छुट्ट्याई तपसीलमा लेखिएको छ *:-

* जन्तुजनावरको मृत्युसंख्याको लगत केही नराखिएकोले यहाँ दिन शकिएन।

## मृत्यु-संख्या

| असामी | मर्दाना | जनाना | जम्मा |
|---|---|---|---|
| **१. राजधानी खाल्टो** | | | |
| १. काठमाडौं शहर भित्र | २५४ | २२५ | ४७९ |
| ऐ. बाहिर | ७९ | १६६ | २४५ |
| २. पाटन शहर भित्र | २५० | २९७ | ५४७ |
| ऐ. बाहिर | ८७१ | ८२६ | १६९७ |
| ३. भादगाउँ शहर भित्र | ४३३ | ७३९ | ११७२ |
| ऐ. बाहिर | ६५ | ९१ | १५६ |
| जम्मा | १९५२ | २३४४ | ४२९६ |
| **२. पूर्व पहाड** | | | |
| पूर्व १ नं. | १६३ | १९३ | ३५६ |
| ऐ. २ नं. | ५२ | ४३ | ९५ |
| ऐ. ३ नं. | ३३० | ५२७ | ८५७ |
| ऐ. ४ नं. | ६९८ | ८९९ | १५९७ |
| धनकुटा | १६२ | १५४ | ३१६ |
| इलाम | ४१ | ५१ | ९२ |
| उदयपुर गढी | २९५ | २५७ | ५५२ |
| सिंधुलि गढी | ५१ | ५८ | १०९ |
| जम्मा | १७९२ | २१८२ | ३९७४ |

## ३. पश्चिम पहाड

| | | | | |
|---|---|---|---|---|
| पश्चिम १ नं. | — | ४ — | ६ — | १० |
| ऐ. २ नं. | — | × — | १ — | १ |
| ऐ. ३ नं. | — | × — | १ — | १ |
| ऐ. ४ नं. | — | × — | १ — | १ |
| चिसापानी गढी | — | २५ — | २७ — | ५२ |
| | जम्मा— | २९ | ३६ | ६५ |

## ४. मधेश ( पूर्व )

| | | | | |
|---|---|---|---|---|
| बीरगञ्ज | — — — | १६ — | २८ — | ४४ |
| महोत्तरि सर्लाहि | — — — | ३१ — | २० — | ५१ |
| सप्तरि सिन्हा | — — — | १७ — | २३ — | ४० |
| बिराटनगर | — — — | १३ — | ३६ — | ४९ |
| झापा | — — — | × — | × — | × |
| | जम्मा— | ७७ | १०७ | १८४ |

## ५. मधेश ( पश्चिम ) × — × — ×

राज्यभरको कुल जम्मा—३८५०—४६६९—८५१९

तर मरेका मानिसको गिन्तिबाट नोक्सानको अड्काम गर्न शकिदैन, किनकि घर-धनको नोक्सान हेरी मानिस

कम मरे । मानिसको नोक्सान सो भन्दा पनि बर्ता हुन न गएकोमा ३ मुख्य कारण छन् :—

( १ ) पहिलो कारण हाम्रो मुलूकमा बाहिर पख बढ्ता खेती भएकोले धेरैका घर साना-साना र खुला जग्गामा बनाइएकाले चाँडै खुलामा भागी आउनसके, कोही थिचिएका मानिसहरू पनि बाँचे । शहरको बस्ति घनो हुनाले मानिस पनि ज्यादा त्यहीं परे ।

( २ ) भूकम्प गएको बेला दिनको २ बजे तिर भएको ले, धेरैजना बाहिर खेतमा काम गर्न लागेका थिए । रातको बखतमा भूकम्प गएको भए देखि धेरैनै बढ्ता प्राणको नाश हुनजान्थ्यो । खास गरी बाक्लो बस्तिमा अहिले भन्दा १०-१२ दोबर नोक्सान सजिलैसित हुन शक्तथ्यो । मृत्यु-संख्या ६०-७० हजार पुग्न पनि के अस-म्भव थियो ?

( ३ ) भूकम्प ३ मिनेट जति अडेकोले मानिसहरूले खुला जग्गामा भागी आउने मौका भेट्टाए । तर दुनियाँमा ( खास गरी जनानाहरू कसैको विचारमा ) भूकम्पको बेला भकारि भर्नु पर्दछ, जमीन छुनु पर्दछ भन्ने अनेक किसि-

मका कुरामा विश्वास गरी भाग्ने उद्योगै नगरी बसेका पनि कतिजनाको सुनियो। त्यस्ता मानिस जानी-जानी मृत्युको मुख भित्र पसे होलान्, अथवा कतिजना घाइते भएका होलान्! मूढविश्वासमा पर्ने मानिसहरूले यस कुराको विशेष ध्यान राख्नु पर्दछ। अब पछिलाई यस्तो विश्वासमा परी कसैले धोका खान परोइन भन्ने आशा छ।

## ( १ ) राजधानी—

राजधानी चार भञ्ज्याङ भित्रमा पूर्व दक्षिण भाग अर्थात् भादगाउँ, ठुसु, हरिसिद्धि, बुङमती, खोकनामा बढ्ता ज्यानको नोक्सान पर्नगयो। ३ शहरमा अर्को एक कारणले गर्दा मृत्यु-संख्या केही कम हुनगयो। भूकम्पको दिन (माघ-को १ गते बिदा भएकोले) तीनै शहरमा पल्टनको बेलुकाको कवाज थियो र भूइँचालो गएको बखत सिपाहीहरू कवाज खेलिरहेका थिए। तसर्थ सिपाहीहरूमा मर्ने ५-६ जना मात्रै भए। त्यस बाहेक, तिनीहरूलाई मानिस पुरिएको ठाउँमा तुरुन्त पठाएकोले धेरै जीउँदा मानिसहरू झिक्न शकिए—खास गरी काठमाडौं शहरमा। सो दिन मात्र होइन, ३-४ दिन पछिसम्म पनि मानिसहरू हररोज

भने झैं जीउँदै झिकिन्थे। ७ दिन पछि पनि काठमाडौं शहरको मखनटोलको एक पसलबाट २ जना जीउँदै झिकिए। तिनीहरूलाई रबरको नलीबाट दूध, औषधि खुवाई ठूलो यत्नले भूकम्प-सेवक र पल्टनियाँहरूले बचाए। यस्तो जतन तथा मेहनत द्वारा धेरैजनाले पुनर्जन्मनै पाए भने पनि हुन्छ। गाउँ-गाउँ पट्टि त्यस बखत पुरा मद्दत पुऱ्याउन नशकेता पनि साना-साना घर भत्की पुरिएका मध्ये कोही-कोही तिनीहरूकै नातादारको मेहनतले पनि बाँचे।

बडादमीहरूका घर दरबारले थिचिई मर्नेहरू मध्ये मुख्य-मुख्य चाहिँ तपसीलमा लेखिएका छन्:—

## तपसील

(१) श्री ५ महाराजाधिराजका २ छोरी मैञा (१० बर्षकी, र ८ बर्षकी) र ६ शुशारे।

(२) श्री ३ महाराजकी नातिनी मैञा (क० विक्रमकी ८ बर्षकी छोरी)।

(३) श्री मे. क. हस्तकी रानी र निजको एक सानो छोरो र छोरी।

(४) साहेबज्यू मोहन विक्रम र निजका जहान गैःह।

दरबारको नोक्सान विचार गर्दा, यति भन्दा बर्ता नमर्नु आश्चर्यको कुरा भयो। धेरैको घरमा दैवी तारतम्य-बाट बाँचेको खबर सुनिन्थ्यो। सो ठूला देखि सानासम्म धेरैलाई अनुभव भयो।

लाशको सद्गत गर्न नशक्नेहरूले आफ्ना मरेका नातादारहरूको मृतदेह खोला-नालामा त्यसै फ्याँकि दिए-काले सरकार तर्फबाट यस्ता लाशहरूको र बेवारीस लाशहरूको दाह गराइयो। बुङमतीमा यस्तै किसिमले फ्याँकिएका करीब १०० लाशको सद्गत सिपाहीहरूका हात बाट भयो। पुरिएका जिउँदाहरूलाई बचाइदिने काममा र मुर्दालाई पन्छ्याइदिने अर्थात् जलाइदिने काममा सिपा-हीहरूले खूप मदत दिए। तिनीहरूले यो काममा कुनै-कुनै स्वयं-सेवकहरूबाट पनि सहायता पाए। काठमाडौं र पाटन शहरमा १ महिना पछिसम्म र भादगाउँमा २-३ महिना पछिसम्म पनि मुर्दा झिकिए।

## ( २ ) पहाड—

पहाडतर्फ पूर्व ३ नं. र ४ नं. मा बढ्ता ज्यानको नोक्सान भयो। भूकम्प गएको टायममा धेरै जना गाई

भैंसी चराउनालाई अथवा घाँस, दाउरा इत्यादि काट्न-लाई बनमा पसेका थिए । पैरो गई तिनीहरू मध्ये कैय्यन् जनाको प्राणान्त भयो । पूर्व ३-४ नं. तिर विशेष गरी बढ्ता पैऱ्हो गयो । पैऱ्हो गएका ढुङ्गा तथा माटोले ठाउँ-ठाउँका खोला-नालाहरूपनि ढाकिन गए । ढुङ्गाले थिचिई मर्नेहरूका लाश झिक्न नशक्ता तिनै ढुङ्गा माथि काज किरिया गरि फर्किआएको खबर कहीं-कहीं बाट आएको छ । पहाडमा पैऱ्हौले गर्दा कति जनाको ज्यान गयो— पूरा निधो गर्न कठिन छ । यस बारेमा केही अन्दाम गर्न शकियोस् भन्नाको लागि यो एक बयान यहाँ लेख्त-छुः—

"पूर्व ४ नं. को र धनकुटाको इलाका छुट्ट्याउने अरुण नदीको किनाराको लेगुवा घाटमा एउटा ठूलो ओडार परेको थियो । त्यस ओडारभित्र जात्रुहरू आफ्नो भारि बिसाएर विश्राम गर्दथे । माघ २ गतेको भूकम्पमा पनि बाराह क्षेत्रको मेलाबाट फर्की आएका लोग्ने मानिस र स्वास्नीमानिस गरी अन्दाजी ४०-५० जवान मानिस-हरू त्यसै ओडारभित्र भारि बिसाई बसिराखेका रहेछन् । त्यसै मौकामा प्रलय-रूपी भूकम्प गएको हुनाले पैऱ्हो

गइकन त्यो ओडार जम्मै बसेर त्यहाँ भित्रका जात्रुहरू सबै पुरिएर मरेछन् ।

"फेरि एउटा हतुवा भन्ने थुमको इलाकामा एउटा सानो खोला दुइतिर पहाडको बीचबाट बगेर गएको थियो। भूकम्प हुनासाथ पहाडहरूमा पैन्हो गइकन त्यो खोलो बग्ने बाटो रोकिएछ । ९ दिनसम्म बग्ने बाटो नपाई सो खोलाको पानी जमेर एउटा ठूलो ताल जस्तो हुन गई त्यहाँका नगीचका गाउँहरू पनि जम्मै डुबाएर जलामय भएको थियो । ९ दिनबाद पानी ज्यादानै बर्ता भैकन पहाड माथिबाट बगेर गएछ । भूकम्प भएको दुइ महिना पछि पनि त्यहाँ एउटा ठूलो ताल जस्तो देखिन्थ्यो ।

"दिला भन्ने थुमबाट एउटी आमा र छोरो पूर्व ४ नं. अदालतमा तारीख भएको हुनाले बाटोमा हिंडेर आइरहेका रहेछन् । तिनीहरू हिंडेर आएको बाटो पहाड कपेर बनाएको बाटो रहेछ । त्यत्तिकै बीचमा भूकम्प पनि हुनथालेछ । जमीन चिरा-चिरा परी फाट्न थालेछ । तारीखमा जानलागेको छोरो चाहिं फाटेको जमीन भित्र बेपत्ता भएछ, आमा भने बाँचिछ ।"

शायद् अरु ठाउँमा पनि यस्तो दशा लागेको हुँदोहो। तसर्थ रपोटमा लेखिएको भन्दा अरु बढतै ज्यानको नाश भयो होला भनी संझेमा केही भूल हुन शकोइन। ठूला-ठूला शहर वा बाक्ला–बाक्ला बस्ति नभएका पूर्व-पहाड जस्ता ठाउँमा मात्र पनि करीब ४००० को मृत्यु हुनु कम होइन।

## ३. मधेश

मधेशमा भूकम्प निकै जोरले गएको हो ता पनि भाग्यवश मृत्यु-संख्या कमनै हुनगयो। यसको कारण यो हो कि त्यहाँ शयकडा नब्बे ( ९० ) घर काठ वा बाँसले बनेका हुन्छन्, उसमा पनि साना-साना हुन्छन्। यस्ता घरहरू ईँट वा ढुङ्गाका घरहरू झैं भताभुङ्ग भएनन्, तिनीहरूमा थोरै मात्र नोक्सान भए। फेरि त्यतातिर पैन्हो जाला भन्ने पनि केही डर रहेन। बिराटनगर सर्लाहि जस्ता पक्की घर भएका शहरहरूमा मात्र भूईँचालोको खास चोट पर्नगयो। गाउँ–गाउँमा भन्दा ती शहरहरूमा धेरै बढता मानिस मरे। तसर्थ मधेशतर्फ जम्मा १८४ जनाको मृत्यु हुनगयो।

देशमुलूक भरिका अकालमृत्युको गाँसमा परेका यी हजारौं भाइ, बहिनीहरूको आत्मालाई ईश्वरले शान्ति दिऊन भनी प्रार्थना गर्दछु।

# पाचौँ भाग

## घर, धन आदिको नोक्सान

गोरखाराज्यमा पूर्व मेचि सिमानादेखि लिएर पश्चिम १नं. सम्मका घर, पाटि, पौवा र मन्दिरहरू धेरैनै भत्के, बिग्रे। राज्यभरमा भएको नोक्सान तपसीलमा लेखिन्छ :–

तपसील *

| असामी | पाताल भएको घर | धेरै चर्केको घर | थोरै चर्केको घर | जम्मा | देवालय शिवालय पाटिपौवा | कैफियत |
|---|---|---|---|---|---|---|
| राजधानी खाल्टो | | | | | | |
| काठमाडौं शहरभित्र | ७२५ | ३७३५ | ४१४६ | ८६०६ | ४० | |
| ऐ—ऐ—बाहिर– | २८९२ | ४०६२ | ४२६७ | ११२२१ | १६ | |
| पाटन शहर भित्र | १००० | ४१७० | ३८६० | ९०३० | २२९ | |
| ऐ—ऐ—बाहिर | ३९७७ | ९४४२ | १५९८ | १५०१७ | ३० | |
| भादगाउँ शहरभित्र | २३५९ | २२६३ | १४२५ | ६०४७ | १५७ | |
| ऐ—ऐ—बाहिर | १४४४ | १९८६ | २३८८ | ५८१८ | × | |
| जम्मा— | १२३९७ | २५६५८ | १७६८४ | ५५७३९ | ४९२ | |

* "भूकम्प-पीडितोद्धारक-संस्था" अड्डाबाट आएको फिरिस्त ।

| असामी | पाताल भएको घर | धेरै चर्केको घर | थोरै चर्केको घर | जम्मा | देवालय शिवालय र पाटि पौवा | कैफियत |
|---|---|---|---|---|---|---|
| पहाड ( पूर्व ) | | | | | | |
| पूर्व १ नं० | ६६२८ | १९३९१ | × | २६०१९ | × | पाटिपौवा देवालय शिवालयहरूको कि-सिम पनि घरकै किसिममा परेको छ |
| ऐ—२ नं० | ४६८७ | १०७३८ | × | १५४२५ | × | |
| ऐ—३ नं० | २११०७ | १५५४८ | × | ३६६५५ | × | |
| ऐ—४ नं० | १५०४८ | ५ | × | १५०५३ | × | |
| धनकुटा | ६६२३ | १५१२० | × | २१७४३ | × | |
| इलाम | २३१६ | ३११२ | × | ५४२८ | × | |
| उदयपुर गढी | १०५२ | ३९१७ | × | ४९६९ | × | |
| सिंधुलि गढी | ३४८६ | ३१५४ | × | ६६४० | × | |
| जम्मा— | ६३९४७ | ७०९८५ | × | १३४९३२ | × | |
| पहाड (पश्चिम) | | | | | | |
| पश्चिम १ नं० | ५८२ | १७२० | × | २३०२ | × | |
| ऐ—२ नं० | १८६ | ४६१ | × | ६४७ | × | |
| ऐ—३ नं० | १९ | ६५ | × | ८४ | × | |
| ऐ—४ नं० | ८ | १ | × | ९ | × | |
| चिसापानी गढी | × | १८ | १२६६ | १२८४ | × | |
| पाल्पा | × | ३ | × | ३ | × | |
| डोटि बैतडी डडेल धुरा समेत | × | × | × | × | × | मामूली भूकम्पमा नोक्सान नभएको |
| दैलेख | × | × | × | × | × | |
| जुमला | × | × | × | × | × | |
| प्युठाना | × | × | × | × | × | |
| जम्मा— | ७९५ | २२६८ | १२६६ | ४३२९ | × | |

| असामी | पाताल भएको घर | धेरै चर्केको घर | थोरै चर्केको घर | जम्मा | देवालय शिवालय र पाटि पौवा | कैफियत |
|---|---|---|---|---|---|---|
| मधेश ( पूर्व ) | | | | | | देवालय पाटिपौवाको फिरिस्त पनि घरकै फिरिस्तमा परेकोछ |
| बीरगञ्ज | ३६५४ | ८५४ | २५४६ | ७०५४ | × | |
| महोत्तरि सर्लाहि | × | ४३२३ | २६८ | ४५९१ | × | |
| सप्तरि सिरहा | ८७ | ४२८ | × | ५१५ | × | |
| बिराटनगर | १३ | १ | ६४ | ७८ | × | |
| झापा | × | × | × | × | × | |
| जम्मा— | ३७५४ | ५६०६ | २८७८ | १२२३८ | × | |
| मधेश ( पश्चिम ) | | | | | | नोक्सान भएन |
| पाल्हिमाझखण्ड | × | ४ | ६ | १० | × | |
| चितवन | × | × | × | × | × | |
| खजहनि स्युराज | × | × | × | × | × | |
| बाँके बर्दिया | × | × | × | × | × | |
| कैलाली कञ्चनपुर | × | × | × | × | × | |
| जम्मा— | × | ४ | ६ | १० | × | |
| ऐ.को तेरीज | | | | | | |
| १ राजधानी-खाल्टो (३शहर राजधानी र गाउँ लगायत ) | १२३९७ | २५६५८ | १७६८४ | ५५७३९ | ४९२ | |
| २. पहाड(पूर्वरपश्चिम) | ६४७४२ | ७३२५३ | १२६६ | १३९२६१ | × | |
| ३. मधेश(पूर्वरपश्चिम) | ३७५४ | ५६१० | २८८४ | १२२४८ | × | |
| कुल जम्मा— | ८०८९३ | १०४५२१ | २१८३४ | २०७२४८ | ४९२* | |

* राजधानी—खाल्टोको बाहेक अरु ठाउँको पाटिपौवा, देवालय, शिवालय-को फिरिस्त कैफियतमा लेखिए झैं घरकै फिरिस्तमा गाभिएको छ ।

पातालै भएर भत्केका घरहरूको गिन्ति थोरै देखिएता पनि चिरिएका चर्केका धेरै जस्ता घरहरू खालि टालटुल मात्र गरेर नहुने भई भत्काएरनै बनाउनु पर्ने खण्ड परेकोले यस्ता घरका धनीहरूलाई भत्काउने भार समेत पर्नआई उल्टो झन दोहोरो खर्च लाग्ने हुनगयो। थोर-बहुत टालटुल गरेर पुग्ने घरको संख्या माथिको फेहरिस्तमा नपर्नु पनि सम्भव छ।

हिसाब गर्दा राजधानी–खाल्टोमा शयकडा ७० जति घरहरूको नोक्सानी देखियो। सो खाल्टोको दक्षिण पूर्व भागतिर अर्थात् लुभु, सानागाउँ, हरिसिद्धि, खोकना, बुङ्मती तिर विशेष बढ्ता नोक्सान भयो। भादगाउँ शहर पनि सान्है्नै बिग्रेको होता पनि माथि लेखिएका अरु पांच गाउँ जति होइन। यी पाँच गाउँमा त शयकडा ९९ घर जतिनै नोक्सान भए। ती गाउँहरू माटोको पहाड जस्तो देखिन्थे। त्यस पछिको नोक्सान पाटन र काठमाडौंमा भयो। कीर्तिपुरमा भने शयकडा ५ घर पनि भत्केन। कीर्तिपुर र राजधानीको उत्तरभाग ( गोकर्ण, सुन्दरीजल, गौचरण इत्यादि ) मा बहुतै थोरै मात्र नोक्सान भएकोले



श्री ५ महाराजधिराजको नारायणहिटि दरबार (पूर्वलङ्क)



श्री ३ महाराजको दरबार जाउलाखेल, पाटन



सिंह दरबार (दक्षिणलङ्)



बगैंचाघर, सिंह दरबार

गोलबैठक, थापाथलि (वि. सं. १९०८)



भूकम्प अगि



भूकम्प पछि

शीतल निवास, महाराजगञ्ज



भूकम्प अघि



भूकम्प पछि

राजधानीमा शयकडा ७० मात्र नोक्सान भएको देखिन आएको हो ।

पहाडतर्फ पूर्व ३ र ४ नं. मा घरहरूको र धनमाल-हरूको धेरै नोक्सान भयो; मधेशतर्फ हनुमान नगर, जले-श्वर र बीरगञ्जमा पनि हुनगयो । मधेशतिर धेरै घरहरू बाँस वा काठबाट बनाइएकाले र एकतले खरले छाइ-राखेकाले उत्तिको नोक्सान हुनपाएन । तर ईँटका घरहरू ( पक्की घरहरू ) भने धेरैनै बिग्रे ।

राजधानी–खाल्टोमा विशेषगरी अग्ला घरहरू भन्दा कम तलाका घरहरूनै बर्ता अडेको देखियो । खूप बलियो सामान, सिपालु इञ्जिनियर र असल जमीन बिना ठूला-ठूला घर बनाएमा कस्तो नतिजा हुंदो रहेछ यही भूइँ-चालोले देखायो । यो कुराको सत्यता काठमाडौंको तोप-खानाबाट स्पष्ट देखियो; १-२ वर्ष अघिमात्र बनाएको ३ तले घर चूर भई, ८०-९० वर्ष अगाडि बनाएको घर अझ खडाको खडै रहेको छ ।

तर कुनै-कुनै ठाउँमा बलिया घर चूर हुने र पुराना जीर्णोद्धारको जरूरी परेका (भत्काई बनाउनु पर्ने) घरहरू

दुरुस्तै रहने पनि भए । यसको कारण यो हुनु पर्दछ कि ती बलिया घर भत्केका ठाउँमा पृथ्वी-कम्पको जोर बढ्ता पर्नगयो, लड्न आँटेका घर अडेको ठाउँमा कम्पको जोर कम हुनगयो । कुनै जग्गामा भूकम्पको असर बढ्ता र कुनै जग्गामा कम हुन्छ, ढुङ्गा वर्ता भएका ठाउँमा भन्दा वालुवा वर्ता भएका ठाउँमा बढ्ता कम्प थाहा हुन्छ भनी भूगर्भ-विद्या जान्नेहरूले भन्दछन् । सो कुराको परीक्षा यहाँ भयो । कीर्तिपुर डाँडो टुप्पोमा परेता पनि ढुङ्गै-ढुङ्गाले बनेको हुनाले भूकम्पले उस्तो नोक्सान गर्न शकेन । परन्तु त्यसै ठाउँबाट करीव १५०० गज परको पाँगा भन्ने गाउँमा जमीन गिलो भएकोले ज्यादा नोक्सान पर्नगयो । पहाड तर्फ पनि यस्तै देखियो ।

राजधानीमा नोक्सान हुनगएका दरवार, घर र देवलहरू मध्ये कुनै-कुनैको नाम यहाँ लेख्तछु । ठूला-ठूला दरवारहरू मध्ये सबै भने झैं नै बिग्रे ।

## ( क ) दरवार घर

| नाम | कैफियत |
| --- | --- |
| श्री ५ को नारायणहिटी दरवार— | धेरै नोक्सान |

| | | |
|---|---|---|
| जाउलाखेल दरबार | ( जाउलाखेल )— | धेरै-नोक्सान । |
| विशालनगर | ( भाटभटिनि )— | ” |
| लक्ष्मी निवास | ( महाराज गञ्ज )— | ” |
| शीतल निवास | ( महाराज गञ्ज )— | ” |
| हरिहर भवन | ( पुलचोक )— | ” |
| टङ्गाल दरबार | ( हाँडिगाउँ )— | ” |
| चारबुर्जा | ( ठमेल )— | ” |
| सिंह दरबार | ( श्री ३ को दरबार )— | ठाउँ-ठाउँमा नोक्सान |
| बबर महल | ( कुरियागाउँ )— | ” |
| सिंहमहल | ( थापाथलि )— | ” |
| गोल बैठक | ( ” )— | पाताल |

यी बाहेक सरकारी घर र अड्डाहरूमा पनि नोक्सान पर्न गयो । राज्यभरको हिसाब राखियो भने करोडौं रुपियाँको हानि हुनगएको देखिएला । राजधानीमा बिग्रनगएका मुख्य-मुख्य घरहरू तल लेखिन्छन् :

## ( ख ) सरकारिया घर, अड्डाआदि

| नाम | कैफियत |
|---|---|
| १. धरहरा ( भीमसेनथापाले | |

बनाएको सुनधारा नजीकैको)—आधा बाँकि रहेर भत्क्यो ।

२. बीर घण्टाघर (रानीपोखरी)—पातालभई भत्क्यो ।

३. छ्वालाघर (छाउनि)—पातालभई भत्क्यो । पल्टनियाँ सरजाममा समेत केही नोक्सान पर्नगयो ।

४. तोपखाना (तल्लो टुँडिखेल)—ठाउँ-ठाउँमा बिग्रेको; १०-१२ नाल बन्दूक समेत बिग्र्यो ।

५. ठिमि गठ्ठाघर (ठिमि)—धेरै नोक्सान ।

६. मिलिटरी अस्पताल (काठमाडौं)–ठाउँ-ठाउँमा धेरैनै चर्केको ।

७. जनाना अस्पताल ( „ )—नोक्सान ।

८. मर्दाना „ ( „ )— „

९. औषधिको सेण्ट्रल ष्टोर —औषधिको धेरै शिशिको नोक्सान ।

१०. छापाखाना (नक्साल)—नोक्सान ।

११. दरवार स्कूल ( काठमाडौं )—नोक्सान।

१२. भादगाउँ स्कूल ( भादगाउँ)–धेरै नोक्सान।

१३. भादगाउँ अस्पताल र डाक्टर घर— „

१४. भादगाउँ बृगेडियर बस्ने घर— „

१५. गुठी तहसील अड्डा ( काठमाडौं )—पाताल ।

१६. डिल्लीबजार अड्डा ( „ )—थोरै नोक्सान।

काठमाडौं, भादगाउँ, पाटन शहरहरूका गौरव बढाउने पुराना-पुराना देवालयहरू र नेवारे राजाका दरवारहरूमा धेरै नोक्सान पर्न गयो। नेपालका कैयन् यस्ता प्राचीन शिल्प-विद्याका चिन्हहरूको लोप हुनगयो। देश-विदेशमा बयान चलेका बर्षौं अगाडिदेखिका कला-कौशलका ईमारतहरू क्षणभरमा नाशिन जानु बहुत अपशोसको कुरा हो। घर दरबारहरू भने पैसाले उठ्न शक्ने चीज हुन्, परन्तु यी प्राचीन कालिगढीका चिन्हहरू सँधैको लागि लोप हुने भए; जसरी पुनरुद्धार हुन शक्तछ गर्नुपर्दछ भनि श्री ३ महाराजबाट ठाउँ-ठाउँमा मर्मत गराउन लगाइबक्सेको छ। तर साथ-साथै कोही नामूद देवलहरू अड्न जानु एक आश्चर्य र खुशीको कुरा हुनगयो। कुनै-कुनै

१८९० सालको भूईँचालामा अडेका अहिले पनि अडेकै छन्, दृष्टान्तको लागि पाटनमा तलेजुको देवल चूर भएता पनि कृष्णदेवलमा केही भएको छैन, भादगाउँमा भैरवको होचो देवल चूर्ण भयो ता पनि सो मन्दिरको ३० गज परको ५ तले न्यातपोलाको छानो मात्रै खलबलियो। काठमाडौं हनुमानढोकामा महाविष्णुको मन्दिर भत्केता पनि तलेजूको भने गजूर मात्रै बाङ्गियो। ३ शहर भित्रमा भत्की बिग्रेका पुराना देवालय र दरबारहरूमा कुनै-कुनै यहाँ तपसीलमा लेख्त छु:—

तपसील

## ( ग ) पुराना देवालय र दरबार—

# काठमाडौं

| नाम | बनेको साल | कैफियत |
|---|---|---|
| १. तलेजूको मन्दिर | वि. सं. १६२१ (राजा महेन्द्रमल्ल) | गजूर मात्र ढल्केको |
| २. देगुतले सामुन्नेको ढुङ्गाको स्तम्भ | वि. सं. १७२७ (राजा प्रताप मल्ल) | पाताल |
| ३. काठमाडौं महादेवको | वि. सं. १६२१ | |

हनुमानढोकाका (काठमाडौं) अगाडिका देवलहरु



भूकम्प आघि



भूकम्प पछि

पाटन दरबार अगाडिका देवलहरु



भूकम्प अगि



भूकम्प पछि



देगुतले, पाटन (वि सं. १६९२) भूकम्प अगि



भूकम्प पछि



महाबौद्ध, पाटन (वि. सं. १६०८) भूकम्प अगि



भूकम्पपछि

| नाम | बनेको साल | कैफियत |
| --- | --- | --- |
| देवल (मूलकोतको पूर्व) | (राजा महेन्द्रमल्ल) | पाताल |
| ४. महाविष्णुको मन्दिर (मूलकोतको दक्षिण) | वि. सं. १६९४ र १७२४ को बीचमा | ” |
| ५. बसन्तपुर | वि. सं १७२७ ( राजा पृथ्वीनारायण साह ) | धेरै नोक्सानी |
| ६. रानीपोखरीको दक्षिणमा रहेको राजा प्रतापमल्ल हात्तीमाथि सवार गरेको ढुङ्गाको शालीक | वि. सं. १७२७ ( राजा प्रतापमल्ल ) | पाताल |

## ( २ ) पाटन

| | | |
| --- | --- | --- |
| १. देगुतले | वि. सं. १६९२ ( राजा शिवसिंहमल्ल) वि. सं. १७२१ मा आगलागि भई जीर्णोद्धार भएको | पाताल |
| २. च्यासिम देवल | वि. सं १७८० ( राजा नगेन्द्र-मल्ल ) | धेरै नोक्सान |

| नाम | बनेको साल | कैफियत |
|---|---|---|
| ३. महाबौद्ध देवल (बुद्ध-गयाको नमूना गरी बनाएको ) | वि. सं. १६०९ | फेदमात्र बाँकि |
| ४. विश्वेश्वर महादेव-को देवल(भाइदेवल) | वि. सं. १७३५ | पाताल |
| ५. कुम्भेश्वर | वि. सं. १७९४ | " |
| ६. मछिन्द्रनाथको देवल | वि. सं. १६७८ (वि.सं.१८९०को भूकम्पमा भत्की जीर्णोद्धार भएको ) | " |

## ( ३ ) भादगाउँ

| नाम | बनेको साल | कैफियत |
|---|---|---|
| १. भादगाउँ पुरानो दरवार | वि. सं. १५१० ( राजा यक्षमल्ल ) वि. सं. १७३४ मा जीर्णोद्धार भएको | धेरै नोक्सान |
| २.५५झ्यालेदरवार | वि. सं. १७५६ | " |
| | ( राजा भूपेन्द्रमल्ल ) | " |

कृष्णमन्दिर र विष्णुमन्दिर भादगाउँ (वि. सं. १७२४)



भूकम्प अगि



भूकम्पपछि

| नाम | बनेको साल | कैफियत |
|---|---|---|
| ३. कृष्णदेवल | वि. सं. १७३२ (राजा भूपेन्द्रमल्ल) | धेरै नोक्सान |
| ४. विष्णु-मन्दिर | वि. सं. १७१४ ( राजा जगतप्रकाशमल्ल ) | पाताल |
| ५. शिव-मन्दिर | वि. सं. १५१७ ( राजा यक्षमल्ल ) | ” |
| ६. भैरवको मन्दिर | वि. सं. १७४२ ( राजा भूपेन्द्रमल्ल ) | ” |
| ७. बाराही मन्दिर | वि. सं. १७२९ (वि. सं. १९१८मा मर्मत भएको ) | ” |

परन्तु पशुपतिनाथको मन्दिर अलिकति पनि बिग्रेन। वरिपरिका घर र अस्पतालहरू साऱ्है बिग्रेता पनि टुंडिखेलको माहाङ्कालथान—जुन कच्चा देखिन्छ—सद्दैनै रह्यो। स्वयंभू र बौद्धमा पनि बहुतै कम नोक्सान देखियो। यसरी ठूला-ठूला देवताहरूको देवालय न बिग्रेकोले मानिसको मनमा ईश्वर माथि भक्ति बढ्नु आश्चर्यको कुरा होइन।

## ( घ ) पूल, सडक, पाटि, पौवा आदि

पूलहरूमा भने नोक्सान कमै भयो, मानिसको आवत–जावतलाई विशेष बाधा परेन; किनकि मुख्य-मुख्य पूलहरू सद्देनै रहे, बिग्रेपनि थोरै मात्र बिग्रे। भीमफेदिबाट बीरगञ्ज जाने मोटरको बाटोमा कुनै पूल नभत्कनु भाग्यकै कुरा संझनु पर्द-छ। तर नेपाल सरकारको लाइट् रेल्वेको लाइनमा भने धेरैनै नोक्सान पर्नगयो र केही दिनको लागि आवत–जावत बन्द पनि भयो। राजधानी भित्रमा भादगाउँ जाने पूल समेत गरी अरू ३-४ ठाउँका पूलह-रूमा थोरै मात्र नोक्सान भएकोले ५-६ दिन भित्रै तयार भए। विष्णुमतीका २ पूल चूर भई भत्केता पनि अरू पूलहरू सद्देनै रहेकाले विशेष बाधा पर्न गएन। पूर्व पहाड पट्टि २ पूल बिग्रे। सडकहरूमा ठाउँ-ठाउँमा चिरा पर्न-गयो। कोही–कोही ठाउँमा मर्मत गरे पछि मात्र चलितको निमित्त तयार हुन शक्यो।

पाटि, पौवा, सत्तलहरूमा भने ज्यादै नोक्सान पर्न गयो। यस्ताको जीर्णोद्धार गुठीयार गुठीबाट हुने हो ता पनि पैसाको कम्तिले गर्दा धेरै उठ्न कठिन देखिन्छ।

यस्ता धर्म-स्थानहरूमा धेरै नोक्सान पर्नगएकोले जात्रु-हरूलाई ठाउँ-ठाउँमा विशेष कष्ट सहनु पर्ने भएको छ। सो सङ्कष्ट ज्यादा गरी पहाड तर्फ पर्नगएको छ।

पहाडमा, खास गरी उत्तर हिमाल पट्टि, दुइ तीन-वटा नामूद-नामूद गुम्बाहरू थिए। बौद्धमार्गी विद्वान्-हरूले यी गुम्बाहरूको विशेष आदर र मान गर्दछन्। उहाँका लामाहरूलाई वरिपरिका मानिसहरू ( भोटेहरू लगायत ) सबैले खूप मान गर्द थे। नांजे बजार ( पूर्व ३ नं. ) का गुम्बा सब भन्दा प्रख्यात छन्। तर यिनी-हरू भत्केर धेरै पुराना पुस्तकहरू र हस्तलेखहरूको नाश भयो—यो बहुतै अफशोसको कुरा संझनु पर्दछ। भाग्य-वश राजधानीमा सरकारले जम्मा गरेका पुराना-पुराना हस्तलेखहरूको केही नोक्सान भएन। यी पुस्तकहरू धेरै पुराना र अमूल्य हुनाले देशान्तरबाट बराबर विद्वान्-हरू हेर्न आउने गर्दछन्। यसैले विद्वानहरूमा यो पुस्त-कालय ( बीरलाइब्रेरि ) बहुतै प्रख्यात भएको छ। तसर्थ यसमा केही नहुनु भन्न खुशीको कुरा भयो।

# छैटौँ भाग

## औषधिको प्रवन्ध

ठूला-ठूला शहरदेखि लिएर साना-साना गाउँसम्म पनि मानिस घाइते नभएको कहीं थिएन। यसरी हजारौं जनहरू घाइते हुन आएकोले अस्पतालहरूमा ज्यादै भीड भयो। परन्तु अस्पतालहरूमा समेत धेरै नोक्सान पर्न-गएको र औषधिहरू राखेका ठाउँहरू पनि नबचेकोले घाइते बिरामीहरूको सम्भार र औषधि गर्ने काममा केही कष्ट पर्नगयो। त्यसमा थप, गाउँ-गाउँहरूमा औषधि गर्न मानिस पठाउने ठूलो आवश्यकता पऱ्यो, तर अस्पतालै-को काम भ्याउन कठिन भएको बखतमा बाहिर पठाउ-नालाई फाल्तु डाक्टर कम्पाउण्डर पाउन मुश्कील पर्न-गयो। तसर्थ अस्पतालमा काम चलाउनु भन्दा बाहिर-तिर ठाउँ-ठाउँमा प्रथम-चिकित्सा गर्न पाठाउनु विशेष कठिनताको काम हुनगयो। त्यस समयमा अस्पताल तथा मेडिकल विभागको कायम-मुकायमी तैनाथवाला म थिएँ। राजधानी पहाड र मधेश तर्फ सो विषयमा भए-को कामको छोटकरी बयान यहाँ लेख्तछु। ※

---

※ औषधि पाउनेहरूको संख्या पहिला परिशिष्टमा खुलासा लेखिएकोछ।

## ( १ ) राजधानी भित्र

राजधानी-खाल्टोमा भएका ५ अस्पताल र आयुर्वेदीय औषधालयका घरहरू धेरै बिग्रे। औषधिको नाश हुनगयो, अरु औषधि गर्ने सामान र मालतालहरू पनि टुटफुट हुनगए। बीर जनाना र मर्दाना अस्पताल भत्केकाले २ जना बिरामीहरू थिचिई मरे। अरू पुराना बिरामीहरू भाग्यले बाँचे। भूकम्पको अतासमा त्रि-चन्द्र मिलिटरी अस्पतालको एक खुट्टा भाँचिएको बिरामी काम्रो सहित बाहिर खुलामा भागी आएछ; यो बहुतै आश्चर्यको कुरा हो, यसबाट त्यस बखतको अतासको केही अड्काम गर्न शकिन्छ।

भूकम्प थामिएको केही बखत पछि देखिनै अस्पतालहरूमा ज्यादा भीड हुनलाग्यो। डरलाग्दो चोट परेका घाइतेहरू धमाधम आउन थाले। थोरै डाक्टर कम्पाउण्डरहरूले भ्याउनै मुश्कील भयो। भीड ज्यादै भएकोले त्रि-चन्द्र मिलिटरी अस्पताल ( जहाँ पल्टनियाँ जवानको ओखति हुन्छ ) पनि दुनियाँदारहरूको निमित्त खोलाउनु पर्‍यो। तर आत्तिएका शहर-वासीहरूले अस्पतालको

जग्गा ढाकिदिएकोले डाक्टरहरूको काममा झन् बाधा पर्न गयो। महाकाल थानको बायाँ र दायाँ टुंडिखेलमा सरकारिया पाल टाँगी घाइतेहरूलाई राखे। साना-साना घाउको औषधि खुला जग्गामै गरियो। ओखति गर्न आउनेहरूको भीड पहिला २-३ दिनसम्म धेरै थियो। अस्पतालमा राख्न लायक भएका जति भर्ना गरिएता पनि, कोही-कोही धेरै चोट लाग्नेहरू घरै बसी, ओखति गर्न मात्र अस्पताल आउने गरेकोले अस्पतालमा बस्नेहरूको गिन्ति धेरै नदेखिएको हो। सुत्केरीहरूलाई धेरै कष्टको समय भएकोले तिनीहरूको निमित्त जनाना अस्पतालमा एउटा भिन्दै ठाउँ छुट्याइयो। पाटन-अस्पतालमा बिरामीलाई भर्ना गरी औषधि गर्ने बन्दोवस्त थिएनता पनि भूकम्पको अवस्थाले गर्दा २० जनालाई भित्रनै राखी ओखति गर्ने प्रवन्ध भयो। भादगाउँको अस्पताल भत्केकोले घाइते-बिरामीहरूको लागि परालको छाप्रो तयार गरे। यी ५ अस्पतालहरूमा जम्मा ३६१ घाइते भर्ना भए। त्यस मध्ये करीब २५ घाइते अस्पतालैमा मरे। ओखति मात्र गर्न आउने बाहिरिया बिरामीहरूको संख्या भने धेरैनै थियो—

यी ५ हस्पतालका मात्र पनि ८३०० को गिन्ति पुग्यो। यी अस्पतालमा कुनै-कुनै भूकम्प-सेवकहरूले ड्रेसिङ्ग आदि काममा मद्दत दिएकाले गाउँ-गाउँतिर ओखति गर्न पठाउनालाई डाक्टर कम्पाउण्डरहरूको पनि केही संख्या बच्न गयो।

गाउँ-गाउँ पट्टि प्रथम-चिकित्सालाई चाहिने औषधिहरू दिई डाक्टर, कम्पाउण्डर, मिलिटरी सिपाही ( मेडिकल कम्पाउण्डर ) हरू पठाइए। तिनीहरू बाहेक कोही-कोही भूकम्प-सेवकहरूबाट पनि सो काम बहुतै राम्रो संग भयो। जताततै बाटो बिग्रेकोले ती प्रथम-चिकित्सा गर्न जानेहरूले घोडा चढी जानु पऱ्यो। मिलिटरी कम्पाउण्डरहरूलाई पहाड तिर १।२ नं० सम्म पनि पठाए। तर धेरै जस्ता मिलिटरी कम्पाउण्डर चार भञ्ज्याङ बाहिर गएका पल्टनहरूको साथमा भएकाले वहाँ रहनेहरूको गिन्ति बहुतै कम थियो। चार भञ्ज्याङ भित्र यी माथि लेखिएका सरकारी कामदारहरूबाट २७०० जनाको र स्वयंसेवकहरूबाट १९०० जनाको ओखति भयो।

यो माथिको काममा आयुर्वेदीय र युनानी औषधा-

लयहरूबाट पनि मदत भयो । कोही-कोही थरिमा डाक्टर-को औषधिमा भन्दा वैद्यको औषधिमा बढ्ता रुचि भए-कोले आफूखुशी काम गर्ने २६ जना ढाक्रे वैद्यहरूलाई सरकारी तर्फबाट औषधि दिई निजहरूलाई पाइपरेको गाउँ-गाउँमा औषधि गर्न पठाए । करीब २९०० जनाले आयुर्वेदी औषधि पाए ।

गाउँ-गाउँमा पनि ( खास गरी बुङमती, लुभु, पाँगा जस्ता बस्तिहरू ) काठमाडौं र पाटनका अस्पताल देखि धेरै टाढा परेकोले र घाइतेको गिन्ति पनि धेरै भएकोले चार भञ्ज्याङ भित्र ४ र बनेपा ( पूर्व १ नं० ) मा १ गरी जम्मा ५ टेम्पोरेरी अस्पताल खडा गरिए । चार भञ्ज्याङ भित्र किसिपिडि, लुभु, सानागाउँ, बुङमती, खोकना र पाँगामा रहेका यस्ता ४ अस्पतालहरूबाट करीब १५०० जतिको ओखति भयो । झण्डै २ महिना जति यी अस्पतालका शाखालाई कायम राख्नु पऱ्यो ।

ज्यादै कडा घाउ हुनेहरूलाई काठमाडौं वा पाटनको अस्पतालमा ल्याउनु पऱ्यो । तर गाउँका बासिन्दाहरूलाई अस्पतालको धेरै डर भएको हुनाले तिनीहरूलाई ल्याउन

लरि, ष्ट्रेचर पठाउँदा पनि करीब ४० जना मात्रै अस्पतालमा ल्याउन शके। यो काम भूकम्प-सेवकहरूबाट भयो। कसै-कसैले डाक्टरहरू आउँदा लुकी, औषधि नगरी, आफ्नो ज्यानसम्म पनि गुमाएको बुझिन्छ। यो बडो अपशोसको कुरा हो। यस्ता थरिको ओखति गर्नु बहुतै गाऱ्हो हुन गयो। यिनीहरूको गिन्ति—खास गरि गाउँमा—धेरै ठूलो थियो।

मानिसहरू जहाँ पायो उहीं बस्ने र फोहर सुघरको ख्याल नराख्ने भएकोले रोग उठि हाल्ला कि भन्ने खूप डर थियो। त्यसको बचावटको लागि हैजा, टाइफ्वायड र बिफरको इञ्जेक्सन गर्नलाई चाहिने सर्जामहरू विदेशबाट झिकाए। राजधानी भित्र मानिस बसेका ठाउँमा सफाई, जाँच गर्न डाक्टरहरू जान्थे। भूकम्पको ३-४ दिनसम्म पानीको ज्यादा अभाव भएकोले कूवा, पोखरीको पानी फोहर नमानी चलन गर्नुपर्ने अवस्था हुनगयो; यसैले स्वयं-सेवकहरू ठाउँ-ठाउँमा गई कूवा, इनारहरूको पानीमा ओखति हालि दिए। म्यूनिसिपलिटिले पनि यस विषयमा आफ्नो काम गऱ्यो। भाग्यवश कुनै रोग उठेन—

यो ईश्वरको असीम कृपाको फल थियो। पछि कुनै रोग उठेको भए, कस्तो महामारी हुन्थ्यो भन्न शकिदैन। यस्तैको बचावटको निमित्त डाक्टर कम्पाउण्डरहरूलाई तपसीलका कुराको राम्रो ख्याल राख्नू भन्ने उर्दि थियो:—

( १ ) आफ्नो विभागको सफाइ र रोग बारेमा जाहेर गर्ने।

( २ ) रोग नउठोस् भन्नाको लागी आफूले देखेको उपाय जाहेर गर्ने।

( ३ ) कुनै रोग उठ्ने बित्तिकै जाहेर गरिहाल्ने।

अस्पतालको लागि कोही-कोही सज्जनहरूले दूध, रग, पाल र पलङहरू पठाइदिए। त्यसबाट धेरै मद्दत हुनगयो।

## ( २ ) मोफसल (पहाड)

मोफसलका अस्पताल र औषधालयहरूमा पनि धेरै नोक्सान पर्नगयो, साना-साना भएता पनि बच्न शकेनन्। मधेशमा भन्दा पहाडमा ओखतिगर्ने ठाउँको कम्तिछ; उल्टो, पहाडैमा घाइतेहरूको संख्या बढ्ता भएकोले त्यहाँका

अस्पतालहरूलाई औषधि गर्नमा पनि बहुतै बाधा पर्न-गयो। राजधानीबाट नजिकै परेका ठाउँमा त पल्टनियाँ कम्पाउण्डरहरू सदरबाटै पठाइए; तिनीहरूबाट ३४० जवानको प्रथमचिकित्सा पनि भयो। बनेपा ( पूर्व १ नं.) मा एउटा असल कम्पाउण्डरको जिम्मामा १ टेम्पोरेरी अस्पताल करीब १॥ महिनासम्म रह्यो। त्यसबाट करीब १५० को ओखति भयो। त्यस ठाउँमा वैद्यहरू पनि पठाइए। पहाडतर्फ, त्यहींको अस्पताल र औषधालयबाट ३७६ जनाको औषधि भयो। सो र यहाँबाट पठाइएका मानिसहरूबाट गरी अन्दाजी १०३२ जनाको औषधि भयो। पश्चिम तिर बहुतै कम घाइते भएकोले त्यसतर्फका अस्पतालहरूलाई केही काम परेन। पहाडका गाउँहरूमा नाउ वा फाक-फुक गर्नेहरूबाट पनि धेरैको ओखति भएको बुझिन्छ। यस्ता किसिमबाट औषधि हुनेहरूको गिन्ति राख्न असम्भवको कुरा छ।

## ( ३ ) मधेश

मधेशतर्फ मृत्यु-संख्या झैं घाइतेको गिन्ति पनि कमै भएकोले भत्केका अस्पतालहरूबाट पनि केही औषधि

हुन शक्यो । पूर्व मधेश तर्फ करीब ३०० घाइतेको औषधि भयो । बीरगञ्जका घाइतेहरूलाई ओखतिगर्ने काममा रक्सौलको मिसनरी अस्पतालबाट पनि मद्दत भयो । बीरगञ्ज र भीमफेदि अस्पतालहरूबाट भूकम्प गएको २-३ दिन भित्र नै खबर आयो, परन्तु अरू ठाउँको खबर उति चाँडो आउन शकेन । खबरलाई, पर्खेर केही फायदा नभएकोले त्यस ठूलो भूइँचालोको केही दिन बाद राज्यभरका धेरै जस्ता अस्पतालहरूलाई जरूरी खर्चको निमित्त यति-यति रुपियाँ दिनू र बिरामीहरूको राम्रो हिफाजत गर्न लाउनू भनी ठाउँ-ठाउँका माललाई सरकारी तर्फबाट उर्दि गयो । तर तारबाट पठाएको भएता पनि सबै समाचार टुटेकोले खबर चाँडो पुग्न शकेन ।

गिन्ति गर्दा राज्यभरमा (प्रथम-चिकित्सा लगायत) जम्मा १६५०० जना जतिको औषधि भयो ।*

खास गरी राजधानीमा कोही डाक्टर र स्वयं-सेवक-

---

* यो माथिको संख्या बेग्ला-बेग्लै छुट्याई पहिला परिशिष्टमा लेखिएको छ ।

हरूको परिश्रम सहितको काम बहुत तारीफ-लायकको थियो। जति दुःख परे पनि दुःखमा सुख मानी ठाउँ-ठाउँमा गई घाइतेको उद्धार गर्ने र यी माथिका काममा मलाई सहायता दिने ती सज्जनहरूलाई यो दफा खतम गर्नु भन्दा अघि मेरो हार्दिक धन्यबाद प्रकट गर्न चाहन्छु।

# साता भाग

## "भूकम्प-सेवक"

दुःखी जनताको आर्तनादले कल्पेर कोही-कोही देशका शुभ-चिन्तक र राजभक्तहरू दीन-दुःखीको सेवामा तत्पर भए। सज्जनहरूमा यस्तो रुचि देखेकोले र यस्तो समयमा यस्ता मानिसको ठूलो दरकार परेकोले एउटा "भूकम्प-सेवक-दल" खडा गरे। त्यस्तो दुःखको समयमा पीडितसेवाकर्मकर्ताहरूको सञ्चालक बन्ने सौभाग्य मिलेकोमा म मेरो भाग्य संझन्छु। ती कर्ताहरूको मुख्य हे० मा० रुद्रराज थिए। यो उद्योगमा श्री पं० क० ज० ( हाल चीफ ) पद्मशम्शेर र ज० सूर्यशम्शेरबाट समयानुकूल सहायता र प्रोत्साहन मिल्दै गएकोले र सबै

भूकम्प-सेवकहरूको पूर्ण सहयोग पाएकोले पनि त्यस महासङ्कष्टको समयमा केही न केही दुःखी गरीबहरूको सेवा हुनशक्यो। यी सेवकहरूको संख्या करीब डेढ शयसम्म पुगेको थियो। अहिलेसम्म यस्तो काममा केही शिक्षा नपाएका भएता पनि दुःखीको उद्धार गर्ने काममा हिकमत हारेनन्, खूप राम्रो सेवा गरे।

सर्व-प्रथम, हाम्रा यी "भूकम्प-सेवक" हरूले अस्पतालमा मद्दत दिने र बस्तिको जाँच गर्ने काम गरे। ठाउँ-ठाउँबाट घाइतेहरू ओसार्न लरि स्ट्रेचरहरू लिएर पनि गए। कहीं आमा विरामी थिईं, दूधको बालक भोकै मर्नलागेको थियो; ओखति थियो, तर पथ्य थिएन; माघको महिना सुत्केरीको आङ ढाक्ने लुगा फाटो थिएन। यस्ता ठाउँमा भूकम्प-सेवकहरू दूध, चामल र लुगा फाटो बाँड्न पुगे। औषधि गर्न जान्नेहरू प्रथम-चिकित्सालाई चाहिने ओखतिहरूको व्याग (थैलि) भिरेर शहर, काँठ, गाउँ इत्यादिका कुना-कुनासम्म पनि पुगे। रेगुलर ट्रिट्मेण्ट (दिन-दिनै औषधि फेर्नु) को निमित्त अस्पतालका शाखा खोलिएका ठाउँमा पनि सहाय दिन तिनीहरू पुगे। ठाउँ-ठाउँमा यिनी-

हरूद्वारा कूवा, इनारको पानीमा औषधि हाली खान हुने गरियो। यिनीहरूनै पुलिस-अड्डाहरूलाई, अस्पतालहरूलाई, टेलिफोन-अड्डालाई र डाँकघर समेतलाई मदत दिन पुगे।

कहाँ केको जरूरी छ, कहाँको जनता केले पीडित छ, कहाँ पालो-पहराको आवश्यकता छ इत्यादि कुरा जाँच बुझ गरेर सरकारमा जाहेर गर्ने काम पनि यिनीहरूले गरे। कहाँ कुन दरभाउमा कुन चीज बिक्री हुन्छ त्यो बुझ्ने काम पनि तिनीहरूले गरे। कहाँ कति सफाइ छ, कहाँ छैन, के गर्नाले त्याहाँको सफाइ होला, कहाँ कति मरे, कति बेपत्ता छन्, कति घाइते भए, कति भोक-भोकै छन्, घरहरूको अवस्था कस्तो छ इत्यादि कुराको जाँच बुझ गरी भिन्दा-भिन्दै रिपोर्ट म्युनिसिपल-अड्डालाई र पुलिस-अड्डालाई दिने काम पनि यी आफूखुशी काम गर्नेहरूको हातबाट भयो। फलानो ठाउँमा यति मन्दिरहरू भत्के भन्ने कुराको रपोट म्युनिसिपल र पुलिस–अड्डालाई दिने र भोकै परेका मानिसहरूको लगत सरकारमा चढाउने काम पनि यिनीहरूले गरे। कोही-कोही दाताहरूले

रुपियाँ, लुगा, कपडा र दूधको थोर-बहुत मद्दत पनि यो दलमा पठाइदिए ।

भूकम्प-सेवकहरूले गरेका कामहरू यहाँ छोटकरीमा लेखिन्छन्:—

(१) अस्पतालमा मद्दत दिने ।

(२) घाइते बिरामीलाई प्रथम-चिकित्सा गर्ने ।

(३) सफाइ-जाँच गर्न जाने र कूवामा पोटास हाल्ने ।

(४) ठाउँ-ठाउँबाट घाइतेहरूलाई बोकी अस्पताल ल्याइदिने ।

(५) बजारको दरभाउ बुझ्ने ।

(६) भत्केका मन्दिरहरूको नाम टिप्ने ।

(७) पुलिसलाई रपोट जम्मा गर्ने काममा मद्दत दिने ।

(८) पीडितहरूलाई लुगा, दूध, चामल बाँड्ने ।

(९) पुरिएका मुर्दा झिक्ने, झिकलाउने ।

(१०) टेलिफोन आफिस र डाँकघरमा मद्दत दिने ।

(११) बस्तिहरूको जाँच गर्ने ।

(१२) दुःखी गरीबहरूको नाम टिप्ने ।

आफ्नै घर भत्केको भए ता पनि आफ्ना जाहानलाई

खेत, बारि, चउरमा राखी स्वार्थको केही ख्याल नगरी पीडितहरूको उद्धार गर्नाको खातीर भोक, प्यास बिर्सी निरन्तर कर्तव्यको पालन गरे ।

यो सबै श्री ३ महाराजको मधेश तर्फबाट सवारी फिर्नु भन्दा अगाडिको कृत्य हो । सवारी फिरेकै दिन श्री ३ बाट यी सेवकहरूको उद्योग उपर प्रशंसा गरिबक्सियो । फाल्गुन १८ गते टुंडिखेलमा सारा भूकम्प-सेवकहरूलाई आफ्नो अगाडि ल्याई हार्दिक धन्यबाद प्रकट गरिबक्स्यो । सरकारबाट यस्तो शुभकामको कदर गरिबक्सेकोले अब उप्रान्त सबैको सुकर्मपट्टि रुचि बढ्नजाला भन्ने आशा गरिन्छ ।

यो भूकम्प-सेवामा लाग्नेहरू मध्ये धेरै जस्ता माष्टर र छात्रवर्ग थिए * । यिनीहरु बाहेक पनि अरु बाहिरिया थोर-बहुत थिए । ती सबै सेवकहरूको सेवाको बेग्लै-बेग्लै

* त्यस मध्ये कोही-कोहीलाई पटना युनिभर्सिटिको जाँच दिनुपर्ने भएकोले सो युनिभर्सिटिसँग लेखापढी गर्नु पर्‍यो, कारण उसबेला शिक्षा-विभाग पट्टि पनि मैलेनै हेरेको थिएँ । पटनातर्फ पनि धेरै नोक्सान भएकोले जाँचलाई ४ महिनाको टाइम थप भयो ।

बयान यहाँ लेख्ने विचार छैन। लेखूँ भने एक किताबै बन्नजाने सम्भव छ । तिनीहरूको पूरा प्रशंसा यो हातबाट हुन शक्तैन, न त यस्ता निस्वार्थी सेवकहरू प्रशंसा खोज्दछन् । मलाई पूरा मदत दिने यी हाम्रा देशका सत्पुत्रहरूलाई बारंबार हार्दिक धन्यवाद समर्पण गर्दछु।

माथि लेखिएको भूकम्प-सेवक-दल बाहेक अरू-अरू स्वयं-सेवकहरूका दल पनि खडा गरिए । तिनीहरूको नाम तल दिइन्छन्:—

(क) "महाराज सर्भेण्ट सोसाइटि"—यसमा देशी विदेशी गरी करीब ५० जवान जति थिए । त्यसको सञ्चालक ए. हनुमानप्रसाद कायस्थ थिए। मारवाडी साहूहरू र अरू सज्जनहरूले यसमा गरीबहरूको उपकारको निमित्त चामल, दूध, रुपियाँ इत्याति पठाए। तिनीहरूबाट तपसीलमा लेखिएका कामहरू भए :—

( १ ) गरीबहरूलाई लत्ता–कपडा, चामल, दूध इत्यादि बाँड्ने ।

( २ ) घाइतेहरूको औषधि गर्ने ।

( ३ ) जिउँदा र मरेका मानिसहरूलाई झिक्ने

( ख ) "जुद्ध-सेवा-संघ"—यस दलमा जम्मा हुनेहरूको संख्या थोरै थियो ता पनि पुरिएका जिउँदा र मरेका मानिसहरू झिक्ने काममा धेरै मेहनत गरे। यो बाहेक घाइ-तेलाई ओखति गर्ने र अरू अवस्थानुसार चाहिने काम पनि यो दलबाट भयो। माघ २० गते देखि यी सबै दलहरूले गरिरहेका काम पनि सरकारै तर्फबाट हुने प्रबन्ध भयो।

भूकम्प–पीडितहरूको दुःख हटाउन हर तरहबाट यत्न गरेका यी स्वयं-सेवकहरूको प्रशंसा गर्न कुन दिलले न चाहला ?

# आठौं भाग

## भूकम्प—पीडितोद्धारक-रीलिफ-फण्ड र विदेशीहरूको सहानुभूति

भूकम्पको खबर थाहाहुनासाथ विदेशहरूबाट नेपाल सरकारमा सहानुभूतिको वर्षा हुनथाल्यो। वेलायत लगा-

यत अरू विदेशहरूबाट समेत आयो। हिन्दुस्थानका बडा पुरुषहरूमध्ये कवि रवीन्द्रनाथ ठाकुर, पं० मदनमोहन मालवीयहरूबाट सहानुभूतिको तार आयो। इण्डियन-मेडिकल-सोसाइटि र मारवाडी-रीलिफ-सोसाइटिहरूले "सहायताको दरकार परे समर्पण गर्दछौं" भनी तार पठाए; तर सबैलाई धन्यवाद र कृतज्ञता जनाई जवाफ गयो। मारवाडी-रीलिफ-सोसाइटिलाई तल लेखिएको उत्तर गयो :—

"तारको निमित्त धन्यवाद। अहिले सहायताको दरकार छैन।"

यो कुरा र भारत-सरकारबाट पनि नेपाललाई सहायता दिने इच्छा प्रकट गरेकोमा नेपालबाट "त्यहाँ पनि नोक्सान पर्नगएकोले सहायता स्वीकार गर्न चाहन्नम्। यसरी दुवै देशमा नोक्सान परेको वखतमा आफ्नो सहायता आफैले गर्नाको आवश्यकता छ" भन्ने जवाफ गयो भनी विश्वमित्र छापामा छापिएको थियो। यो जवाफ प्रशंसा योग्यहो भनी २५ फेब्रुअरी (१९३४) को एक अङ्ग्रेजी छापामा लेखिएको थियो। बेलायतले पनि ने-

पालको निमित्त धेरै फिक्रि मानेको छ भनी १९९० साल माघ महिनाको खबर थियो।

राजधानीमा भूकम्प गएको केही दिन पछिदेखिनै २।३ भूकम्प-सेवक-दल खडा भई, आफू-आफूमा चन्दा उठाई, गरीबहरूलाई मद्दत दिनलागे। कसैले पैसा, कसैले लुगा कपडा, कसैले चामल दिये *। सरकारबाट पनि यस्तो काम भयो। सो बारेमा अरू ठाउँमा पनि लेखिसकेको हुनाले पाठकहरूलाई यादै होला। १९९० साल फाल्गुन १८ गतेको स्पीचमा तपसीलको वचन द्वारा "भूकम्प–पीडितोद्धारक-फण्ड" श्री ३ बाट खोलिबक्सेथ्यो :—

"यो दुर्घटनाले पीडित भएका निराधार दीन दुःखीहरूको उद्धार, सुधार, सहायताहरू गर्नाको उद्देश्यले "भूकम्प-पीडितोद्धारक-संस्था" खडा गरी त्यसमा "भूकम्प-पीडितोद्धारक-फण्ड" भन्ने नामको एउटा फण्ड खोलिबक्सेको छ। त्यसमा हामी-बाट तीन लाख र बडा-महारानीबाट एक लाख जम्मा चार लाख रुपियाँ राखि-

* यो विषय सातौं भागमा विवरण गरिसकेको छ।

बक्सेको छ । यो ठूलो पुण्यकार्यमा हामी पनि द्रव्य अर्पण गर्न चाहन्छौं भनी खुद आफ्नै इच्छाले श्रद्धा गरी अर्पण गर्न ल्याएको द्रव्य यो फण्डको संस्थाबाट यही सत्कार्यमा लगाइने छ । दिनेहरूको नामपनि प्रकाशित हुने छ ।"

यस फण्डबाट उठेको दाम "भूकम्प-पीडितोद्धारक-संस्था" अड्डाबाट नै खर्च गर्ने प्रबन्ध भयो । अहिलेसम्म सो फण्डमा कं. रु. र नोट रु० गरी करीब २६२०० र मो. रु० १०७५००० जति जम्मा भएको छ । खालि श्री ३ र अरू आठ नौ जना भाइ-भारादारहरूबाट मात्रै मो. रु. १०५०००० जति उठ्यो । विदेशबाटकरीब नोट रु. (कं० रु.) २२००० र मो. रु. २१००० मात्र आए मध्ये बेलायतबाट करीब नोट रु. २८००, जापानबाट नोट रु० ८९०० र हिन्दुस्थानबाट नोट रु. १०५०० र मो. रु. २१००० आयो* । सो फण्डमा दाम पठाउनेहरूले हुलाकबाट वा आफैले मुलूकीखानामा पठाएमा वा लगेमा सो अड्डाले बुझिलिन्छ । विदेशीहरूले अक्सर बृटिश मिनिष्टर मार्फत वा श्री ३ का हजुरमा पठाउने गरिराखेका

*दाताहरूको नाम तेस्रो परिशिष्टमा परेकोछ ।

छन् । त्यसरी आएको रुपियाँ मुन्सीखानाले फण्ड विभाग-को मुलूकीखानामा दाखिल गर्ने गरेको छ।

तर यो लेखिरहेकै बखतसम्म पनि दाताहरूबाट थोर बहुत केही आइरहेकै हुनाले फण्ड बन्द हुनु भन्दा अगाडि केही हजार बढ्ता उठ्ने सम्भव छ। सो फण्डमा जम्मा भएको दामबाट तल लेखिए बमोजीमको काम-काममा खर्च भएको र हुने भइरहेको छः—

( १ ) बिग्रेको घर बनाउन नशक्नेलाई बकस दिने।

( २ ) खान नपाउनेहरूलाई सिधा दिने।

(३) नयाँ बाटो सडक बनाउने काममा लागेको खर्च।

(४) बाटो सडक र दुनियाँको घर पन्छाउन र अरू यस्ता काममा भर्ना भएका भर्तीहरूको तलब दिने।

(५) पूर्व पहाडका खेती गर्न बिउ नहुनेलाई अन्नको बिउ खरीद गरी बाँडिदिने।

(६) सापटी र फण्डको रुपियाँ दिने काममा फाँट फाँटमा समेत सरकारिया अफिसर, कारिन्दा-हरू खटिएका छन्, त्यसले नपुगी थप भर्ना भ-एका म्यादी कारिन्दा जतिको तलब खर्च।

१९९१ साल फाल्गुनसम्मको "भूकम्प-पीडितोद्धारक-फण्डको" आम्दानी खर्चको फाँटवारी लेखिएको छ :—

## आम्दानी

| मो. रु.—— | कं. रु.— | नोट रु. |
|---|---|---|
| १०७५१०४।६५ | १४७२ | २४८०० |

## खर्च

| असामी | फाँट-फाँटबाट बाँडी खर्चभएको | खर्च हुन लागि रहेको |
|---|---|---|
| | मो. रु. | मो. रु. |
| १. काठमाडौं शहर——— | ६०२१० | १७३०० |
| २. पाटन शहर———— | २२०९० | १९०५० |
| ३. भादगाउँ शहर——— | १६३९० | ३६०० |
| ४. राजधानी ४ भंज्याङभित्र-का गाउँहरू———— | ७७२५० | ६४०० |
| ५. पहाड ( घर बनाउनाके ) | १४५५० | १९३९०० |
| ६. पहाड (अन्नकोबिउ बाँडनाके) | २०००० | × |
| ७. खान नपाउनेके (राजधानी) | ६२००० | × |

| | | | |
|---|---|---|---|
| ८. ऐ. | ऐ. ( पहाड ) | १०००० | × |
| ९. भर्तीको तलब र बाटो सफा पार्नाके | | ८२५५६ | १०५००० |
| १०. अड्डा र कारिन्दा खर्च | | १७३०० | × |
| | जम्मा | २८२३४६ | ३४५२५० |

# नवौं भाग

## घरबास मर्मत गर्नें कामपट्टिको बन्दोवस्त र मद्दत

### ( १ ) राजधानी

घर भत्केकोले सडकहरू माटो इँटले पुरिएका थिए, जान आउनको साह्रै कठिन थियो । त्यसैले पहिलो कामनै यी सडकहरू खुला गरेर आवत-जावत सजिलो गराउने हुनआयो । भूकम्प गएको केही दिन बाद नै यस कामको शुरू भयो । राजधानी ३ शहरमा यो काम शुरूमा केही दिन पल्टनियाँ जवानहरूबाट भयो ता पनि यसमा धेरै मानिस चाहिने भएकोले कोही-कोही गौंडाहरूमा "भर्तीहरू

जम्मा गर्नू" भन्ने उर्दि गयो। पछि पल्टनमा खालि हुँदा यिनै भर्तीहरूलाइ नै भर्ना गर्ने भन्ने भएकोले भर्ना हुन आउने भर्तीहरूको गिन्ति झन् बढ्नगयो। तलब महिनाको ८ देखि १० रुपियाँसम्म थियो। ३ शहर बाहेक चार भञ्ज्याङ भित्र अरू गाउँ-गाउँमा पनि यी भर्तीहरूबाटै काम चलाइयो। सो बाहेक पनि भाइभारादार दुनियाँहरू कहाँ हजारौं अरूले जागीर खान पाए। पश्चिम १ नं. र पूर्व २ नं. सम्मबाट धेरै जस्तो आए, तसर्थ यी पहाडियाहरूले राजधानी भित्र निकै काम पाए।

पूलहरू धेरै नै बिग्रेकोले, मुख्य-मुख्य पूलहरू हप्ता दिन जति मै तयार भए। कुनै-कुनै पूल भत्के पनि एक ठाउँदेखि अर्को ठाउँमा आवत-जावत बन्द हुने गरिकन बिग्रेनन् यो एउटा भाग्यकै कुरा हो। भादगाउँ जाने बाटो मोटरको लागि ४ दिनमा र साँखु जाने करीब ७ दिनमा तयार भयो। तर चापागाउँ जाने मोटरको सडक (बीचबीचमा अरू गाउँ परेकोले) २ महिनामा मात्र तयार भयो। यी बाहेक अरू सडकहरूमा नोक्सान मामुली नै थियो। बाहिरका बाटाहरू भन्दा शहर भित्रका सडकहरू

खुलाउन बढ्ता टायम लाग्यो, कारण स्पष्टै छ। शहर भित्रका मुख्य-मुख्य सडकहरू केही महिना मात्रमा बिलकुल तयार भए। काठमाडौंमा २ महिना जति लाग्यो, पाटनमा २॥ महिनामा सिद्धियो, भादगाउँलाई ४ महिना लाग्यो। गाउँ-गाउँमा त ५-६ महिना पछिसम्म पनि सफा गर्दै थिए। थुप्रा-थुप्रा पारिराखेका माटो, इँटहरू सं. १९९१ चैत्र सम्म पनि फ्याँकिंदै छ।

सडकमा माटोको थुप्रो सफा पार्न शुरूभएको साथसाथै कसै-कसैले आफ्ना बिग्रेका घर मर्मत गर्ने काम गरेता पनि धेरै जस्ताले भूकम्प गएको २५-३० दिन पछि मात्र, अर्थात् चैत्र महिनादेखि मात्र घर बनाउन पट्टि लागे। वर्षा नजीकै आएको र चाँडै मर्मत नगरे वर्षाले झन् बिगारिदिने देखिएकोले सबै आफ्ना घर बनाउने काममा सोही महिनादेखि दृढ भएर लागे। तर पैसा कम्ति भएको वखतमा झन् काठ पात, इँट महँगो भएरगयो।

घर बनाउनामा मुख्य आपत् डकर्मी, बज्रकर्मी र सिकर्मीहरूबाट भयो। यिनीहरूको ज्यादा दरकार भएकोले यिनीहरूले पहिलेको भन्दा बढ्ता ज्याला लिन

थाले । यिनीहरूको गिन्ति भन्दा चाहा र खोजी नै बढ्ता भएकोले र घर बनाउनेहरूले भित्र-भित्रबाट यिनीहरूलाई बढ्ता ज्याला र खाजा दिन लागेकाले र यसो नगरेको खण्डमा यिनीहरू नआउने पनि भएकाले यिनको निरख दर कायम रहन शकेन ।

क्रमै सँग घर बनाउन पाएको भए वा कालिगढहरूको संख्या ज्यादा भएको भए आफ्ना देशकै कालिगढहरूबाट सबै काम चल्ने भई ज्यालामा जो भएको खर्च आफ्नै देशमा रही बेस हुने थियो ता पनि सबैलाई एकै बाजि काम परेको र भत्केका घरको संख्याको दशांश पनि कालिगढको संख्या नभएको हुँदा देशबाट कालिगढहरू झिकाउने काम भयो । देशबाट झिकाएका कालिगढहरू चाहे देखि जरूरत परेका दुनियाँलाई पुऱ्याइदिने नपुगे अरू पनि झिकाइदिने कुराको सरकार तर्फबाट प्रबन्ध भएको थियो । तर त्यसतर्फ लोकको इच्छा नभई यहींका कालिगढलाई बरु पर्खेर बस्ने इच्छा गरेका हुनाले अरू बढी कालीगढ झिकाउने काम भएन । सरकारले र भाइ–भारादारले मधेश, मुग्लानबाट डकर्मी र सिकर्मी

पथ्थराहरू झिकाए। तिनीहरू मध्ये धेरै जना मजफ्फरपुर, दरभङ्गा, बनारस, प्रयाग, गोरखपुर र पञ्जाबबाट आएका थिए। तिनीहरूको संख्या २००० जति थियो।

ती मध्यिशे डकर्मी, सिकर्मीहरू आएकाले दुनियाँहरूले यहाँका डकर्मीहरूबाट केही काम लिन पाए ता पनि डकर्मीहरूको प्रश्न छुट्नगएन। धेरै जस्ता डकर्मी, सिकर्मीहरूले अवस्थाको फायदा लिई ज्याला बढी-बढी लिने गरे। त्यसले गर्दा सबैलाई घर बनाउने खर्च विशेष बर्ता पर्नगयो। तर बासको लागि साबीकको भन्दा २-३ दोबर महँगै भए पनि सबैले आफ्ना घर बनाउन कम्मर कसे। छिंडिसम्म भए पनि बस्नको निमित्त बनाउन वा मर्मत गर्न लागे। आफूसँग भएको पैसाले घर बनाउन शक्ने थोरै मात्र थिए, नपुग्नेहरूले अरूकहाँबाट, कसै-कसैले मात्र सापटी पाउन शक्ने हुन्थे।

गाउँ-गाउँमा दुनियाँहरूले परस्परको मदतले आफ्ना घर पालैसँग उठाए। तर शहर पट्टि यस्तो कारवाई बहुतै कम भयो।

घर पातालै भएका र पैसाको दुःख पाएकाहरू मध्ये धेरै जसाले छाप्रोमा अथवा कसैको घरमा बाहाल तिरी

बस्ने गरे । यिनीहरू मध्ये खास गरी मझौला दर्जाका मानिसहरूको संख्या बढ्ता देखिन्छ । श्री चीफ लगायत अरू धेरै ठूला-ठूला मानिसहरू समेत बङ्गालामा अथवा टहरामा राजभइरहेको छ । साबीकको घरमा सर्ने कमै मात्र छन् । तर अर्को वर्षसम्ममा त सबै भारादारहरूको र अरू साधारणको पनि बासको ठेगान लाग्ला भन्ने आशा छ ।

राजधानी भित्रका दुःखी गरीबहरूले घर बनाउनाको निमित्त अहिलेसम्ममा तपसीलमा लेखिए बमोजीम "रीलिफ-फण्ड" बाट बकस पाइसके । सो बाँड्दा सापटी लिई तिर्ने हविगत नभएकाहरूलाई छानी-छानी बाँडियो । यो काम चैत्र महिनादेखि शुरू भयो । राजधानी भित्र मो. रु. २०६५०० बाँडियो, अर्थात् काठमाडौं शहरमा मो. रु. ६७५००, पाटन शहरमा मो. रु. ३५०००, भादगाउँ शहरमा मो. रु. २००००, र अरू भञ्ज्याङ भित्रका गाउँहरूमा मो. रु. ८४००० जति पर्न गयो ।

सो बकस बाँड्दा तल लेखिए बमोजीम गरियो :—

( १ ) घर जाँची आफ्ना साबगासले घर बनाउन नसक्ने, सापटी लिई तिर्न नशक्नेहरूलाई मात्र बाँड्ने ।

( २ ) तीन शहरमा मो. रु. ५ देखि मो. रु. २०० सम्म र अरू चार भञ्ज्याङ भित्रका गाउँहरूमा मो. रु. १०० सम्मको दरले बाँडियो । त्यस भन्दा बढी दिनालाई भूकम्प-पीडितोद्धारक-संस्था मार्फत निकासा लिई बाँड्ने गरेको थियो ।

सो कामको लागि काठमाडौं शहरमा ४, पाटन शहरमा २, भादगाउँ शहरमा २, काठमाडौं शहर बाहिर फेरा गाउँमा २, पाटन शहर बाहिर फेरा ६, भादगाउँ शहर बाहिर फेरा २, फर्पिङमा १ र बनेपामा १ जम्मा २० फाँट गरी अफिसर, हाकिम, कारिन्दा समेत खटिई गएका थिए ।

राजधानी ( ३ शहर ) र बनेपामा घर बनाउनेहरूलाई मद्दत दिनाको खातीर उपल्लो ४ वर्षसम्मलाई निर्ब्याजी सापटी दिन मो. रु. ५० लाख परसारी श्री ३ बाट "भूकम्प-पीडित-सहाय-ऋण" फाल्गुन महिनामा खोलि बक्सेको कुरा लेखिसकिएको छ ।

सो ऋण वैशाख महिनादेखि बाँड्न शुरू भयो । त्यो सापटी (ऋण) बाँड्ने कायदा यहाँ छोटकरीमा लेखिन्छ:-

( १ ) "रीलिफ-फण्ड" बाट बकस पाइसकेकाहरूलाई सापटी नदिने ।

( २ ) तिर्न शक्ने हैसियत पुगेकालाई बकस र तिर्न नशक्ने दुःखीलाई सापटी न दिने ।

( ३ ) सापटी दिंदा मानिसको औकात र घर, जमीन अनुसारसम्म लेखी दिन हुने ।

( ४ ) दोश्रा, तेश्रा पटक दिनालाई पनि घर बनाए नबनाएको र रुपियाँ खर्च भए नभएको अड्डाम गरी मात्र दोश्रा, तेश्रा पटक बाँडिदिने बन्दोवस्त भएको थियो, पछि ९१ साल माघसम्ममा सबैलाई एकै पटक दिने बन्दोवस्त भयो ।

( ५ ) काठमाडौं, पाटन र भादगाउँ यी तीन शहर भित्रलाई पकी घरको निंति मो. रु. १५०० सम्म खटिएका हाकिमहरूले दिने, सो भन्दा बर्ता दिनुपर्ने ठहरिएकोमा संस्थामा रिपोर्ट गरेर संस्थाले जाँची निकासा दिने ।

( ६ ) माथिका यी तीन राजधानी—शहर बाहेक

अरू चार भञ्ज्याङ भित्रका गाउँहरूमा पक्की घरको निंति मो. रु. ५०० सम्म र कच्चीको निंति मो. रु. १०० सम्म दिने ।

"भूकम्प-पीडित-सहाय-ऋण" को १९९१ साल फाल्गुन महिनासम्मको आम्दानी खर्चको फाँटवारी तल लेखिएको छ ।

## "भूकम्प-पीडित-सहाय-ऋण"

### आम्दानी

मो. रु. ५०००००० ।

### खर्च

| असामी | फाँट-फाँटबाट बाँडी खर्च भएको मो. रु. | खर्च हुन लागि-रहेको मो. रु. |
|---|---|---|
| १. काठमाडौं शहर | १२५०३०० | ७२०० |
| २. पाटन शहर | ५६३९२० | ११००० |
| ३. भादगाउँ शहर | ३६८९८० | ५६००० |
| ४. राजधानी ४ भञ्ज्याङ-भित्रका गाउँहरू | ४०२१९० | ३८५०० |

| | | |
|---|---|---|
| ५. बनेपा (पूर्व १ नं.) र फर्पिङ १०२० | | २९००० |
| ६. कर्कटपाता सस्तो मोलमा झिकाई बेच्नाके | ४२४२८० | × |
| जम्मा | ३०१०६९० | १४१७०० |

सो बाहेक घर बनाउनेहरूलाई मद्दत दिन ३ शहर राजधानीमा तपसीलको बन्दोवस्त पनि भयो :—

तपसील

( १ ) सरकारले कर्कटपाता विदेशबाट झिकाई रोप्वे महसूल घटाई भन्सार 'वकुवाना' माफ गरी घर बनाउनेहरूलाई सस्तो मोलमा वेचियो । करीब मो. रु. ४ लाख जतिको बिक्रि भयो ।

( २ ) काठ कटनि गराई परल मोलमा म्युनिसिपल अड्डाको दरखास्त लिई घर बनाउनेहरूलाई दलिन सत्तरि वेचियो ।

( ३ ) ठाउँ-ठाउँमा ईँटको अवाल र चून, भट्टा खोलाई सस्तो मोलमा ( अर्थात् ईँटको लागि १००० को मो. रु. ९ र चूनको लागि मो. रु. १ के ७ पाथिको दरले ) वेच्ने बन्दोवस्त भयो ।

( ४ ) पाइ पर्ने र नजीकका जङ्गलहरूबाट १९९१ साल ज्येष्ठसम्मलाई डाँडा, भाटा काट्न खुलाइबक्सियो। त्यस कामको निमित्त ३ जर्नेल र १२ अफिसरहरू पनि खटिएका थिए। गाउँ-गाउँका मानिसलाई चाहिने डाँडा भाटा इत्यादि काठहरूको अमालिबाट लगत लिई उनीहरू-बाट कटाउन लगाई, दिलाउने बन्दोबस्त भएको थियो।

यो पुस्तक लेखिएको बखतसम्ममा शयकडा ७० घर तयार भएको अन्दाम छ। पश्चिम १ नं. देखि पूर्व इलाका र ४ भन्ज्याङ भित्र घर हुने सरकारी नोकरहरू ( जङ्गी, निजामती दुवै ) लाई वर्ष दिन भरिमा तलबबाट कट्टी गरिसक्ने गरी ४-४ महिनाको पेस्कि समेत बाँडियो। त्यसले पनि तिनीहरूलाई घर बनाउन मदत भयो।

सरकारी घर, मन्दिर इत्यादि—

सरकारी घर र अड्डाहरू मर्मत गर्ने काम कोही-कोही ठाउँमा शुरू भइशकेको छ। राज्यभर जतासतै सरकारी घर भत्केकोले सबै मर्मत गर्न धेरै टायम मात्र होइन कि धेरै खर्च पनि लाग्नेछ।

मन्दिर र कला-कौशलका ईमारतहरूको जीर्णोद्धार

गर्ने काम पनि पछि नै शुरू हुने भएको छ। थोरै बिग्रेका देवलहरू मर्मत गर्न शकिए ता पनि चूर-चूर भएका पुराना-पुराना नेपालका कालिगढीका चिन्हहरू भने सधैंको लागि लोपहुने भए—यो अपशोचको कुरा छ। तिनीहरूको ठाउँमा नयाँ बनाए पनि धेरै समय लाग्न जाला।

दुनियाँदारी पाटि पौवा, सत्तलहरू पनि धेरै नै बिग्रेका हुनाले गुठी नभएका वा गुठी नासिसकेकाहरूको तयार हुन मुश्कीलैको कुरा देखिन्छ।

तर मानिसको बासको धन्दा नछुटेसम्म त्यस पट्टि कत्ति पनि दृष्टि जाओइन। १९९२ सालदेखि मात्र पाटि पौवा देवलहरू पट्टि गुठियारहरूले वास्ता गर्लान्। सरकार तर्फबाट धेरै ठाउँमा बन्न शुरू भएको छ।

सरकारी दरबारहरू लगायत अरू धेरै घरहरू पहिलेको भन्दा साना बनाउने विचार भएको छ। तर ठूला घर बनाउनामा विशेष चाहा हुने कोही-कोहीले पहिलेको भन्दा घर ठूलो बनाएको पनि देखिन्छ। ३ शहर मध्ये यो कुरा विशेष पाटन-मा देखिएको छ। यस्तो रुचि असल संझन हुँदैन।

सडक धेरै चौडा नभई खालि तला मात्र बढाउनु पछिका भूइँचालामा झन् बढ्ता नोक्सानलाई निमन्त्रणा दिनु जस्तै हो ।

देशमा धेरै नाश भए ता पनि, स्वास्थ्यलाई ठीक नगर्ने पुराना ढाँचाका बस्तिहरूको ठाउँमा स्वास्थ्य-विज्ञान मुताविकको खुला बस्ति बसाल्ने मौका यस्तै हो । यस विषयमा जापानले लोकलाई राम्रो सँग बाटो देखाएको छ । विहारले पनि जापानकै शिक्षा पछि लाग्ने विचार गरेको बुझिन्छ । यहाँ शहरहरूमा कोही घर भत्केका, कोही न भत्केका, कोही मर्मत गरेर साबूद हुन-सक्ने पनि धेरै हुनाले सारा घर भत्काई सडक चौडा गराउने काम गर्नु ठीक देखिएन । काठमाडौं शहरमा बसन्तपुरदेखि टुंडिखेलसम्म एउटा ठूलो र सफा सडक बनाउने प्रबन्ध भएको छ ।

आजकाल घर बनाउनेहरूले पनि साबीककै कायदामा घर उठाएका छन् । भूकम्पले देखिएको परिणाम संझी गारो, छानो बलियो पार्ने काम थोरैले मात्र गरेका छन् । तसर्थ घर उठेता पनि पछिको भूकम्पबाट बच्न

शक्ने घर बन्यो भनी संझन हुँदैन। अहिले उठाइएका घरहरू पहिलेका जस्तै कमजोरी छन् भन्ने लाग्दछ।*

## (२) पहाड—

पहाडतर्फ धेरै घर ढुङ्गो र माटोबाट बनाइने हुनाले र भूकम्पबाट भत्केका घरहरू बनाउनेहरूलाई "सनदले बन्द भइरहेका रुखहरू पनि काट्न दिनू" भन्ने सरकारबाट गौंडा-गौंडालाई सनद उर्दि भएको हुनाले धेरै जस्ताले आफ्नो बासहरूको उठान गरिसके ता पनि उठान गर्न नशक्नेहरू कोही-कोही छन्। घर उठाउनेहरूलाई पनि खर नपाइएकोले घर छाउन मुश्कील थियो। अब वर्षा बाद जङ्गलमा खर हुने भएकोले त्यो ल्याएर छाउन शक्ने छन्। तर सिकर्मी, डकर्मीले ज्याला महँगो गरेका हुनाले घर बनाउनामा धेरैलाई मुश्कील पर्न गएको बुझिन्छ। यस्तो भए ता पनि आफू बस्नै पर्ने हुनाले घर बास उठाउन करै लाग्यो।

त्यस तर्फ बैशाख महिना सम्ममा घर बनाउन नश-

---

* भूकम्प निवारक घर विषय दशौँ भागमा लेखिएको छ।

क्नेहरूलाई बाँड्न निकासा भई गएको र हाल पौष–माघमा भएको बन्दोबस्त र निकासा तल लेखिएको छ।

## ( क ) १९९१ साल वैशाखमा निकासा भएको रुपियाँको फाँटवारी

| इलाका ( पूर्व ) | घरबारी पैन्हामा परेका जवान १ के रु. ५०।को दरले। | | भत्केको घर बनाउन नशक्ने के घर १ के रु. २५। को दरले (पू. ३।४ नं. मा मात्र) | | |
|---|---|---|---|---|---|
| | जम्मा घर | जम्मा रु. | जम्मा घर | जम्मा रु. | जम्मा |
| १ नं. | १० | ५०० | × | × | ५०० |
| २ नं. | १५ | ७५० | × | × | ७५० |
| ३ नं. | २० | १००० | ८७ | २१७५ | ३१७५ |
| ४ नं. | १९ | ९५० | २६७ | ६६७५ | ७६२५ |
| सिंधुलिगढी | १० | ५०० | × | × | ५०० |
| उदयपुरगढी | १० | ५०० | × | × | ५०० |
| धनकुटा | २० | १००० | × | × | १००० |
| इलाम | १० | ५०० | × | × | ५०० |
| जम्मा— | ११४ | ५७०० | ३५४ | ८८५० | १४५५० |

## ( ख ) १९९१ साल पौष-माघमा निकासा भएको

पश्चिम १ नं. देखि पूर्व इलामसम्म ११ ठाउँमा सदरबाट अफिसर खटिई, जिल्ला-जिल्लाका बडाहाकीम र मिलिसियाका १।१ अफिसरको मद्दत लिई, घर बनाउन नशक्ने रैतिलाई ( अघि जिल्ला-जिल्लामा गइरहेको दाममा थप बाँड्ने गरी ) २ लाख जति बाँड्ने भै गएका छन्। पहिले तिनीहरूको लगत ठीक गरी कच्ची घरलाई मो. रु. ५ देखि ५० सम्म र पक्कीलाई मो. रु. १०० सम्म फण्ड-बाट दिने बन्दोबस्त भएको छ। बाबु, आमा, वा इष्टमित्र नभएका केटाकेटीहरू कोही भए, त्यस्तालाई र भूकम्पको सम्बन्धले जमीन नभएकालाई जमीन दिलाइदिने; खेती-पाती गर्न नशक्ने, जमीनको आमदबाट खान नपुग्नेलाई मो. रु. २० सम्म दिने—यी काम पनि माथिकै अफिसर औ दामबाट गरिने भएको छ। सो खर्च "भूकम्प-रीलिफ-फण्ड" मा जम्मा भएको दामबाट हुने भएको छ।*

* आठौं भागमा दिएको 'भूकम्प-रीलिफ-फण्ड' को हिसाबमा हेर्नुहोला।

## ( ३ ) मधेश—

बीरगञ्ज, जलेश्वर, हनुमान नगर, विराट नगर जस्ता शहरहरूमा धेरै पक्की घर भत्कन गएकोले चाँडैनै फेरि घर (सरकारी र दुनियाँ लगायतको) उठाउन सजिलो देखिँदैन। तर गाउँ–गाउँका साना–साना घरहरूमा नोक्सान पनि कम औ नोक्सान भएका पनि सजिलैसँग उठाउन शकिने भएकोले धेरैजस्ता उठिसके।

घर बनाउनु वा मर्मत गर्नुपर्ने दुनियाँदारलाई घर बनाउन मद्दत होओस भनी "भूकम्पका सबबले घर भत्कनेहरूलाई घर बनाउन जङ्गलबाट सालको लकडी पनि घर हेरी दिनू" भन्ने जिल्ला–जिल्लाका बडाहाकीमलाई उर्दि गएको छ।

# दशौं भाग

## अब घर बनाउँदा ध्यान दिनुपर्ने कुरा

नेपाल पृथ्वीको बराबर भूकम्प हुने भागमा परेको बुझिन्छ, त्यसमा पनि खास गरी यो पालि नोक्सान पर्न गएका ठाउँहरू नै देखिन्छन् भनी भूगर्भ-विद्या जान्नेहरूले

भनेका छन्। योकुराको पुष्ट्याइँ इतिहासबाट पनि मिल्छ। तसर्थ हाल र भविष्यमा भूकम्पबाट बच्ने किसिमको घर वा शहर बनाउनाको बहुतै आवश्यकता देखिन्छ।

अब पछिका नयाँ घर बनाउनेहरूलाई केही फायदा हुनजाला भन्ने हेतु र इच्छाले यो परिच्छेद यहाँ घुसाएको हुं। भूकम्प–निवारक घर कस्तो हुनु पर्दछ भन्ने कुरा बाहेक पनि नेपालका घरहरूमा के के कैफियत वा कमजोरी रहेछ भन्ने कुराको ज्ञान यो महा-भूकम्पबाट भयो।

सर्व प्रथम राजधानी र मोफसल तर्फ समेत जाँच गर्न आएका भूगर्भ–विद्वान् र इञ्जिनियर मिष्टर अडेनको उपदेश लेख्तछु * :—

## ( १ ) "घर बनाउन असल कंसल जग्गा—

"सम्वत् १९९० को भूकम्पको बयान बिहार-प्रान्तमा नपाइए ता पनि यहाँ (नेपालमा) राम्रो सित पाइएकोले यो राय प्रकट गर्न खूप मदत भयो। सं० १८९० र १९९० का भूकम्पहरूले गरेका नोक्सानीहरू घटी बढी छन् ता पनि ठाउँहरू मिल्न आएको देखिनाले जमीनको

* यो उपदेश गोरखापत्रमा पनि प्रकाश भएको थियो।

गुणानुसार धेरै नोक्सान हुने वा नहुने जग्गाहरू हुँदा-रहेछन् भन्ने अनुमान गर्न शकिन्छ। यसै कारणले भाद-गाउँ, हरिसिद्धि, खोकना र बुङ्मतीको भेकलाई भूकम्प हुँदा सब भन्दा ज्यादा नोक्सान हुने जग्गा र पशुपतिनाथ, बौद्ध र गोकर्णका भेकलाई सब भन्दा निर्भयको जग्गा भन्ने ठहराइन्छ। स्वयंभूनाथ र कीर्तिपुर पनि निर्भयको ठाउँ हो, तर यी दुवै सान्है साना हुनाले शहर पूर्व-दक्षिणतर्फ बढाउनु बढिया छैन। नेपाल-तराइमा विशेष गरी नदी नाला र पोखरीहरूको नजीक घर बनाउनु ठीक देखिंदैन। यस कारण अब उप्रान्त घर बनाउँदा भूक-म्पले ज्यादा बाधा गर्ने वा नगर्ने ठाउँको विचार गर्नु-पर्ने जरूरी देखिन्छ। पशुपति, बौद्ध, गोकर्ण र नयाँ बिजुली-को काम भएको सुन्दरीजल पट्टि नै शहर बढाउनु ठीक पर्ला।

## (२) "भूकम्प-निवारक-घर—

"जमीनको गुणानुसार मात्र भूकम्पबाट हानि हुने होइन, घरको बनावट, त्यसमा लागेको माल, सामान र कालिगढीमा पनि हानि ज्यादा वा कम हुने कुरा निर्भर

गर्दछ । किन भने ज्यादा नोक्सान भएका घरहरू धेरै-तला भएका, गुम्बज, लठ्ठा भएका, धेरै झ्यालहरू भए-का, एउटा घर सँग अर्को घर दाँति नमिलाई जोडिएका, बाहिर पट्टि सग्लो ईंट बीचमा टुक्रा हाली बनेका, गारोमा बन्धन नभएका माथिल्लो भागमा ज्यादा बोझ भएका, वज्र नलगाई माटोमा बनेका—देखिये । अब उप्रान्त कुनै ईमारत खडा गर्दा यी दोषहरू नरहने गर्नुपर्दछ। राम्रो गरी एक नास सँग पाकेको चौरस मिलेको ईंट काममा लाउनुपर्दछ। नेपालमा ईंट राम्रो सँग नपोलिएको देखियो। विहारया पाको ईंटमा राम्रोसित वज्र लगाई बनाएका घर धेरै बचे। यहाँ पनि तेलिया ईंटले राम्रो गरी दाँति मिलाई बनेको घर वज्रमा बनेको नभएता पनि नोक्सान भएको कम देखिन्छ । असल माल, सामान लगाए वा सामान नभए ता पनि असल कायदा साथ घर बनाए नोक्सानी जरूर कम हुँदोरहेछ भन्ने देखिन्छ । ठूला-ठूला घर, दर-बार बन्दा सामान र कायदा दुवैको विचार राख्नु पर्दछ। साना-साना घर कम खर्च गरी बनाउँदा यी कुराको खूब याद राख्नुपर्दछ :—

"पाको र काँचो मिसावट ईँटको घर १ तले भन्दा अग्लो हुन हुँदै-न । पहाडमा धेरै जस्ताको घर ढुङ्गाले बनेको हुन्छ । ढुङ्गाको घर बनाउँदा ढुङ्गालाई राम्ररी काटी, मिलाई, लाउनु पर्दछ । अथवा चारपाटेगरी काटेको पक्षमा गारो बलियो हुन्छ । छानो हलुका गर्नु पर्दछ । काठ वा नर्कट ( निगालो ) बाँसले बनाएको घर भूकम्पको निमित्त बहुत मजबूत हुन्छ । डल्ला-डल्ली ल्याई, थुपारी बनाएको घर भूकम्पमा अड्दैन । यसको प्रत्यक्ष प्रमाण धरान र उदयपुरगढीमा मिल्यो । ईँट शकेसम्म बज्रमा लाउनु पर्दछ। माटोमा लाएको गारो भन्दा बज्रमा लाएको गारो पातलो पारे पनि हुने हुनाले बज्रको खर्च, ईँट कम लागेकोबाटै धेरै-जसो उपर हुन्छ। फेरि मजबूत समेत हुने हुनाले आखिर यसैमा किफायत ठहर्न आउँछ। ईँटको घर ३४ हात भन्दा बढ्ता अग्लो हुनु ठीक छैन। जापान-मा त जस्तै मजबूत सामान लाए पनि ६७ हात भन्दा अग्लो घर बनाउन पाइन्न। साधारण रीतिले बनेको घरमा लठ्ठा गुम्बज नहाल्नू, झ्याल धेरै नहाल्नू, यसले गारो कमजोर हुन्छ। गारोमा बन्धन हाली एउटाले

अर्कोलाई अड्याउने गर्नुपर्दछ। घर जोड्दा अघिको गारोमा दाँति, जोड मिलाई एउटा घर जस्तो पारी भूकम्प हुँदा जम्मै एक भई हल्लिने, आफूसमा ठक्कर नखाने तुल्याउनु पर्दछ। गारोको बीचमा पनि सग्लै ईंट हाली, जोड मिलाई बनाउनु पर्दछ। टुक्रा हाली बनेको बाक्लो गारो भन्दा सग्लो ईंट हाली जोड मिलाई बनेको पातलो गारो मजबूत भई, ईंट समेत कमलागी किफायत हुन्छ। छानाको लागि मट्टीतेलको कनिष्टर पिटी त्यसले छाए, राम्रो नदेखिए ता पनि, पानी राम्रै गरी बग्दछ। सर्वसाधारण दुनियाँलाई बढिया सामान पुगिसरि नआउने हुनाले उनीहरूका घरको छाँट यस्तो हुनुपर्छ कि बढिया सामान नभए ता पनि भूकम्प हुँदा जिउ-ज्यानको खतरा कम हुने होस्, अर्थात् काँचो पाको ईंटको घर शकेसम्म हलुको छाँटबाट १ तले मात्र बनाउनू। ईंटका लठ्ठाहरू भन्दा काठका थामहरू बढिया हुन्छन्। छानो शकेसम्म हलुको होस्। तेलिया ईंटले बनेको वा साधारण पाका ईंटका वज्रमा बनेका घरहरू मात्र १ तला भन्दा बढ्ता उँचा हुन शक्तछन्।

## ( ३ ) बनाउने समय—

"हिन्दुस्थानी छापाहरूमा भूकम्प भएको ठाउँमा जमीनको नोक्सानको हालत हेरी वर्ष दिन देखि २ वर्षसम्म घर बनाउन हुन्न भनी लेखिएको छ । तर नेपालका जमीनका अवस्थाको तुलना बिहार सँग गर्दा धेरै फरक पाइन्छ । तसर्थ यहाँ मर्मतको काम अहिले ( १९९१ सालमा ) नै शुरू भए पनि केही हानि छैन । धेरै ठाउँमा शुरू भइसकेको पनि छ । समयको बारेमा केही संकोच मान्नुपर्ने कुरा छैन । तर बनाउने सामान र कायदा भने पहिलेको भन्दा अलि बदल गरी शकेसम्म भूकम्प निवारक बनाउनु पर्दछ । यो भएको छ छैन । ठूला-ठूला घरहरू नयाँ बनाउने हकमा वर्षा खतम नभई माल सामानै जुट्ने छैन । त्यस पछि भने निस्सन्देह बनाउने काम शुरू गरे हुन्छ । तराइका एक दुइ ठाउँमा जमीन फाटेको र बालुवा निस्केको अलि बर्ता भएका ठाउँमा पनि वर्षा पछि मर्मत गर्न शुरू गरे ठीक हुन्छ ।"

खास गरी हाम्रो देशमा इञ्जिनियरहरूको लागि यो कम्प अद्भुत हुनआयो । घर बनाउँदा पछिलाई के कुराको

होश राख्नुपर्दछ वा कुन भागमा बढ्ता बलियो पार्नु-पर्दछ भन्ने कुरा दृढ गर्न कठिन पऱ्यो । कारण, एक ठाउँमा शिकेको अर्को ठाउँमा हेर्दा उल्टो देखिने पनि भयो । तसर्थ इञ्जिनियरहरूमा आफूस–आफूसको राय पनि नमिल्ने देखियो । तर यस्तो भए ता पनि अहिलेसम्म त एक किसिमको दृढ राय बनेको बुझिन्छ ।

भूकम्पको लागि रिइन्‌फोर्स्‌-ड्‌ कङ्क्रिट* ले बनेको घर जस्तो बलियो अरू कुनै हुँदैन भनी सबै इञ्जिनियरले

---

*फलामको दलिन र सिमेण्टको गारो राखी बनेको घर । सिमेण्ट बनाउने कायदा प्रो. खडानन्दशर्माले तलको वचन द्वारा बताएका छन् :—

"सिमेण्ट बनाउने उपाय—

"चुनौटे ढुङ्गा २५ मन, बालुवा अथवा ढुङ्गा नमिसिएको घर बनाउने असल कालोमाटो ७० मन, खियाको रङ्ग भएको असल फलामे ढुङ्गा ५ मनलाई पानी सँग घट्टमा पिँधी, मसीनो धुलो पारी, ज्यादै गरम आँचमा सुकाई, चून अथवा ईँट पोल्ने भट्टामा पोली, जाँतोमा वा घट्टमा पिँधी मसीनो धुलो पार्नु पर्दछ । नयाँ धुलो काम लाग्दैन । यस कारण, यो धुलोलाई आठ दस महिना त्यसै पडिरहन दिई अनि काममा लाउनू ।"

एकै स्वर गरी भनेका छन्। यहाँ यस्तो किसिमको घर नभएकोले त्यसको भाउ स्पष्ट देख्न शकिएन ता पनि विदेशतिरका भूईंचालाहरूले यो कुराको सत्यता देखाएका छन्। जापानको भूकम्प ( १९८० साल ) मा इँटले बनेको घर शयकडा ५४ भत्केका ठाउँमा कङ्क्रिटका घरहरू शयकडा १० मात्र भत्के भनी लेखेका छन्। तसर्थ अब नयाँ घर बनाउनेहरूले शके भने कङ्क्रिटको घर बनाउनु उचित छ भनी भनेका छन्। यहाँ राजधानी–खाल्टोमा किफायत साथ सिमेएट बन्न पनि शक्तछ। यस्तो एक कारखानाको खूप दरकार पनि देखिन्छ भनी कलकत्ताको जार्डिन नाउँ गरेका एक असल इञ्जिनियरले भनेका छन्। तर सिमेएटको घर बनाउन धेरै खर्च लाग्ने भएकोले थोरैले मात्र यसको फायदा उठाउन शक्तछन्। तसर्थ साधारण दुनियाँको लागि—जसको गिन्ति धेरैछ—यो कुराबाट केही फायदा छैन। बढिया सामान काममा लगाउन नशक्ने, मामुली तरह सँग मर्मत गर्न इच्छा गर्नेहरूको लागि एक इञ्जिनियरको राय यहाँ लेख्तछु।

## ( क ) सानाघर विषय

घरको सब भन्दा कमजोर भागः—किलास, गारो, ( दलिन नराख्नु परेकाले ) यसको बचावट—नसलामो राखी चुकूल ठोकी ४।५ वटा दलिनसम्म तान दिनुपर्दछ। पाको काँचो इँट मिलाई बनाएको गारोमा खालि चिरिए-को मात्र भए दायाँ बायाँको एक-एक इँट झिकी, माटो गोबर मिलाई, घोली, कोचिदिनुपर्दछ ।

## ( ख ) ठूला घर विषय

कमजोरी देखिएको भाग—किलास, गारो, गुम्बज, छाना । गुम्बजको बचावट—चिरिएको भए चिरिएको ठाउँमा सिमेण्ट या वज्रको टिपकार दिनुपर्दछ । किलास गारोमा सत्तरिसम्म तान दिनुपर्दछ; १० फीट उचाइ २ फीट चौडाइ भएको गारो २-३ इञ्च ढल्के पनि विशेष हानि हुँदैन ।

अघि लेखिएको मिष्टर अडेनको राय बहुत स्पष्ट छ ता पनि निज सज्जन विरानो मुलुकको वासिन्दा हुनाले हाम्रो हालत अवस्थाको पूरा ज्ञान भएको होइन। तसर्थ निजको राय अनुसार चल्न केही बाधा पनि पर्न जाने

होला । यस निमित्त यहाँको एक असल इञ्जिनियर क. प. जङ्गविक्रम राणाको उपदेश र विचार लेख्तछु । तपसीलमा लेखिए बमोजीम बनेका घरहरूमा भूकम्पबाट बर्ता नोक्सान पर्न गएको देखियो :—

## तपसील

( १ ) काँचो, ज्यादा पाको वा चिरिएको इँटले बनेका र माटो लगाई बनेका भित्ताहरू ।

( २ ) थोरै चौडाइ भई उँचाइमा ज्यादा अग्लो भएका घरहरू ।

( ३ ) छाना गन्हौं भएका घर ।

( ४ ) दाँति राम्रो सँग नमिलाई बनेको गारो ।

( ५ ) गुम्बज ।

( ६ ) धेरै ढोका झ्याल भएका घर ।

( ७ ) खराब जमीनमा जग पर्न गएका र जगको चौडाइ कम भएका घर ।

( ८ ) पोका पोकी, दलान बर्ता भएका घरहरू ।

( ९ ) राम्रो जोड नमिलाई पछि थपिएका लङ, कोठाहरू ।

( १० ) इँटका लठ्ठाहरू ।

( ११ ) कम चौडाइ तर ज्यादा वर्ता लम्बाइ भएका घर ।

( १२ ) बीचमा भन्दा छेउ-छेउका कुनामा अग्लो भएका घर ।

अब घर बनाउँदा तल लेखिएका कुराहरूको विचार राख्नु उचित छ:—

( १ ) जग बलियो र मजबूत गराउनुपर्दछ। त्यसको गहिराइ जमीनको गुण हेरी हुन्छ । त्यसको गज पूरा हुनुपर्दछ, यसो गर्नाले भूकम्पको असर धेरै जग्गामा फिँजिने हुन्छ ।

( २ ) इँट असल हुनुपर्दछ ( पालिसदार इँट सब भन्दा उत्तम हो ) ।

( ३ ) घरको सबै भागमा राम्रो सँग दाँति मिला-उनुपर्दछ, अर्थात् छुट्टा-छुट्टा भाग हुन नपाओस् ।

( ४ ) झ्याल-झ्यालको बीचमा प्रशस्त जग्गा राख्नुपर्दछ ।

( ५ ) पोका पोकी औ मोफतका बुट्टाहरू कम राख्नुपर्दछ ।

( ६ ) हुनशके फलामको सत्तरि र सिमेएट राखी घर बनाउनू । चून वज्रको गारो पनि मजबूतै हुन्छ । चून वज्र लगाई बनाउँदा खर्च बर्ता हुनजाने हो ता पनि ईँट कम लगाए पनि हुने हुनाले त्यस तर्फबाट केही किफायत हुनजान्छ।

( ७ ) ईँटको लठ्ठा भन्दा काठको लठ्ठा बढिया औ बलियो हुन्छ ।

( ८ ) भित्ताको कुना-कुनाको दाँति राम्रो सँग मिलाउनुपर्दछ ।

( ९ ) गुम्बज बनाउँदै नबनाउनू । ढोका झ्याल माथि कोपु हाल्नु बढिया छ ।

(१०) घर बनाउँदा उचाइ कत्रो गर्नुपर्दछ भन्ने कुरा काममा लगाइने माल सरजामबाट अनुमान गर्न शकिन्छ । असल सरजामले बन्ने घर केही अग्लो भए पनि हुन्छ, तर उँचाइ जति कम उति बढिया ।

(११) छानो शकेसम्म हलुको होस् । कर्कटपाता नपाउनेहरूले मट्टीतेलको टिनको छानो हाल्नु

उचित छ । यसबाट पानीको पनि बचाउ हुन शक्तछ ।

(१२) धनीहरूले रिइन्फोर्स्-ड् कङ्क्रिटको घर बनाउनू वा वज्रको गारो राखी झ्याल ढोकामा कोपु हाल्नू । साधारण मानिसहरूले माटोको गारो राख्नू; तर घर भने होचो हुनु पर्दछ । गरीबहरूले साना-साना घर, झुपडि हलुका वस्तुको छानो राखी बनाउनुपर्दछ ।

घर, ईमारत बनाउने पद्धि मात्र होइन, शहर निर्माण सम्बन्धको कुरामा समेत हाम्रो ज्ञान बढ्न गएको छ । यो कुरामा जापानले सबै लोककाई बाटो देखाएथ्यो । भूकम्पले ध्वस्त पारेका शहरहरूको ठाउमा झन् राम्रा, ठूला औ मजबूत शहरहरू उत्पन्न गराएथ्यो । साना-साना गल्लि, सडकहरूबाट भूकम्पमा धेरै ज्यानको नोक्सान हुनगएकोले तिनीहरूले ठूला-ठूला सुग्घर सडकहरू बनाए। तसर्थ हाल जापानका शहरहरू भूकम्पको लागि निर्भय मात्र होइन कि अघिको भन्दा धेरैनै स्वास्थ्यमा हानि नपार्ने र सफा सुग्घर भएका छन् भनी भन्दछन् । शहर

निर्माण गर्ने मौका यस्तै हो भन्ने कुरा जापानले तारीफ-लायक हुने गरिकन देखायो, जसको लागि उसको सबैले पूरा प्रशंसा गरेका छन् ।

हाम्रो देशमा पनि ध्वस्त भएका घर, ईमारत र शहरको धुलोबाट पहिलेको भन्दा राम्रो, बलियो औ सुग्घर वस्ति भएको शहर उत्पन्न हुन जाओस् भनी प्रार्थना गर्दछु ।

# एघारहौँ भाग

## भूकम्पको वैज्ञानिक जाँच

यो महाभूकम्पको कारण के हो, नेपालमा कुन-कुन जग्गामा बढ्ता नोक्सान पऱ्यो, सब भन्दा कडा कम्प कुन ठाउँमा गयो भन्ने इत्यादि कुराहरूको ज्ञान तपसीलमा लेखिएको बयानबाट मिल्दछ । यहाँ भूकम्प जाँच्ने यन्त्र ( सिस्मोग्राफ ) नभएको ले भूईँचालोको वैज्ञानिक विकास लिन शकिएन, नत परकम्पहरूको ठीक गिन्ति राख्न शकियो । तसर्थ यो परिच्छेदमा लेखिएका कुराहरूको लागि विदेशीहरू सँग ऋणी छौं ।

प्रथम, भूगर्भ-विषयमा जाँच गर्नालाई नेपाल-सरकार बाट १९९१ साल चैत्रमा ( अंग्रेज-सरकारबाट मँगाइ ) ल्याइबक्सेको एक प्रख्यात भूगर्भ-विद्वान् मिष्टर जे. वि. अडेनको रपोट लेख्तछु। परन्तु, सो रपोट भूगर्भ-शिक्षा सम्बन्धी र जमीनको माटो जाँच सम्बन्धी भएकोले प्रशस्तै लामो छ। यहाँ त्यसको आवश्यक कुराहरूकेलाई सबैले बुझ्न शक्ने सानो रपोट (जुन गोरखापत्रमा पनि छापिएको थियो ) सो मात्र लेख्तछु।

## ( १ ) भूकम्पको कारण

भूकम्पका दुइ कारण छन्-

(१) ज्वालामुखी पर्वत सम्बन्धी—पृथ्वी भित्रको बल्ने वस्तु द्वारा जमीन भित्रका पत्थर, धातु इत्यादि पग्लने भई, त्यसको बाफ निस्कन खोज्दा भित्र खलबल मचिई, एक किसिमको लहर चली, भूकम्प हुन्छ। यसलाई ज्वालामुखी सम्बन्धी भूकम्प भन्दछन्। यो धेरै टाढासम्म जाँदैन।

( २ ) जमीनको बनावट सम्बन्धी—जमीन बन्दै आउँदा तह माथि तह बस्तै आउँछ। यी तहहरू मध्ये

कुनै ठाउँमा कुनै तहहरू माटोँको गुणले कमजोर भई बखत-बखतमा आफू माथिको बोझ थाम्न नशकी टुट्न-जानाले अरू तहहरूमा खलबल पर्छ र जमीनमा एक किसिमको लहर चली भूइँचालो जान्छ। यसलाई जमीनको बनावट सम्बन्धी भूकम्प भन्दछन्। यसले टाढासम्म फिंजिएर ज्यादा नाश गर्दछ। यस्ता ठाउँमा फेरि-फेरि पनि भूकम्प गइरहने हुन्छ।

नेपाल-देश भरमा ज्वालामुखी पर्वत भएको चिह्न पाइँदैन। ताप्लेजुङ ( पूर्व ३ नं. ) मा ज्वालामुखी फुटी गाउँ घर जम्मै ध्वस्त पार्‍यो भन्ने खालि हल्लै मात्र रहेछ। तसर्थ यस देशमा र बिहारमा समेत गएका भूकम्पहरू जमीनको बनावटैको कसरबाट भएका बुझिन्छन्। यस कारण नेपाल र बिहार-प्रान्त पृथ्वीको बराबर भूकम्प जाने भागमा परेको बुझिन्छ। तसर्थ नेपालमा पछि हुने भूकम्प देखि बचावट हुने प्रबन्ध गर्नु अति आवश्यक छ।

## ( २ ) नेपालमा परेको बिगारको बयान

### राजधानी-खाल्टोको

नेपाल राजधानीखाल्टोमा परेको बिगार तीन तहमा छुट्याउन शकिन्छः—

( १ ) सब भन्दा ज्यादा नोक्सानी दक्षिण-पूर्व भाग पट्टिको उच्च जमीनमा रहेछ। यो ठाउँ भादगाउँ देखि लिएर लुभु, सानागाउँ, हरिसिद्धि, बुङमती र खोकनासम्म पर्दछ। यी ठाउँमा भूकम्पको वेग १ सेकण्डको १०.७ फीट थियो।

( २ ) दोस्रो तहमा काठमाडौं, पाटन, साँखु र थानकोटको आसपासका गाउँ पर्दछन्। यही तह भित्र धेरै दरबारहरू पर्दछन्।

( ३ ) तेस्रो तहमा अरु बाँकि ठाउँहरू पर्दछन्। कीर्तिपुर, सिम्भू (स्वयम्भू), पशुपति र वरिपरिका डुङ्ग्यान् डाँडाहरूमा उत्तिको नोक्सान भएको छैन। गोकर्ण, मनहरा र सुन्दरीजल फाँटमा पनि कमै नोक्सान भएको देखियो।

सब भन्दा बढ्ता नोक्सान भएको ठाउँमा पनि एकै किसिमको नोक्सानी देखिन्न। भादगाउँका सडकमा लहरै रहेका घरहरूमा पनि कुनै सडकमा ६ मा ६ नै, कुनैमा ९ मा ७, ६ मा ५, र ५ मा २ घर नोक्सान देखिन्छ। यसको कारण पहिले पनि दिइसकेको छ। भूकम्पको तोड

जमीनको गुण हेरी हुन्छ, डुङ्ग्यान ठाउँमा भन्दा बलौटो, फुस्रो जग्गामा भूईंचालो बढ्ता बेगले जान्छ। तेलिया इँटका दाँति मिलाई बिनाएका घर मध्ये धेरै जस्ता साबूतै छन्। दरबारहरूमा शोभाको निमित्त दाहिने बायाँ तानिएका खण्डहरू बिग्रेका देखिन्छन्। बजारका घरहरू धेरै जस्ता इँटबाट बनेका छन्, तर गारोको इँटमा राम्ररी जोर्नि नमिलेकोले र छाना र तलाका दलिन सत्तरिको र गारोको इँट वा काठका खम्बामा राम्ररी चुकूल नकसिएकोले नै ज्यादा बिगार हुन गएको बुझिन्छ।

## मोफसल तर्फको

सिन्हा र उदयपुर गढीमा यहाँको दोस्रो किसिमको नोक्सानी छ। सिन्हामा जमीनबाट बालुवा निस्के ता पनि खेतलाई ज्यादा नोक्सान हुने गरी निस्केको छैन, बरु सो बालुवा समेतै जमीनमा हलो जोतिदिए मट्टीमा बालुवा मिली बेसै होला कि जस्तो पनि छ। उदयपुरगढी भने निकै बिग्रेको छ, औ अलि फस्को ढुङ्गा र माटो भएकोले वर्षामा अझै नोक्सान हुने सम्भव छ। त्यहाँबाट 'माउण्ट एभरेष्ट' (पृथ्वीमा सब भन्दा उचो टाकुरो) पनि देखियो।

त्यो पर्वतको टुप्पा लड्यो भन्ने कुरा साँचो रहेनछ—यो सन्तोषजनक कुरो हो। पूर्व-नेपाल पट्टि विराटनगरमा नयाँ धान गोदामहरू जस्तै टिनका छाना भएका काठका घर बचेका छन्, तर इँटका घरहरू निकै बिग्रेका छन। दलिन र गारोमा राम्रो चुकूल ठोक्ने नगरेकोले घरहरू कच्चा भएका हुन्। धनकुटामा अस्पताल-कचहरी र बडाहाकीम-को घर बिग्रेको छ। तर मूल बजारमा भने साना-तिना चिरा बाहेक उस्तो केही भएको छैन। एकै डाँडामा भएकोले अरू घर बिग्री बजार बच्नु अनौठा हो। तर, धनकुटाको उत्तर-पश्चिम कुनामा २।। कोश एक ठाउँ, ४।। कोश अर्को ठाउँमा पैन्हो गई निकै नोक्सान भएको छ। धारापानी निर अझ पैन्हो जाने डर छ। चैनपुरमा नोक्सान कम भएको छ। वरिपरिका गाउँघरमा पनि केही भएको छैन। ताप्ले जुङमा ज्वालामुखी समेत फुटी ज्यादै नोक्सान भयो भन्ने कुरा हल्ला मात्र ठहरियो। भत्केको घर ता खालि भ्यालखाना मात्र रहेछ। बजार तिर एकाध घरमा अलि-अलि चिरिएको देखिन्छ ता पनि गणना गर्न लायकको नोक्सानी केही छेन। पैन्हो गएको

पनि पुरानो रहेछ । नयाँ गएको देखिएन ।"

यी माथिका कुरा बाहेक घर बनाउनालाई असल कंसल जग्गाको बारेमा र भूकम्पनिवारक घर बनाउने विषयमा पनि आफ्नो राय त्यस रपोटमा दिएका छन् ।*

अर्को भूगर्भ-विद्या जान्ने अफिसर मिष्टर एल्. फर्मर-को तल लेखिएको रायबाट पनि माथिका कुराहरूलाई पुष्ट्याँइ मिल्दछ :—

"१९९० सालको महाभूकम्प जमीनको बनावट सम्बन्धीबाट उत्पन्न भएको हो । पृथ्वीमा जीव-शक्ति भएकोले बराबर जमीनको स्वरूप अदल-बदल भइरहन्छ । कोही ठाउँमा मैदानबाट पर्वत बन्न जान्छ औ कोही ठाउँमा पर्वत् मैदान बन्न जान्छ । प्रकृतिको यस्तो अदल-बदल बहुतै विस्तार सँग हुन्छ ता पनि यो स्थिति सँधै चलिरहन्छ । प्रकृतिको यस्तो परिवर्तनको परिणाम कहिले-कहिले कडा भूकम्प हुन आउँदछ । परन्तु जमीनको यसरी अदल-बदल हुँदा कोही ठाउँमा बर्ता माटो थुमिनजाने कोही ठाउँमा कम हुनजाने पनि हुन्छ । यस्तो बद्ता माटो थुमिन जाने

* यो दशौं भागमा लेखिसकिएको छ ।

भागलाई 'जिओसिनक्लिनल बेल्ट' भन्दछन्—जुन भागमा विशेष अदल-बदलको खेल हुनजान्छ। हिन्दुस्थानमा यस्ता तीनवटा भागहरू छुट्ट्याएका छन्—( १ ) हिमालय, ( २ ) बलुचिस्तान, ( ३ ) आसाम-बर्माको साँध। यी जग्गा भित्र र यिनीहरूका वरिपरिका ठाउँमा, अरू ठाउँमा भन्दा बढ्ता भूकम्प जाने सम्भवछ। यो गएको भूकम्पको हिमालखण्ड सँग सम्बन्ध पर्न आएको छ। यो भन्दा अगाडि १९६१ साल ( १९०५ सन् ) मा कांग्रा र पञ्जाबमा गएको ठूलो भूईँचालो पनि यही हिमाल-विभाग सम्बन्धी थियो।*

यो गत भूकम्प विषयमा कोही-कोही मुख्य वैज्ञानिक विकास पनि यहाँ लेख्तछु:—

( १ ) भूकम्पकोलहरी—गत भूकम्प जमीनको बनावट सम्बन्धबाट भएको हो भन्ने कुरा माथिबाट थाहा भयो। भूकम्पको लहरी जम्मा तीन किसिमको हुन्छ—( क ) साधारण, ( ख ) यमज र ( ग ) जटिल। यस पालिको भूकम्पमा जटिल किसिमको लहरी चलेको अनु-

* कांग्रा काठमाडौंबाट करीब ३०० कोश उत्तर-पश्चिम पर्छ।

मान छ र यसलाई नै सब भन्दा नोक्सान गर्ने औ कडा भनी मानिएको छ।

( २ ) भूकम्प–केन्द्र ( एपिसेण्टर )—यसको घेरा उत्तर-बिहारमा पत्ता लगाएका छन्। तर यस्तो केन्द्र अरू ठाउँमा पनि हुनशक्तछ। केही जाँच नगरिएकोले ठीक सँग भन्न शकिन्न ता पनि नेपालमा ,यस्ता केन्द्रहरू नपरेका होलान् भन्न पनि शकिन्न भनी कुनै भूगर्भ-विद्या जान्नेहरूले भनेका छन्। खास गरी उदयपुरगढी र भादगाउँतिर सीतामारि मधुवनिमा झैं खूप बेगदार भूईंचालो गएछ भनी डा. अडेनले भनेका छन्। भूकम्प–केन्द्रको जमीन भित्रको गहिराइ सँधै एकै नास रहन्न ता पनि प्रायः २४ देखि ४० मीलसम्म हुनुपर्छ भनी भन्दछन्।

( ३ ) भूईंचालो कति बेरसम्म गयो ? यसको उत्तर ठाउँ पिछे फरक हुन्छ। उत्तर-बिहारमा २ मिनेटदेखि ८ मिनेटसम्मको अडाम गरेका छन्। कलकत्ताको भूकम्प-यन्त्रले ४॥ घण्टासम्म पृथ्वी काँपिरहेको पत्ता लगाएको छ; तर यस्ता नम्र कम्पहरू मानिसले थाहा पाउन शक्तैनन्, खालि भूकम्प-यन्त्रले मात्र शक्तछ।

( ४ ) भूकम्प थाहा भएका इलाकाको नाप—यसको ठीक अड्काम गर्न कठिन छ ता पनि भूकम्प-केन्द्रबाट पूर्व दिशा तर्फ १००० मील परसम्म भूईँचालोको वेग पुगेकोले चारै दिशामा एकै किसिमको जोरले गयो भनी संझेको पक्षमा भूकम्प थाहा भएको जग्गाको नाप ३१५०००० वर्ग मील हुन आउँदछ। तर उत्तर-भोट तर्फ र पूर्व-उत्तर दिशा तिर धेरै टाढासम्म भूईँचालो नगएकोले वास्तवमा माथि लेखिएको भन्दा केही कम्ति नै हुनुपर्दछ भनी एक भूगर्भ-विद् डा. फर्मरले भनेका छन्। परन्तु यति इलाका भरि भूकम्पले ध्वस्त पारेको भनी संझन हुँदैन; भूकम्पले ध्वस्त पारेको जग्गाको घेरा जुन नेपाल र उत्तर विहारमा पर्दछ त्यसको नाप करीब १००००० वर्ग मील जति होला।

( ५ ) पूर्वकम्प—कहिले काहीं साना-साना पूर्वकम्पहरूले पछि आउने ठूला पर-कम्पहरूको जनाउ दिएको देखिन्छ ता पनि, त्यसमा केही नियम छैन। माघ १ गते अर्थात् महाभूकम्प जाने एक दिन अघि कलकत्ताको भूकम्प जाँच्ने कलद्वारा यस्ता २ वटा पूर्व–कम्पहरू

टिपेथे—पहिलो ५५० मील, दोस्रो ४०० मील र तेस्रो ३०० मील टाढासम्मको। त्यहाँको भूकम्प-यन्त्रले टिपेको माघ २ गतेको महाकम्पको नक्सा चित्रमा दिइएको छ। यो नक्सा कलकत्ताको एक विद्वान् डाक्टर सेनले पठाइ-दिएका हुन्।

( ६ ) परकम्प—कोही ठूला भूकम्प बाद पर-कम्प-हरू गइरहनु प्रकृतिको नियम नै संझिएको छ। भूकम्प-यन्त्रको मदत बिना यिनको गिन्ति राख्न शकिँदैन। माघ २ गतेदेखि ७ गतेसम्ममा करीब २८ पर-कम्पहरू गएको कलकत्ताको कलबाट टिपिएकोले, यहाँ पनि त्यति दिन भित्रमा त्यति नै कम्प गएहोलान् भनी संझेमा ठूलो भूल हुन शक्तैन। तर अझसम्म पनि यस्ता पर-कम्पहरू जाँदै गरेकाले तिनीहरूको गिन्ति धेरै नै पुगिसक्यो होला। जापानमा १९२३ सन्को महाभूकम्प पछि टोकियो ( जापानको राजधानी ) मा पहिलो महिना भित्रमा पनि करीब १२५० कम्प गएको हिसाब गरेका छन्। १८९७ सन्मा आसामको महाभूकम्प बाद ५ महिना भित्र करीब ८५० पर—कम्प गए थे। यो गत भूकम्प विषयमा पनि

कलकत्ताको भूकम्प-यन्त्रले आश्विन महिना ( १९९१ साल ) सम्ममा करीब ६५ परकम्प गएको अनुमान गरेको छ। नेपालको निम्ति पनि यही अङ्क मिल्न शक्तछ।

# बाऱ्हौं भाग

## नेपालमा पहिले-पहिले गएका भूकम्पहरूको बयान

नेपालमा पहिले-पहिले पनि ठूला-ठूला भूकम्प गएका देखिन्छन्। परन्तु यो गएको भूकम्प जति कडा अरू कुनै थिएन ता पनि पहिलेका भूकम्पहरूको बयान थाहा पाउन धेरैमा रुचि भएको देखिएकोले यो परिच्छेद जोडेको हुँ। यो भूकम्प जानु भन्दा अगाडि, १८९० सालको लगायत अरू पहिले गएका भूइँचालाहरूको बारेमा थोरैलाई मात्रै थाहा थियो। तसर्थ यस समयमा गत भूकम्पको बारेमा एक छोटो बयान लेख्न बेमनासिव परोइन। हाम्रो देशमा वंशावलि, इतिहासहरूको कमी भएकोले धेरै अघिसम्मको बयान दिन शकिंदैन।

नेपालमा करीब पौने सात शय वर्ष अगाडि वि. सम्वत् १३१० ( ने. सं. ३७४ ) मा गएको भूकम्पको लेख सब भन्दा पहिलो छ । सो भूकम्प आषाढ शुक्ल तृतीया, पुनर्वसु नक्षत्र, ध्रुव योग, सोमवारका दिन गएथ्यो । देवालय र घर भत्की धेरै मानिस मरे । विराजमान भएका राजा अभयमल्ल पनि त्यसै भूकम्पले मरे । जमीन १५ दिनसम्म बराबर हल्लिरह्यो ।

वि० सम्वत् १३१६ ( ने० सं० ३८० ) मा ठूलो भूकम्प गई महामारी परी दुर्भिक्ष भयो र प्रजाहरूको पनि विध्वंश धेरै भयो । यो राजा जयदेवको पालामा भएथ्यो।

सम्वत् १४६४ ( ने० सं० ५२८ ) मा अधिक भाद्र शुक्ल १२ उत्तराषाढा नक्षत्र सोमवारको दिन ठूलो भूइँ-चालो गयो । मत्स्येन्द्रनाथको देवल र अरू घर, देवालय धेरै भत्के । जग्गा पनि धेरै फाटी नाश भयो । जी-वाजन्तु पनि धेरै नै मरे । सो बखत राजा श्यामसिंह विराजमान थिए ।

सम्वत् १७३७ ( ने० सं० ८०१ ) मा पौष कृष्ण अष्टमीका दिन दिग्दाह भयो । फेरि धेरै लामो धूम्रकेतु

( लामपुच्छ्रे तारो ) को उदय भयो, अकस्मात् आकाश-बाट एक किसिमको शब्द आयो। मानिसहरू डरले व्याकुल भए। करीब ५ महिना पछि अर्थात् १७३८ साल ज्येष्ठ शुक्ल सप्तमीका दिन रातको समयमा ठूलो भूइँचालो गयो। धेरै घर भत्के। सो बेला राजा निवासमल्ल शासक थिए।

सम्वत् १८६६ ( ने. सं. ९३० ) मा दशहराको दिन तृतीय प्रहरको मध्यमा २१ पटक भूकम्प गइरह्यो। घर भत्की केही मानिस औ जीवाजन्तुको नाश भयो। पशुपतिनाथको देवल केही भएन। श्री ५ महाराजाधिराज गीर्वाणयुद्ध विक्रम शाह राजगद्दीमा थिए। पञ्जाब पट्टि ( आजकालको सिमला जिल्ला ) मा विद्रोह फैलिएकोले सो दबाउन र शासन बलियो पार्न गोरखाली फौजहरू लागिरहेका थिए। त्यस भूकम्पले त्यो युद्धको काममा केही बाधा पर्न नगएको देखिन्छ।

सम्वत् १८८० मा सात ग्रह एकै राशिमा बसेका हुनाले कुनै कडा अनिष्टको शङ्का गरेका थिए। तर यी ग्रहहरू छुट्टिइसके पछि यमपञ्चमीका दिन लगभग १७

फेरा भूकम्प गयो, परन्तु धन-जनको नोक्सान कम भयो। त्यसको केही महिना बाद महामारी परी मानिस र जीवा-जन्तु मरे। माघ महिनामा ठूलो वृष्टि भई मूल समेत फुट्यो।

सं. १८९० भाद्र १२ गते सोमवारका दिन साँझको ६ बजे बडो जोरले ४० सेकण्ड सम्म भूकम्प गयो। फेरि सोही रातको ११ बजे त्यत्तिकै जोरले अर्को कम्प भयो। त्यही रातभरमा अरू साना-साना २३ कम्प गए। केही दिन पछिसम्म पनि दिनै पिछे परकम्पहरू जाने गरे। अनेक घर, महल र मन्दिरहरू बिग्रे। यसैको ३५ वर्ष अघि मात्रै श्री ५ महाराजाधिराज रणबहादूर शाहले १०० फूट अग्लो खूप लम्बा चौडा जगन्नाथको देवालय टुंडि-खेलको छेउमा बनाएका थिए। त्यही भत्की पाताल भयो। जनरल भीमसेन थापाले आफ्ना बागको महलको दायाँ बायाँ दुइवटा बडा-बडा धरहराहरू बनाएका थिए। तिनमा एउटा पाताल भयो अर्कोको टुप्पो भाँचिएर खस्यो। निज जनरलको बागको महल र जनरल रणवीर सिंह थापा, जनरल माथबरसिंह थापाहरूको काठमाडौं लगनटोलको महल पनि भत्कन गयो। नेपालको लागि

भूकम्पको बेग उत्तर पट्टि कुतिसम्म, पूर्व विजयपुरसम्म, दक्षिण मकवानपुरसम्म र पश्चिम गोरखासम्म पुग्यो। राजधानी भित्रमा सब भन्दा बढ्ता ठिमि र भादगाउँमा भूकम्पले नोक्सान पाऱ्यो। सो हुँदा श्रीपशुपति, गुह्येश्वरी, पूर्णचण्डी, मीननाथ, ललितापुर चण्डेश्वरी आदि ठूला-ठूला देवताका देवलहरूमा केही भएन। यस्तो विघ्न हुँदा सो बखतका बिराजमान राजा श्री ५ राजेन्द्रविक्रमशाह मंत्रीहरू साथलिई, भादगाउँमा सवारी भई, प्रजाहरूलाई दयापूर्वक चाहिंदो अन्न वस्त्रादि बक्सी फिर्नुभयो। राज्यभरमा १८००० घर बिग्रेको अनुमान गरे। त्यस मध्ये राजधानी तीन शहरमा मात्रै बिग्रेका ४२१४ थिए। पाटनको बालकुमारी-को देवल भत्की थिचिँदा २१ दिन पछि कुमारीको मूर्ति झिकियो र दशैंमा मुकुठ र कलशस्थापना गरी, काम चलाई, पछि मात्र अर्कै मूर्ति फेरियो। भूकम्पले चिरा-चिरा पारेका घरमा बस्न नभएकोले सबै बारिमा बसे; भारादारहरू र उनका जहानहरू आफ्ना बगैंचामा पाल टाँगी बसे। फेरि त्यसै सालको आश्विन शुक्ल १५ का दिन ठूलो वृष्टि भएकोले खोला-

नालाहरू बढी खेतमा रहेका असंख्य धान बगाई लगे। चापागाउँको टीकाभैरवको मूर्ति समेत बगाएर लगे। त्यस बखतको कम्पको बयान एक अंग्रेजी छापामा पनि फेला पऱ्यो। फेरि १८९१ साल आषाढ सुदि ५ मा र भाद्रसुदि एकादशीको १३ घडि बाँकिमा फेरि आश्विन कृष्ण अष्टमी रोज ६ का दिन र आश्विन १२ रोज २ का दिन ठूलै भूईंचालो गयो। त्यस भूकम्पले धनहानि ज्यादै गराएको थियो ता पनि नेपालीहरूमा साहस पूरा रहेको हुनाले दरबार, महल, घरहरू बराबर मर्मत हुंदै रहे। त्यस भूकम्प पछि राजकाजमा धेरै खलबल भइरह्यो ता पनि सर्वसाधारणको व्यवहार सरासर चलेकै थियो। न कोही हतास भयो; न कसैले दुःख प्रकट गऱ्यो। पाँच सात वर्षमा भत्के, बिग्रेका घर नयाँ बनी वा मर्मत भई पूरा भए। सम्वत् १८९६ मा श्री ५ महाराज राजेन्द्र विक्रमशाहले पशुपतिका मन्दिरमा नयाँ सुनको छानो पनि लगाए। घर बनाउने सारा सामान आफ्नै देशमा तयार हुने हुनाले भूकम्पले गराएको नोक्सानी पूरा गर्न धेरै समय लागेन।

अघि-अघिका भूकम्पहरूको असर कहाँ-कहाँसम्म पुगेको थियो सो थाहा पाउन शकिंदैन। परन्तु सम्वत् १८९० र यो १९९० को भूकम्पको असर एउटै हिसाब सँग फैलिएकोछ। १८९० सालको भूकम्पले त्रिशूली गण्डकी देखि पूर्व पट्टिको नेपाललाई र मुग्लानमा बिहार-का उत्तर-भागलाई बरबाद गराएथ्यो। यो सालको भूक-म्पले पनि तिनै-तिनै प्रदेशलाई बरबाद गराएको छ। १८९० सालको भूकम्पको जोर भादगाउँमा ज्यादा परेको थियो, यो सालको भूकम्पको जोर पनि त्यहीं ज्यादा परेकोछ।

तसर्थ, पछि-पछिलाई पनि यसपालि नोक्सान परेकै ठाउँहरूमा भूईंचालोको बढ्ता डर देखिन्छ। परन्तु नोक्सान र जोडको हकलाई १८९० को भन्दा १९९० को भूकम्प बर्ता कडा हो भनी धेरै विद्वान्हरूले निश्चय गरेका छन्। बिहारका एक मुख्य सरकारी अफिसर (श्रीयुत नारायण-सिंह) ले पनि "१८९० सालको भूकम्पको केही बयान हामी सँग छ। तसर्थ सो कम्प यसपालिको जत्तिकै छैन भनी जरूर भन्न शकिन्छ" भनी छापामा लेखेका छन्।

घर नोक्सान भएको फिरिस्तबाट पनि बुझ्न शकिन्छ। त्यस बखत १८००० घर बिग्रेका रहेछन्, तर यसपालि कमसे कम २०७००० बिग्रेको रपोट छ।

फेरि, कति वर्ष पछि नेपालमा अर्को भूकम्प जाने हो भनी धेरैले प्रश्न गर्दछन्। तर यसको जवाफ दिन-शक्ने कोही देखिंदैन। १८९० मा ठूलो भूइँचालो गएर फेरि १०० वर्ष पछि मात्र अर्को महाभूकम्प गएकोले, फेरि अर्को १०० वर्ष नबित्तै यस्तै ठूलो भूइँचालो जाओइन भनी एक चित्त बुझाउने बाटोसम्म छ। तर यस्तै १००-१०० वर्षमा मात्रै हुने भन्ने पनि कुनै नियम छैन।

यो परिच्छेद खतम गर्नु भन्दा अगाडि करीब ८० वर्ष उप्रान्त देखि पृथ्वीमा गएका प्रख्यात भूइँचालाहरू मध्ये कुनै-कुनैको नाम यहाँ लेखिन्छ :—

| | |
|---|---|
| जापान | १८५५ ईस्वी |
| नेपल्स ( इटालि ) | १८५७ ,, |
| जापान | १८९५ ,, |
| चार्ल्स्टन ( दक्षिण-अमेरिका ) | १८९७ ,, |
| क्यालिफोर्निया ( अमेरिका ) | १९०६ ,, |

| | |
|---|---|
| मेसिना ( यूरोप ) | १९०८ ईस्वी |
| मरसिका ( इटालि ) | १९१४ ,, |
| न्यूजिल्याण्ड | १९२१ ,, |
| जापान | १९२२ ,, |
| जापान | १९२३ ,, |

हिन्दुस्थानमा पनि ३७ वर्ष भित्र तल लेखिएका ठाउँमा महाभूकम्पहरू गए :—

| | |
|---|---|
| आसाम | १८९७ ईस्वी |
| काङ्ग्रा ( पञ्जाब ) | १९०५ ,, |
| बलुचिस्तान | १९०९ ,, |
| बङ्गाल | १९१८ ,, |
| पेगु ( बर्मा ) | १९३० ,, |
| उत्तर-बिहार र नेपाल | १९३४ ,, |

यी माथिका कुराहरूबाट पृथ्वीमा ज्यादा गरी भूकम्प जाने ठाउँको विषयमा केही विचार गर्न शकिन्छ ।

# तेर्‍हौं भाग

## आइन्दालाई सूचना

भविष्यको केही यस्तो अद्भुत समयमा तुरुन्तै के-के बन्दोवस्त औ काम गर्नाको दरकार पर्ने रहेछ भन्ने कुराहरू आफ्नो अनुभवैबाट देखेकोले पछिलाई केही फायदा हुन-जाला कि भन्ने हेतुले यहाँ लेख्तछु। १८९० सालको भूकम्पमा गरेको काम औ बन्दोवस्तको कुनै पुस्तक नभए-कोले यसपालि हामीलाई बाटो देखाउने केही भएन। त्यही विचारले पनि यो परिच्छेद लेख्न कर्तव्य संझन्छु। यस्तो भविष्यको कुरा लेख्ता खालि सूचनासम्म मात्र दिन शकिन्छ; कारण, यस्तो समय सधैं एक स्वरूप लिई आउँ-दैन। एक वखत तार र बिजुली अड्यो भन्नाले अर्को वखत पनि त्यस्तै हुन्छ भनी संझनु मूर्ख्याँइ हो। वा एक पटक आगलागि भएन भन्नाले पछि पनि यस्तो हुन्न भन्न शकिन्न। तसर्थ यस्तो आपत्‌को अञ्जाम गर्दा हल्का भन्दा बरु कडै पट्टि ढल्कनु बढिया छ।

लडाईंमा जाँदा सब तयारी भएर जान्छन्, दुश्मनले

हामी माथि हमला गर्ला, हाम्रो शहरमा गोला खसाल्ला भन्ने सबै कुरामा अघिदेखि नै होशियार रहन पाउँदछन्। तर भूकम्पबाट यस्तो जनाउ केही आउँदैन—अकस्मात् वज्रपात झैं हामी माथि खस्न आउँछ। केही जनाउ नपा-ई अकस्मात् हाम्रो बासको नाश, आफ्ना नातेदार जातिभाइ हजारौंको अकाल-मृत्यु, हजारौं घायल, धाराबाट पानी आउन बन्द, बिजुली, तार, टेलिफोन सब बन्द, धन पैसा-को जताततै नोक्सान, अरू बाहिर देशसँग बिलकुल अन्ध-कार, दुनियाँहरूको अतास, जताततै गोलमाल, अन्न पानी-को अनिकाल—यी सब क्षणभरमै आइहाल्दछन् भनी हामीले संझनु पर्दछ। तर यस्तो अवस्थाले आफूलाई ग्रस्त पार्न दिन हुँदैन। उल्टो, काम गर्नामा जोश, दुःखीको सेवा गर्नामा चाहा र देशको फायदा पट्टि दिल र जाँगर बढा-उनु सबैको कर्तव्य हो। यस्तो समयमा तत्कालमै गर्नुपर्ने मुख्य बन्दोवस्तहरू ११ दफामा बाँडी तपसीलमा लेखिएको छः—

तपसील

( १ ) भूकम्पबाद आगलागि उठ्ने बहुत सम्भवको कुरा छ, खासगरी शहर या बाक्लो बस्ति भएको ठाउँमा।

तसर्थ आगलागि हुन नपाओस् भन्नाको लागि आगो निभाउने वा यस्तै अरू बन्दोवस्त तुरुन्तै गरिहाल्नु पर्दछ। १९८० सालको ठूलो भूकम्पमा जापानमा भूकम्पले भन्दा आगलागिले धन औ ज्यान दुवैको बढ्ता नोक्सान हुन-गयो। एक फेरा फैलिसके पछि त्यसलाई समाल्न बहुतै मुश्कील हुन्छ; कारण, यस्तो समयमा पानी औ मानिस दुवैको कम मदत पाइने हुन्छ।

( २ ) घरले पुरिएकाहरूलाई झिक्ने उपाय औ बन्दो-वस्त मिलाउने एक खास जरूरतको काम हो। यो काम केही ढीलो गर्नु हुन्न। यसमा मुख्य काम गर्ने पल्टन र सरकारी कामदार हुन्छन् ता पनि सबै ठाउँमा तिनीहरूले मात्र भ्याउन शक्तैनन्। तसर्थ टोल-टोलै पिछे लाठे युवक-हरू ( जसका घरमा विशेष सन्धिसर्पन परेको छैन )लाई जम्मा पारी पल्टनको साथ-साथमा काम गर्न लगाउनु-पर्दछ। यस्तो गरेको पक्षमा धेरै ज्यान बचाउन शकिन्छ। सबै ठाउँमा पल्टन हुन नशक्ने भएकोले हरेक गाउँ, बस्तिमा यस्तै किसिमको स्थिति बाँध्नू भनी मुखिया माहानेहरूको नाममा उर्दि पठाएमा वा कोही सरकारी अफिसर खटाई

पठाएमा धेरै ज्यान बच्न जाने देखिन्छ। फेरि, सोही युवक-दलहरूले कडा घाइतेहरूलाई अस्पताल ल्याइ दिनू भन्ने उर्दि पनि भएमा धेरै घाइतेको कष्ट र ज्यान बच्न जाने देखियो।

( ३ ) घाइतेहरूलाई औषधि दिने काममा पनि चाँडै नै दृष्टि दिनुपर्दछ। कारण, निको हुने अवस्था नाघिसके पछि औषधि पठाउनाले के फायदा? औषधि गर्ने मानिस-हरू जति जम्मा गर्न शकिन्छ उतिलाई तुरुन्त ठाउँ-ठाउँका गाउँहरूमा प्रथम-चिकित्साको लागि पठाउनुपर्दछ। यो काम मोफसलका अस्पतालहरूबाट पनि हुनुपर्दछ। तिनी-हरूको सामर्थ्यले भेट्टाउनशक्ने घाइतेहरू वा अरू छुटेका ठाउँका कडा घाइतेहरूलाई अघिल्लो दफामा लेखिएको प्रबन्धबाट अस्पतालमा ल्याउन शकिहालिन्छ। दरकार हेरि ठाउँ-ठाउँमा शाखा अस्पतालहरू पनि खोल्नाको जरूरत उठ्छ। तर यस्तो अवस्थामा अस्पतालहरूमा घाइते-हरूको ज्यादै भीड हुन जान्छ, अस्पतालका कामहरू खुला जग्गामा गर्नु पर्ने हुनआउँदछ; त्यसमा थप, ठाउँ-ठाउँमा औषधि गराउन मानिस पठाउनु पनि पर्दछ। साबीकका

कामदारहरूले भ्याउन नशक्ने हुन्छन् । तसर्थ यो काममा भूकम्प-सेवकहरूको मदत लिनु विशेष आवश्यक पर्दछ । त्यसमा थप, म्यादी वैद्य, कम्पाउण्डरहरू पनि भर्ना गर्नु पर्दछ । औषधिगर्ने मानिसहरूको संख्या जति धेरै गराउन शकियो उति असल । पहाड १-२ नम्बरसम्म पनि सदरैबाट तुरुन्तै औषधि गर्ने मानिसहरू पठाउनु पर्दछ, खासगरी औषधालयबाट टाढा परेका जग्गाहरूमा । ठाउँ-ठाउँमा ष्ट्रेचर, लरि पठाएमा बढ्ता घाइतेहरूलाई अस्पतालमा ल्याउन शकिन्छ ।

राज्यभरका हरेक अस्पतालको नाउँमा 'जरूरत खर्च' को निमित्त केही थप रुपियाँको निकासा पठाउन जरूरत देखियो । घाइतेहरूको निमित्त टहरा बनाउनु पर्ने, ठाउँ-ठाउँमा औषधि गर्न मानिस पठाउनु पर्ने, अस्पतालमा टुटे फुटेका माल-सरजामको हिफाजत गर्नुपर्ने, यस्ता धेरै थप काम पर्न जान्छन् । तसर्थ यस्ता रुपियाँको निकासाबाट धेरै सहायता हुने देखियो । यो निकासा तुरुन्तै पठाइहाल्नु पर्दछ । त्यहाँको खबर आए पछि मात्र पठाए ज्यादै ढीलो हुनजान्छ ।

( ४ ) एक ठूलो प्रश्न बासको हुनजान्छ । केही दिन-को लागि सद्दे घर भएकाहरू पनि भूकम्पको त्रतासले बाहिर खुलामा बस्न जाने हुन्छन् । टहरो, छाप्रो बनाइ-दिने, पालहरू टाँगि-दिने, सद्दे सरकारी घरहरूमा मानिस-लाई बस्नदिने, खुला मैदानमा बस्न इजाजत दिने, जङ्गलबाट काठ-पात काट्न दिने इत्यादि काम कारवाईहरू यस प्रश्नको उत्तर हुनजाने देखियो । खास गरी बिरामी, बालक र सुत्केरीहरूलाई विशेष ध्यान दिनाको जरूरत देखियो ।

( ५ ) 'अन्न' र 'पानी' पट्टि विशेष ध्यान दिनुपर्ने अवस्था पर्न आउने देखियो; कारण, घर भत्की धेरैको अन्न माटोलाग्ने हुन्छ । फेरि त्यसमा थप, साहू महाजन-हरूले यस्तो अवस्थाको फायदा उठाई नाफा लिने धेरै सम्भव पनि हुन जाने भएकोले अन्नको विशेष कष्ट उठ्न-जाने हुन्छ । तसर्थ अन्नहरूमा ज्यादा नाफा उठाउन न शकून् भन्नाको लागि यो विषयमा एक इस्तिहार तुरुन्तै जारी गर्नाको जरूरत उठ्तछ । यस्तो इस्तिहार जारी नभएमा गरीबहरूलाई सार्‍है कष्ट पर्नजानेदेखियो । यसरी इस्तिहार जारी गरेको साथ-साथै बाहिरबाट प्रशस्त अन्न-

हरू झिकाई चाँडै उतार्ने बन्दोवस्त पनि मिलाउनु पर्दछ। तर माथि लेखिएको इस्तिहारबाट मात्र यो प्रश्नको कष्ट हट्न शक्तैन। मुख्य उपाय तत्कालैमा एक 'मूल गोदाम' खोलाउनाले हुने देखियो। साबीककै मोलमा किनी सोही मोलमा दुनियाँलाई बेच्ने, गरीब भोकाहरूलाई सित्तैं बाँड्ने प्रबन्ध त्यसै गोदामबाट हुनुपर्दछ, अथवा सोही ठाउँमै साहूहरूलाई पसल खोल्न लगाई साबीककै मोलमा अन्न बेच्न लगाए पनि हुन्छ। दरकार हेरी सरकारी गोदाम-बाट पनि अन्न चलन गर्नुपर्दछ। तर अन्न बेच्ता दरकार माफिक मात्र बेच्ने गरेमा कुनै दुष्टहरूले अरू ठाउँमा नाफा लिई बेच्न पाउने कम सम्भव हुन जान्छ। यस्तो मूल गोदामबाट अन्नको दरकार परेका जिल्ला, गाउँहरू पट्टि पनि दरकार अनुसार अन्न पठाउन सजिलो सँग शकिन्छ। पठाउनु पनि पर्ने नै देखियो। यस्तो गोदामबाट सर्व प्रथम गरीब, दुःखीहरूको वास्ता राख्ने नियम हुनुपर्दछ। त्यसको अरू फायदा—फाटफुटे पसलेहरूले ज्यादा नाफा लिन नपाउने हुन्छन् औ देशको दरकार अनुसार अन्नको मौजाद पनि कायम राख्न शकिन्छ। राम्रो सँग चलेको खण्डमा

कोही ठाउँमा प्रशस्त अन्न हुने, कोही ठाउँमा गेडो पनि नहुने यस्तो स्थितिको अन्त हुनजान्छ। अनिकालको निवारण पनि यसबाट हुन शक्तछ। त्यस मूल गोदामका हाँगा जिल्ला-जिल्लामा खोली अन्न कम्ति भएका टाढा-टाढाका ठाउँ, इलाका पट्टि पनि अन्न पठाउने प्रबन्ध भएमा धेरैको उद्धार हुन शक्तछ।

कुलो, कूवा धेरै जस्ता पुरिने औ कलधाराका पाइप-हरू पनि टुट्ने भएकाले पानीको दुःख पर्न जाने हुन्छ। यस्तो भएमा पानीको विशेष दरकार भएका ठाउँहरूमा 'ट्युब वेल' हरू तुरुन्त खन्न लगाउनु पर्दछ। साथ-साथै पुरिएका कूवाहरू मर्मत गर्ने उपाय पट्टि पनि लाग्नु पर्दछ। कोहीको घर भित्रका धारा वा कूवाहरू सद्दे रहेछन् भने दरकार हेरी सो ठाउँमा पानी लिन अरू दुनियाँहरूलाई पनि इजाजत दिन लगाउनु पर्ने अवस्था उठ्न शक्तछ। कुनै कलधारा त अड्ने सम्भव हुन्छ, तर यस्तो भएमा ती धाराहरूमा ज्यादा भीड हुने भएकोले निर्धाहरूले पनि पानी लिन पाऊन् भन्नाको लागि पालो राख्नाको जरूरत उठ्ने देखियो। रिजर्भ्वायरको पानीको अवस्था हेरी कल-

धारामा दिनको २।३ पटक मात्र पानी छाड्ने प्रबन्ध गर्नुपर्ने पनि हुनआउँदछ। एकै पटकमा धेरै खर्च गर्दा पछि पानी शुक्रजाने डर हुन्छ, यस्तो सम्भवको केही क्लेश पनि रहन दिनहुन्न।

जतातत्तै भोका-भोकीहरूको गिन्ति बढ्नजाने भएकोले दुनियाँहरूमा पनि परस्परको दान-दातव्य बढोस् भन्ने उद्देश्य राखेमा धेरैको उपकार हुनजाने देखियो। दुनियाँ-को सभ्यता देखाउने यस्तैले हो, यस्तो कर्ममा जति रुचि बढ्नजान्छ उति धेरै गरीबहरूको उद्धार हुनशक्तछ। सर-कारको दृष्टिबाट या कुनै कारणबाट छुटेका भोकाहरूको उद्धार पनि हुन शक्तछ। यस्तो समयमा दुःखी भाइहरू-लाई मदत दिनु हाम्रो कर्तव्य हो भनी सबैले ठान्नु पर्दछ।

( ६ ) फेरि एक कुरा पनि दृष्टिगोचर छ—सो बाहिर पट्टि खबर पठाउने र बाहिर पट्टिको खबर पाउने काम हो। टेलिफोन, तारका लाइन टुट्ने सम्भव भएकोले खबरको आवत-जावतमा विशेष बाधा पर्नजान्छ। यस-पालि याहाँको खबर हिन्दुस्थानमा करीब ८ दिन पछि मात्र पुग्यो। हाम्रो देशका टाढा-टाढा ठाउँका खबर त

सोभन्दा पनि पछिमात्र पाएम् । जापानले १९८० सालको भूकम्पमा खबर दिने औ लिने काम ( तार टेलिफोनको लाइन तयार नभएसम्म ) हवाइजहाज औ हुलाकी परेवा-बाट लिएथ्यो । अर्को एक फायदाको यन्त्र बेतार-कल देखियो, परन्तु यसको लागि बिजुली चाहिन्छ, जुन यस्तो समयमा अक्सर गरी टुट्ने हुन्छ; यस्तो भए ता पनि बेतारकल टेलिफोन भन्दा चाँडै मर्मत हुन शक्ने यन्त्र हो। मुख्य चल्तीका बाटाहरू पनि चाँडै मर्मत गर्न लगाएमा अरू ठाउँको मद्दत लिन शकिन्छ । औ कोही अरू ठाउँमा मद्दत पठाउन पनि शकिन्छ । तर सर्व-प्रथम खबरको आवत-जावत पट्टि ध्यानदिनु पर्दछ । त्यसो भएमा दरकार अनु-सार तुरून्त सहायता मगाउन शकिन्छ र आफूबाट मद्दत पठाउनुपर्ने ठाउँहरूको पनि चाँडै ठीक पत्ता लगाउन शकिन्छ ।

( ७ ) लोकरक्षा—यस्तो मौकामा लूट, पीट हुने, कैदी भाग्ने बहुतै सम्भवको कुरा मानिएको छ । तसर्थ झ्यालखाना आदि मुख्य-मुख्य सरकारी घर औ अरू चोरी-हुने सम्भव भएको ठाउँमा तुरून्तै कडा पालो-पहरा राख्नु

पर्दछ । त्यसपछि अतासमा छाडिएका मुख्य टोल, घर, बस्ति, ड्यौढिहरूमा र नयाँ खडा भएका बस्तिहरूमा पुलिस र सिपाहीको कडा चेवा र होसियारी रमन उपस्थित गराएमा चोरीको धेरै बचावट हुनजाने देखियो । यो काममा केही बिलम्ब गर्न हुँदैन, दरकार अनुसार गोली, बन्दूक लिएका सिपाहीहरूलाई पनि ठाउँ-ठाउँमा राख्नुपर्दछ । अवस्था हेरी दरकार पर्‍यो भने ढीलो नगरी जङ्गी कानून जारी गर्नुपर्ने हुन आउँदछ । असाधारण अवस्थाको औषधि असाधारण कर्मबाट हुनआउँदछ भन्ने अनुभवैबाट देखियो ।

( ८ ) फेरि, अनेक किसिमका हल्ला उठ्ने पनि स्वाभाविकै देखियो । यस पालि यहाँ र १९८० सालमा जापानमा अनेक प्रकारका फटाही-हल्लाहरू उठेको देखियो, सुनियो । यस्ता हल्लाबाट आत्तिएका जनताको मनमा धेरै अतास पनि पर्नजाने हुन्छ । तसर्थ यस्तो हल्ला फैलिन नपाउने उपाय गर्नु पर्दछ । केही दिनको लागि फटाहा औ झुट्टा हल्ला मचाउनेहरूलाई सजाय दिने र साथ-साथै सत्य समाचारहरू कुनै मुख्य ठाउँहरूमा टाँसिदिने गरे परिणाम असल हुने देखियो ।

( ९ ) रोगनिवारण—बास, गाँस ठेगान नभएको वखतमा रोगहरू उठ्ने धेरै सम्भव देखियो। मानिसहरू जहाँ पायो उहीं बस्ने, खाने कुराको पनि होशियार रहेर निर्वाह नहुने औ पानीको पनि दुःख पर्नै भएकोले सफाइको केही ख्याल रहन्न। कलधाराबाट पानी बन्द हुँदा हरेक कामको लागि कूवा वा पोखरीहरूको चलन हुन्छ। तसर्थ सबै कूवाहरूमा डिसइन्फेक्ट् ( औषधि हाली रोगका कीरा मार्ने प्रबन्ध ) गर्नु, नुहाउने कूवा र खाने पानी लिने कूवा छुट्ट्याउनु, फोहर मैला गर्नाको लागि भिन्नै जग्गा छुट्ट्याउनु—यी सब रोगनिवारणको लागि आवश्यक कुरा हुन्। यसमा थप, पसल सफा राख्न लगाउने, मुर्दाहरू झिकी जलाउन लगाउने इत्यादि, शहर बस्ति सफाईको काम राम्रो सँग प्रचार गराउनाको जरूरी छ। फेरि बस्ति, गाउँको सफाइ जाँच गर्ने, कुनै सरुवा रोग उठेमा तुरुन्त रोगीलाई बस्तिबाट पन्छाउने, १।२ घरमा रोग लाग्ना साथ कमसे कम सो घरका वरिपरिका बासिन्दाहरूलाई सोही रोगको औषधि खोपाउने इत्यादि प्रबन्धहरू रोग–निवारणको लागि अमूल्य मानिएका छन्। हैजा, बिफर, टाइफ्वायड

(लामो ज्वरो) जस्ता रोगहरू फैलिने धेरै सम्भव भएकोले यी रोगका भ्याक्सिनहरूको मौजाद प्रशस्त राख्नु पर्दछ ।

लाशहरू झिकिदिने र सद्गत गरिदिने एक विभाग पनि खोल्नाको जरूरत देखियो । गाई-वस्तुको त कुरै छाड्नु, मानिसहरूका लाश समेत खोलामा यसै फ्याँकिएका देखिए । यस्ता लाशको पूरा सद्गत नगर्नाले खोलाको पानी बिग्रनगई रोग उठ्ने डर हुनजान्छ । तसर्थ यस्तो एक विभागबाट लाशहरूको सद्गत मात्र होइन कि रोगको बचावट पनि हुनजान्छ । धेरै दिनसम्म पुरिएका मुर्दाहरू कुहिनगई रोगको बिउ छर्ने हुन्छन् । अरू समयमा भन्दा पनि यस्तो भूकम्पको समयमा कुनै रोग फैलिन गएमा धेरै महाँमारी पर्नजान्छ । तसर्थ यो कुरा पट्टि विचार दिनु बहुतै आवश्यक छ ।

( १० ) भूकम्प-सेवकको दरकार—भूकम्प जस्तो अघोर समयमा हरेक कामतिर थप भीड औ झोंज पर्नजान्छ । साबीकका सरकारिया जागीरदारहरूले मात्र सबै ठाउँ तथा हरेक गाउँ ढाक्न मुश्कील पर्दछ । तसर्थ यस्तो समयमा थप कामको लागि स्वयं-सेवकहरूको भाउ औ

जरूरत देखियो । यिनीहरूबाट दुःखीहरूको ठूलो सहायता हुन शक्तछ; कारण, करले काम गर्नेहरूबाट भन्दा आफू-खुशी कामगर्नेहरूबाट धेरै बढ्ता काम हुन शक्तछ । यो बाहेक पनि आफ्नो दुःख सुखको परवाह नराखी अर्काको सेवामा लाग्ने स्वयं-सेवकको काम देख्ता अरू आत्तिएका जनताको मनमा शान्ति मिल्न जानु वा आफ्नो दुःखको वेग बिर्सनु स्वाभाविकै हो । यस्तो असरको भाउ असलै-हुन आउँदछ । यस्ता आफूखुशी सेवा र दुःखीलाई मदत दिने काम पट्टि रुचि जति धेरैमा बढ्न गयो उति गरीब-हरूको उद्धार हुनजान्छ खालि सरकारले मात्र गर्नु अस-म्भवको कुरा हुन्छ ।

( ११ ) रपोट अड्डा—कति मानिस मरे, कति बेपत्ता छन्, कति बेवारीस लाशका नाता फेला परे, कति जना टुहुरा भए, कतिजना भोकभोकै छन्, कतिको बास छैन, कति निराधार भए भन्ने कुराको लगत औ रपोट गाउँ-गाउँबाट जम्मा गर्ने एक विभाग ( अड्डा ) तुरून्तै खडा गरेको पक्षमा दुःखी गरीबहरूलाई मदत दिने काममा विशेष सजिलो हुनजान्छ । घर धनको नोक्सान जस्तो अरू कुराको

लगत राख्ने विभाग केही दिन बाद खडा गरे पनि केही हर्जा छैन, परन्तु माथि लेखिएका कुराहरूको रपोट तयार गर्ने विभाग तुरुन्तै खडा गर्नाको आवश्यक देखियो। तर यो विभागको सफलता गाउँको शासन प्रबन्धमा निर्भर छ। गाउँको प्रबन्ध जति राम्रो छ उति राम्रो औ ठीक रपोट जम्मा पार्न शकिने देखियो। तसर्थ ग्राम्य प्रबन्ध असल हुनाको जरूरत यस्तै अवस्थामा विशेष देखियो।

माथि लेखिएका कुराहरू सबै तत्कालैमा गर्नुपर्ने काम हुन्। यी बाहेक पनि अरू साना-तिना काम छँदैछन् ता पनि मुख्य चाहिं यिनै हुन्। अरू साना-साना बन्दोबस्त-हरूको विषयमा यहाँ लेखिएको छैन। अवस्थाको विचार-बाट यस्तो कुराको निर्णय हुन शक्तछ। पछि-पछिका प्रबन्ध र सहायता दिने बारेमा पनि यहाँ लेखिएको छैन। सो प्रबन्धका दुइ मुख्य हाँगा छन्—( १ ) भत्केका घर, ईमा-रत आदिको जीर्णोद्धार गर्ने, ( २ ) पुराना औ फोहर बस्ति भएका ठाउँमा नयाँ औ स्वास्थ्यकर बस्ति उपस्थित गर्ने। यी कुराहरूको लागि मुख्य गरी दाम, जोश औ देश-भक्तिको दरकार छ।

# परिशिष्ट

पहिलो—औषधि पाएका घाइतेहरूको संख्या ।

दोस्रो—बेतारकलबाट आएको खबर ।

तेस्रो—'भूकम्प-पीडितोद्धारक-फण्ड' का दाताहरूको नाम ।

# पहिलो परिशिष्ट

## औषधि पाएका घाइतेहरूको संख्या

औषधि पट्टिको काम विषय छैठौं भागमा लेखिएकोले यहाँ घाइतेहरूको संख्या मात्र बेग्ला-बेग्लै छुट्याई लेख्तछु।

### ( क ) राजधानी ( चार-भञ्ज्याङ भित्र )

#### ( १ ) अस्पतालमै भर्ना गरी औषधि गरिएका जवानको फिरिस्त

| अस्पताल | मर्दना | जनाना | बालक | जम्मा | मृत्यु |
|---|---|---|---|---|---|
| त्रि-चन्द्र मिलिटरी | ५७ | ५८ | २१ | १३६ | ११ |
| वीर ( मर्दना ) | ४० | २२ | १० | ७२ | ९ |
| वीर ( जनाना ) | . | ७२ | १२ | ८४ | ४ |
| पाटन | १० | १४ | ५ | २९ | . |
| भादगाउँ | १२ | १८ | १० | ४० | ६ |
| जम्मा— | ११९ | १८४ | ५८ | ३६१ | ३० |

## घाउ—

| फ्र्याक्चर | गहिरो घाउ | चोटपटक | टिट्यानस |
|---|---|---|---|
| १३० | ९३ | १२४ | १४ |

( २ ) अस्पतालमा औषधि गर्न आएका जवानको संख्या—

| मिलिटरी | वीर(मर्दना) | वीर(जनाना) | पाटन | भादगाउँ | जम्मा |
|---|---|---|---|---|---|
| ४१९७ | १११७ | ४२० | ४६३ | २११२ | ८३०९ |

( ३ ) टेम्पोरेरी अस्पतालमा औषधि भएको—

| ठाउँ | मर्दना | जनाना | बालक | जम्मा |
|---|---|---|---|---|
| लुभु-सानागाउँ | २०० | १८४ | १० | ३९४ |
| पाँगा | १५२ | ८४ | ३३ | २६९ |
| बुङमती-खोकना | ३२२ | २५७ | २७४ | ८५३ |
| किसिपिंडि | १४ | २६ | १६ | ५६ |
| जम्मा— | ६८८ | ५५१ | ३३३ | १५७२ |

## ( ४ ) डाक्टरहरूका हातबाट

### प्रथम चिकित्सा भएको

| ठाउँ | संख्या |
|---|---|
| काठमाडौं शहर | २२८ |
| पाटन | १३१ |
| भादगाउँ | ८२२ |
| पूलचोक | ९ |
| फपिङ | ११ |
| धर्मथलि | ५२ |
| थेचो | ३० |
| हरिसिद्धि | १०६ |
| चाँगु | १५ |
| खुम्रु-सानागाउँ | २३ |
| बुङमती | १३ |
| | जम्मा—१४४० |

## ( ५ ) पल्टनियाँ कम्पाउण्डरहरूबाट

### प्रथम चिकित्सा भएको

| ठाउँ | संख्या |
|---|---|
| सानागाउँ-चापागाउँ-खोकना | ५७८ |
| फर्पिङ | २८ |
| चोरपुर-गुण्डु | २७ |
| बोडे-कटुंजे | १५० |
| नैकाप-बलम्बु | ४१ |
| पल्वारि-बोसन | ४३ |
| बलम्बु-दहचोक | ४० |
| हरिसिद्धि-गोदावरी | ५८ |
| हाँडिगाउँ | ३८ |
| टोखेल-मच्छेगाउँ-बोसिगाउँ | ७० |
| बौद्ध-साँखु | ७५ |
| सुनागुठि | ९७ |
| | जम्मा-१२४५ |

## ( ६ ) आयुर्वैदिक ( वैद्यको ) औषधि भएको

| ठाउँ | संख्या |
|---|---|
| आयुर्वेदीय औषधालयमा | ३०९ |
| पाटन | ११५६ |
| ठैब-चाँडिगाउँ | ८४ |
| बुङ्मती | ३९ |
| खोकना | ३८ |
| सानागाउँ | ४९ |
| नैकाप-बलम्बु | ४४ |
| काठमाडौं शहर | ३९० |
| भादगाउँ | ५७ |
| चापागाउँ | २२ |
| जाउलाखेल | १९ |
| हरिसिद्धि | ४१ |
| कोटेश्वर-भैमाल-चाभेल | २७ |
| दहचोक | १४ |
| फाटफुटे | ३३१ |
| युनानी हकीमबाट ठाउँ-ठाउँमा औषधि भएको | ३०६ |
| | जम्मा—२९२६ |

## ( ७ ) भूकम्प-सेवकहरूबाट औषधि भएको

| | | |
|---|---|---|
| भूकम्प-सेवक | १०२३ | औषधि गर्ने सरजाम सरकारले पनि दिए-को थियो। |
| महाराजा-सर्भेण्ट-सोसाइटि | ८८६ | |
| जम्मा– | १९०९ | |

## ( ८ ) भूकम्प-सेवकहरूले मूल-अस्पतालमा ल्याएका कडा घाइतेहरू

| ठाउँ | ल्याइएकाहरू-को संख्या | आउन मञ्जुर नगर्नेको संख्या |
|---|---|---|
| नरदेवीको वरपर | १० | • |
| बलम्बु-सतङ्गल-किसिपिंडि | ५ | ६ |
| हरिसिद्धि-चाँडेगाउँ | • | ५ |
| सानागाउँ-लुभु | ११ | २ |
| थेचो | १ | • |
| पाटन शहर | ७ | १० |
| ठिमि-नकदेश | ७ | २ |
| जम्मा– | ४१ | २५ |

## ( ख ) मधेश तर्फको

संख्या

| ठाउँ | अस्पतालमा भर्नानभएका | अस्पतालमा भर्ना भएका | जरूरत खर्चको लागि निकासा भएको* |
|---|---|---|---|
| वीरगञ्ज अस्पताल | ६६ | १ | २०० |
| कटहरवन | १ | . | २०० |
| झापा | ४ | . | १०० |
| जलेश्वर | ४ | . | २०० |
| विराट नगर | २ | ७ | १०० |
| रँगेलि | २ | . | १०० |
| सर्लाहि | ८२ | . | २०० |
| धरान बजार | ५० | . | . |
| जम्मा— | २११ | ८ | ११०० |

अस्पतालमा भर्ना भएका र
नभएका गरी जम्मा—२१९

* अरू पश्चिमका अस्पतालहरूमा पनि गएको थियो, परन्तु त्यसतर्फ विशेष नोक्सान नभएकोले खर्चको आवश्यकता उठेन ।

## ( ग ) पहाड तर्फको

| ठाउँ | संख्या |
|---|---|
| धनकुटा अस्पताल | ९ |
| भीमफेदि | ५ |
| ओखलढुङ्गा ( पूर्व ३ नं. औषधालय ) | २०० |
| धनकुटा औषधालय | ७ |
| तह्रौं बन्दिपुर ( पश्चिम ३ नं० ) औषधालय | २ |
| बनेपा (पूर्व १ नं.) मा खडा गरेको टेम्पोरेरी अस्पताल | १५३ |
| | जम्मा—३७६ |

(२) सदरबाट गएका कम्पाउण्डरहरूले गरेको—

| | |
|---|---|
| चिसापानीगढी ( ओखरगाउँ-पालुङ ) | २० |
| चौकोट पूर्व १ नं. | १९ |
| धुलिखेल पूर्व १ नं. ( खड्पुसम्म ) | १७ |
| रामेछाप पूर्व २ नं. | २४ |
| जोनपुर पश्चिम १ नं. ( डँडुवासम्म ) | ५७ |
| कुलेखानि ( चितलाङ-कुलेखानि ) | ५८ |
| नाला पूर्व १ नं. ( नाला-बकलनाथ ) | २५ |
| पनौति पूर्व १ नं. ( बौडोल-पनौति ) | १७ |
| धुनिबेंसि-देउरालि | ५३ |
| | जम्मा-२९० |
| | कुल जम्मा-६६६ |

# दोस्रो परिशिष्ट

## बेतार-कलबाट आएको खबर

भूकम्प बाद बाहिर देशको पहिला खबर बेतार-कल-बाट माघ ७ गते पाइयो। सो र माघ ९ गते उप्रान्त भूकम्प विषयको कुनै-कुनै बेतारको खबर यहाँ लेखिन्छ। त्यसबाट यहाँको खबर बाहिर पट्टि कति पछि पुगेछ विचार गर्न शकिन्छ। माघ ११ गतेमा मात्र एक किसिमको स्पष्ट खबर पुगेको देखिन्छ। तार, टेलिफोन, चिठीपत्र बन्द भएको समयमा बेतार-कलहरूले अमूल्य सेवा दिए। परंन्तु यहाँ बेतार खवर पठाउने यन्त्र नभएकोले यहाँको खबर चाँडै दिन नशकिएको हो।

१९९० घाघ ७ गते ( कलकत्ता )—"भूकम्प विषयको नेपालको पहिला खबर केही आज मात्र आइपुग्यो। यो खबर कलकत्तामा रहेका एक नेपाली अफि-सरले नेपालका महाराज कहाँबाट हेलियोग्राफ द्वारा पाएका हुन्। यो गत महाभूकम्पबाट नेपा-लमा पनि धेरै हानि गरायो होला भनी धेरैले डर

मानेका थिए। सो साँच्चिकै हुनगएको बुझिन्छ, तर सो खबरमा 'भूकम्पको जोड वहुतै कडा थियो, काठमाडौं राजधानी-खाल्टोमा धेरै घर औ ज्यानको नोक्सान भएको छ' भन्ने सम्म मात्र लेखिएको रहेछ। तसर्थ नोक्सानको पूरा हालत औ वयान नआए सम्म नेपालको हालत विषय-मा धेरै धन्दा र फिक्री रहिरहने छ।

१९९० माघ ९ गते (कलकत्ता)—"भूकम्पले गर्दा नेपालमा धेरै ज्यानको नोक्सान पर्न गयो औ अंग्रेज-राजमन्त्री बस्ने घर समेत बिग्रयो भन्ने हल्ला गोरखपुरमा गर्दछन्। नेपालका महाराज वनबासामा क्याम्प गरी राज भएको छ। आज १२५ कोश परको एक भूकम्प गएको यहाँको भूकम्प-यन्त्रले टिप्यो।"

१९९० माघ १० गते (कलकत्ता)—"यहाँको भूकम्प-यन्त्रले दिनको करीब ३ बजे ५०० कोश परको एक भूकम्प जाहेर गर्‍यो। विहार-उडिस्साको गभर्मेंएटको जिक्री अनुसार यू. पी. गभर्मेंएटले

बिहार-उडिस्साका भूकम्प-पीडित जनताको लागि ५५०० कम्बल पठाउने बिचार गरेका छन्। लखनौको एक साहूले पीडितोद्धारको काममा ५०० कम्बल सुम्पे। जमालपुरको रेलको कारखानामा पहिले जाहेर गरे जतिको नोक्सान परेको बुझियो। अहिलेसम्म करीब ६५०० मानिसहरूले काम गर्न थालिसके।"

१९९० माघ ११ गते ( कलकत्ता)—"नेपालमा पहिले अड्काम गरेको भन्दा कमै नोक्सान भएको खबर एक नेपाल-सरकारको अफिसरबाट थाहा भयो। परन्तु सो खबर पछि आएको तारबाट काठमाडौं, पाटन र भादगाउँ यी तीन शहरमा धेरै ठूलो नोक्सान पर्‍यो औ हजारौं लाश घरका थुप्रा मनि परिरहेकाछन् भन्ने खबर आयो। भूकम्पको समयमा नेपालका महाराजको सवारी पश्चिम मधेश तर्फ थियो। भूकम्पको खबर पाउना साथ तुरुन्तै राजधानीतर्फ सवारी फिर्ने मनसाय भयो, परन्तु रेलका लाइनहरू टुटेकाले हुन पाएन।

शायद अहिलेसम्ममा सवारी नेपालतर्फ भइसक्यो होला। राजधानीबाट वाहाँ राजभएको ठाउँ धेरै टाढा भएकोले पीडित जनताको दुःख घटाउनाको खातीर आफ्नो शिक्षा दिई मानिस राजधानीतर्फ पठाइबक्स्यो। महाराजाधिराजको दरबार भत्कँदा वाहाँका दुइ छोरी औ ५।६ शुशारेको मृत्यु भयो। महाराजकी एक नातिनी पनि मरिन्। मेजर हस्त शम्शेरकी रानी घरले थिचिई मरिन् र बहुत कष्ट साथ घरको थुप्रोबाट निजको लाश उतारे। पुराना ईमारतहरू धेरै बिग्रे। रक्सौलको मोटरको बाटो र टेलिफोनको लाइनमा पनि नोक्सान पर्न गयो।

"भारतको भूकम्प-पीडित जग्गाहरूको उद्धारको लागि एक 'रीलिफ-फण्ड' खोल्नाको लागि हिजो यहाँ (कलकत्ता) को मजलीस घरमा एक सभा उपस्थित भयो। दाम र कपडा पठाउनालाई एक कमिटी समेत खडा गरे। यो सभाका सभापति कलकत्ताका मेयर थिए।"

१९९० माघ १४ गते ( कलकत्ता )—“भारतको भूकम्प-पीडितोद्धारको खातीर ‘भ्वाइसराय-रीलिफ-फण्ड’ खोलियो। बेलायतमा पनि यस्तो फण्ड लण्डनको मेयरले खोले। ‘मारवाडी-रीलिफ-सोसाइटि’ मा श्रीयुक्त बीडलाले रु. २०००० समर्पण गरे।”

१९९० माघ १६ गते ( कलकत्ता )—“मेक्सिको (पश्चिम अमेरिका ) देशको बीच र दक्षिण भागमा ठूलो भूकम्पको मार पर्नगयो। धन जनको धेरै नोक्सान भएको र करीब १ लाख घर भत्केको खबर छ। हिजो रातिदेखि पटनामा अटूट वर्षा भइरहेको छ, जनतालाई धेरै दुःख पर्न गएको छ। मजफ्फर-पुरमा पनि यस्तै पानी परेकोले भूकम्पले बिगारे-का घरहरूमा पनि ओतको लागि बास बसे।”

१९९० माघ १८ गते ( कलकत्ता )—“तल लेखिए बमोजीमका कम्पहरू सिस्मोग्राफले जाहेर गऱ्योः—

(१) रातको २ बजे कलकत्ताबाट करीब ४००० कोशपर
(२) ” ५॥ ” ” १०० कोशपर।

बिहार-प्रान्तका भूकम्प-पीडितहरूको लागि रीलिफ-फण्ड खोल्ने बखतमा लण्डनका मेयरले एक सभा गरेका थिए। प्रख्यात सज्जनहरू धेरै त्यो सभामा उपस्थित थिए। फेरि केही दिन बाद अर्को यस्तो सभा गर्ने विचार गरेका छन् भन्ने बेलायतको खबर छ।'

यी माथिका खबर त्रि-चन्द्रकालेजको बेतार-कलबाट प्रो. आशुतोष सेनले टिपेका हुन्। बाहिर पट्टिको केही खबर नआउने बखतमा यी माथिका खबरहरू उपर कस्तो चाह भएथ्यो, विचार गर्न शकिन्छ। यी माथिका कुराहरू बाहेक अरू खबर पनि थिए। भूकम्पको सरोकार न भएकोले मात्र यहाँ उल्था न गरिएको हो। यो परिशिष्ट अन्त गर्नु भन्दा अगाडि निज प्रोफेसरलाई धन्यबाद दिन चाहन्छु।

# तेस्रो परिशिष्ट

## "भूकम्प-पीडितोद्धारक-फण्ड" मा

## चन्दा दिने दाताहरूको नाम

१९९० साल फाल्गुन १८ गतेको दिन नेपालमा "भूकम्प–पीडितोद्धारक-फण्ड" खोलियो। १९९१ साल फाल्गुन महिनासम्म मो. रु. १०७५१०४।६५, नोट रु. २४८०० र कं. रु. १४७२ जम्मा भयो अर्थात् करीबः—

| | मो. रु. | नोट. रु | कं. रु. |
|---|---|---|---|
| नेपालबाट | १०५३९२५ | ३१०० | ११९५ |
| हिन्दुस्थानबाट | २०९७९।६५ | १०२७० | १३९ |
| बेलायतबाट | २०० | २५७५ | १२३ |
| जापानबाट | × | ८८५५ | १५ |
| अरू विदेशबाट | × | × | × |

दाताहरूको नाम तल लेखिएको छ:—

## नेपाल

| | मो. रु. | कं. रु. | नोट. रु. |
|---|---|---|---|
| ओजस्वी राजन्य प्रोज्वल नेपाल तारा अति प्रबल गोरखा दक्षिणबाहु पृथुलाधीश श्रीश्रीश्री महाराज जुद्ध-शम्शेर जङ्गबहादूर राणा ग्राद्द क्काद्द ला लेजिओ द अनेयर, जी. सी. सान्ति मरिजीओ ए लाज्जारो जी. सी आइ. ई. यितेङ्ग पावटिङ्ग सुन चियान् लुचुयां स्याङ्ग च्याङ्ग आनरेरी लेफ्टेन्याण्ट जनरल बृटिश आर्मी आनरेरी कर्णेल अफ अल दी गोरखा राइफल रेजिमेण्टस् इण्डियान आर्मी प्राइम्मिनिष्टर आएण्ड सुप्रीम कम्याण्डर इनचीफबाट मो. रु. | ३०००००। | . | . |
| मौसुफका श्री ३ बडामहारानीबाट मो. रु. | १०००००। | . | . |
| श्री ३ बडामहारानी सीताभवनबाट मो. रु. | १५०००। | . | . |

| | | |
|---|---|---|
| श्री सुप्रदीप्तमान्यवर कम्याण्डर इन-चीफ जनरल पद्म शम्शेर जङ्गबहादूर राणा जी. बी. ई., के. सी. आइ. ई. बाट मो. रु. | २५०००। | . . |
| श्री प. क. ज. बाट मो. रु. | ५१०००। | . . |
| श्री प. क. ज. का रानीबाट मो. रु. | २५०००। | . . |
| श्री प. क. ज. का कान्छी छोरी मैयाबाट मो. रु. | ४०००। | . . |
| बाँशिका रानीबाट मो. रु. | ४०००। | . . |
| पाटनका छोटी रानीबाट मो. रु. | ४०००। | . . |
| सामोदका रानीबाट मो. रु. | ४०००। | . . |
| चरखारीका नेपाली महारानीबाट मो. रु. | ४०००। | . . |
| खजूर गाउँका नेपाली बहुरानीबाट मो. रु. | ४०००। | . . |

श्री सुप्रदीप्त मान्यवर पू. क. ज.
बबर शम्शेर जङ्गबहादूर राणा जी.
बी. ई., के. सी. एस. आई, के. सी.
आइ. ई. आनरेरी कर्णेल बृटिश
आर्मी नेपाल प्रताप वर्धक परिवार

समेतबाट मो. रु. १०००००।

श्री सुप्रदीप्त मान्यवर प्रसिद्ध प्रबल गोरखा दक्षिणबाहु द. क. ज. केसर शम्शेर जङ्गबहादूर राणा ग्राहद्द अफिसीय-द्द ला लेजिओ द अनेयर के. बी. ई. र श्री ५ जेठा शाहज्यादी समेतबाट मो. रु. १०००००।

श्री सुप्रदीप्त मान्यवर जनरल सिंह-शम्शेर जङ्गबहादूर राणाबाट मो. रु. ७००००। र श्री ५ माहिला शाह-ज्यादीबाट मो. रु. ३००००। जम्मा मो. रु. १०००००।

श्री ले. ज. कृष्णशम्शेर जङ्गबहादूर राणाबाट मो. रु. ६००००। र श्री ५ कान्छा शाहज्यादीबाट मो. रु. ३००००। र मैंञा छत्रराजेश्वरी देवीबाट मो. रु. १००००। जम्मा मो. रु. १०००००।

| | | |
|---|---|---|
| श्री ले. ज. शङ्करशम्शेर जङ्गबहादूर राणा र मजकूरका रानी समेतबाट मो. रु. | १०००००। | |
| श्री प. क. ज. का दिदीज्यू बझाङ्गी महारानीबाट मो. रु. | ५०००। | |
| श्री मान्यवर प्रसिद्ध प्रबल गोरखा दक्षिणबाहु गुरुराज हेमराज पण्डितज्यू सी. आइ. ई. बाट मो. रु. | ४०००। | . . |
| प्रदीप्त मान्यवर प्रबल गोरखा दक्षिणबाहु बडा काजी मरीचिमानसिंह सी. आइ. ई. मो. रु. | १०००। | . . |
| गुरु प्रोहित भुवनेश्वर प्रसाद उपाध्याय तानसेन नोट. रु. | . . | ४०० |
| काजी रत्नमान, सुब्बा गुञ्जमान र खरीदार तीर्थमान मो. रु. | १०१९। | . . |
| सरदार माणिकलाल राजभण्डारी पाटन कालखु मो. रु. | १७५। | . . |
| सरदार उमादेव पन्त कमलपोखरी मो. रु. | २००। | . . |

सरदार उमादेव पन्तकी ब्राह्मणी
मो. रु. १००॥ . .
मीर सुब्बा पशुपतिभक्त पन्त गैन्ही-
धारा मो. रु. १००। . .
मीरसुब्बा भक्तलाल राजभण्डारी पाटन
कालखु मो. रु. १२५। . .
ख. सूर्यलाल राजभण्डारी ऐ. मो. रु. ३५। . .
मुखिया पुरुषोत्तमलाल राजभण्डारी ऐ. मो. रु. २४। . .
ख. गुह्यकाली भक्त पन्त गैन्हीधारा मो. रु. २५। . .
पं. पद्मनाथ पन्त भुरुङ्खेल मो. रु. २५। . .
राणामोदजङ्ग उदयपुर नोट रु. . . १०००
सुब्बा नरजङ्ग, शेरजङ्ग, दीर्घजङ्ग
गुरुङ्ग बुटौल नोट. रु. . . ८००
श्री बाबुसाहेब मसुरी शम्शेर जङ्ग-
बहादुर राणा कं. रु. ३०० .
श्री बाबुसाहेब नरेन्द्रशम्शेर जङ्गबहा-
दूर राणा कं. रु. २९५ .
श्री बाबुसाहेब बहादूर शम्शेर जं. ब. रा. कं. रु. ३००

| | | | |
|---|---|---|---|
| श्री बाबुसाहेब जगतशम्शेर जङ्गबहादूर राणा कं. रु. | | ३०० | . |
| चर्खा प्रचारक तुलसीमेहेर मो. रु. | ५। | . | . |
| क. क. गङ्गाबहादूर बस्नेत क्षत्री छेत्रपाटि मो. रु. | ५००। | . | . |
| ले. क. नरसिङ्ग बहादूर बस्नेत क्षत्री छेत्रपाटि मो. रु. | १००। | . | . |
| क. प. यज्ञबहादूर ऐ. ऐ. मो. रु. | २५। | . | . |
| राजा जयपृथ्वीबहादूरसिंह नोट रु. | . | . | ६०० |
| क. क. चन्द्रजङ्ग थापाक्षत्री मो. रु. | २००। | . | . |
| जीवनाथ श्रेष्ठ क्वाबहाल पाटन मो. रु. | ५। | . | . |
| श्री ३ स्वर्गीय महाराज चन्द्रशम्शेर जङ्गबहादूर राणाका द्वारे सलिफाका इच्छा बमोजीम मो. रु. | १०००। | . | . |
| ख. बाबुराम उपाध्याय सिनामङ्गल मो. रु. | ५। | . | . |
| क. क. कीर्तिमान खत्री क्षत्री ज्ञानेश्वर मो. रु. | ५०। | . | . |

| | | | |
|---|---|---|---|
| श्री क. प. बालकृष्ण शम्शेर जं. ब. राणा मो. रु. | १००। | . | . |
| ख. चन्द्रलाल राजभण्डारी पाटन कालखु मो. रु. | ३०। | . | . |
| सरदार बहादूर टिकुसिंह थापा मार्फत राँचिका जी. ए. पी. का नेपाली जनताबाट नोट रु. | . | . | ३०० |
| क. प. मुकुन्दबहादूर बस्नेत छेत्रपाटि मो. रु. | ५०। | . | . |
| मे. क. नरमर्दन थापा पकनाजोल मो. रु. | २७। | . | . |

जम्मा—१०५३९२५-११९५-३१००

# हिन्दुस्थान

| | | | |
|---|---|---|---|
| राजा पशुपतिप्रतापसिंह बाँशि नोट रु. | . | . | ५००० |
| राजा राव उदयसिंह पाटन नोट रु. | . | . | १५०० |
| रावलजी संग्रामसिंह सामोद नोट रु. | . | . | १५०० |
| गणपतलाल हैदराबाद कं. रु. | . | ५० | . |

दी एएट वाएडेक्स कं. रु. . ८१

इन्द्रप्रस्थ सेवामएडली कं. रु.र नोट रु. . ५ २४५

गुलाव कम्पनि, कराचि नोट रु. . . १०००

यू. पी. का डेपुटि कलेक्टर दुर्गाप्रसाद

गाजिपुर नोट रु. . . १००

साहू हजारीमल माडवारी काठमाडौं

मखनटोल मो. रु. ५००१। . .

देवीराम माडवारी मो.रु. ५१। . .

साहू हजारीमल माडवारीकी

विधवा बुहारी मखनटोल मो. रु.१००१। . .

देवलराम माडवारी मो. रु. ४५। . .

मनीराम माडवारी मो. रु. ४१। . .

सूरजप्रसाद माडवारी मो. रु. ४१। . .

साहू हरिदुखारी माडवारी मो. रु. ३५। . .

शिवधारीमन माडवारी मो. रु. ३१। .

हजाराम माडवारी मो. रु. ३१। . .

घासीराम माडवारी मो. रु. २१। . .

रामचन्द्र माडवारी मो. रु. २५। . .

साहू टुइराम माडवारी मो. रु. १५१। . .
साहू रामरत्न माडवारी इन्द्रचोक मो. रु. २०१। . .
साहू चुन्नीलाल सागरमल माडवारी
मखन मो. रु. १५१। . .
साहू नारायणदास माडवारी इन्द्रचोक मो. रु. १५१। . .
साहू चीमनराम माडवारी भेडासिङ मो. रु. २१। . .
साहू जमुनाधर माडवारी इन्द्रचोक मो. रु. २१। . .
साहू महावीरकी स्वास्नी माडवारनी भेडा-
सिङ मो. रु. ५०१। . .
साहू पूर्णमल माडवारी ऐ. मो. रु. ५०१। . .
साहू नागरमल माडवारी इन्द्रचोक मो. रु. १५१। . .
साहू घनश्यामदास माडवारी ऐ. मो. रु. १०१। . .
साहू राधाकृष्ण रामजीवन माडवारी
मखन मो. रु. १०१। . .
साहू सूर्यमल माडवारी डिल्लिबजार मो. रु. २१। . .
पं. रामजीलाल माडवारी इन्द्रचोक मो. रु. २१। . .
गिरिधारीलाल माडवारी ऐ. मो. रु. ५१। . .
साहू विश्वनाथ माडवारी भेडासिङ मो. रु. ५०१। . .

साहू रामेश्वर माडवारी मो.रु. ३०१। . .

साहू हरिनारायण माडवारी इन्द्रचोक मो.रु.२५०१। . .

साहू रामकारनदास केदारनाथ माडवारी

भेडासिङ मो.रु. २१०१। . .

साहू जमुनाधर माडवारी इन्द्रचोक मो.रु. २०१। . .

साहू नत्थुमल माडवारी इन्द्रचोक मो.रु. २०१। . .

साहू कुसालीराम माडवारी ऐ.मो.रु. १५१। . .

साहू सुखराम माडवारी ऐ.मो.रु. २०१। . .

सुसरसा बगाराम कलवार मखनटोल मो.रु. २५१। . .

साहू मेगराज प्यारेलाल माडवारी भेडा-

सिङ मो.रु. ५१। . .

गीगराम माडवारी ब्राह्मण इन्द्रचोक मो.रु. २१। . .

श्री पशुपतिनाथका पूजाहारी रावल सुब्रह्मण्य

शास्त्री भट्ट मो.रु. ५९।४० . .

श्री पशुपतिनाथका पूजाहारी विष्णु शास्त्री

भट्ट मो.रु. ६।२५ . .

ऐ. का पूजाहारी विठल शास्त्री भट्ट मो.रु. ५। .

ऐ. का पूजाहारी नारायण शास्त्री भट्ट मो.रु. १०। . .

श्री वासुकी नारायणका पूजाहारी बी. डी.
के. नारायण शास्त्री भट्ट मो. रु. २५। . .
साहू बलदेवदास हनुमानप्रसाद माड़वारी
इन्द्रचोक मो. रु. ११०१। . .
साहू जुगलकिशोर, कालुराम माड़वारी
ऐ. मो. रु. ३०१। . .
साहू विश्वेश्वरलाल माड़वारी मखनटोल
मो. रु. २१। . .
साहू जगतराम माड़वारी ऐ. मो. रु. २१। . .
साहू ऋषिराम माड़वारी इन्द्रचोक मो. रु. २१। . .
साहू भुरामल माड़वारी ऐ. मो. रु. १०१। . .
साहू कृष्णनारायण माड़वारी ऐ. मो. रु. ३५१। . .
साहू ब्रजलाल माड़वारी ऐ. मो. रु. ३५१। . .
अबदुल रजाकमियाँ छेत्रपाटि मो. रु. २५। . .
ठाकुरराम महाबीर प्रसाद कलवार
इन्द्रचोक मो. रु. २०१। . .
साहू रामफल ज्ञानिराम इन्द्रचोक मो. रु. २२५। . .
साहू खुबलाल रामकाजु ऐ. मो. रु. ३१। . .

| | |
|---|---|
| इण्डियन कपर कार्पोरेशन लिमिटेड सींग-<br>भूम नोट रु.र कं. रु. | . ३ ८२५ |
| जष्टिस एस. सी. मल्लिक, जज हाइकोर्ट<br>कलकत्ता नोट रु. | .. १०० |
| साहू विष्णुशाह गोपालराम कलवार<br>इन्द्रचोक मो. रु. | २२५। . . |
| माष्टर मृत्युञ्जयसेन जाउलाखेल मो.रु. | २५। . . |
| प्रोफेसर सुधिर कुमार चौधरी त्रि–चन्द्र<br>कालेज मो.रु. | २५। . . |
| प्रोफेसर आशुतोष गंगुली ऐ. मो.रु. | २५। . . |
| ख. विष्णुलाल बिहारीलाल मो.रु. | ५०। . . |
| साहू श्रीकृष्ण अम्बरलाल माडवारी<br>इन्द्रचोक मो.रु. | ४०१। . . |
| साहू बक्सीराम नरसिंहदास माडवारी<br>ऐ. मो. रु. | ३५१। . . |
| साहू परशुराम मखनलाल माडवारी ऐ<br>मो.रु. | २०१। . . |
| साहू भोलाको छोरा शङ्कर माडवारी<br>ऐ मो.रु. | ११०१। . . |

| | | | |
|---|---|---|---|
| साहू रामानन्द मा:डवारी ऐ.मो.रु. | २५। | . | |
| साहू राजालाल कलवार मखन मो.रु. | १२५। | . | . |
| फुलचंसा, बाबुराम कलवार ऐ. मो.रु. | २५१। | . | . |
| सीताराम हरिराम कानु ऐ.मो.रु. | १२५। | . | . |
| साहू कालुराम रघुनाथ माडवारी ऐ. मो.रु. | १२५। | . | . |
| ध्वरिदत् प्रसाद अवधकिशोर कलवार ऐ मो.रु. | २१। | . | . |
| जम्मा— | २०९७९।६५ | १३९ | १०२७० |

## बेलायत

| | नोट रु. | पाउण्ड | कं.रु. | मो.रु. |
|---|---|---|---|---|
| ब्रुटिश एन्भ्वाय ले. क. सी. टी. डाक्स. सी. आइ. नोट.रु. ५०० | | . | . | . |
| ब्रुटिश काउन्सेल जनरल मि- छुर प्राइस क्याप्टन नोट रु. ५० | | . | . | . |
| रिक्रुंटिङ् अफिसर मान्यवर कर्णेल बाईली गोरखपुर नोट. रु. | १५० | . | . | . |

| | | | | |
|---|---|---|---|---|
| ले. क. ई. सी. ब्राउन ६ गोरखा राइफल कं. रु. | . | १०१ | | . |
| मिस् लिली पेएट येएट ओल्डफील्ड कं. रु. | . | १४ | . | . |
| मिष्टर येएट बम्फोर्ड बनारस नोट रु. र कं. रु. | ३६५ | | . २ | . |
| मिष्टर आर. जी. किल्वर्न नोट. रु. | २५० | . | . | . |
| मिष्टर एन. ई. पेनि बेलायत पाउण्ड | . | १।१।— | . | . |
| सर जहन क्याम्बेल ऐ. पाउण्ड | . | ३।३।— | . | . |
| मिसेस बीकहाम ऐ. पाउण्ड | . | १।१०।– | . | . |
| मिसेस मदन ऐ. पाउण्ड | . | २।–।— | . | . |
| मेजर. ई. जे. लुगार्ड ऐ. पाउण्ड | . | –।५।— | . | . |
| आर. के. ऐ. पाउण्ड | . | २।–।— | . | . |
| कर्णेल एल. डब्ल्यू. ई. वाट ऐ. पाउण्ड | . | १।१।— | . | . |
| मिस बी. आर. इभान्स ऐ. पाउण्ड | . | २।–।— | . | . |
| मिष्टर र मिसेस एस. एफ अर्मसवि ऐ. पाउण्ड | . | २५।–।–. | | . |
| आमन ऐ. पाउण्ड | | २।१०।– | . | . |

| | | | | |
|---|---|---|---|---|
| एम. ई. एल. ऐ. पाउण्ड | . | २।२।— | . | |
| ई. एफ. ब्याटेन ऐ. पाउण्ड | . | १।१— | . | . |
| पंगहील प्यारिश चर्च ऐ. पाउण्ड | . | १०।—। | . | . |
| ले.क.एच.ई.डू केब्राँक्म्यान ऐ. पाउण्ड | . | १—।— | . | . |
| मे. ज. निगेल् उडीयाट् ऐ. पाउण्ड | . | १।१।— | . | . |
| मिष्टर हाजलग्यादर ऐ नोट रु. र कं. रु. | ४५ | . | ५ | . |
| मिष्टर डब्ल्यू. एच. जे. विलकिन्सन, सी. एस. आइ. सी. आई. ई. ऐ. मो. रु. | . | . | . | २०० |
| मिष्टर अल्फ्रेडवाएट ऐ. नोट रु. | १०० | . | . | . |
| मिष्टर केनेथ किमर ऐ. नोट रु. र कं. रु. | ३३० | . | १ | . |
| मिष्टर एनलापौवेट, लण्डन ऐ. नोट रु. | ४० | . | . | . |
| जम्मा— | १८३० | ५५।१४।— | १२३ | २०० |

(पाउण्डको नोट रु. ७४५)

जम्मा नोट रु. २५७५

## जापान*

| | नोट रु. | कं. रु. |
|---|---|---|
| हारदा सोसाईटि फर गुड्विड्स्, टोकियो नोट रु. र कं. रु. | ११८० | ३॥ |
| योकोहामा म्युनिसिपलिटि र कटन स्पीनर्स एसोसिएशन, जापान नोट रु. र कं. रु. | २३६० | ६॥ |
| तोमोह कम्पनि, ओसाका, जापान नोट रु. | २० | |
| जापानका महाजनहरू र विद्यालयबाट कलकत्तामा रहेका जापानी कन्सल जनरल द्वारा आएको नोट रु. र कं. रु. | २२९५ | ५ |
| जापान चेम्बर अफ कमर्स आएण्ड इण्डष्ट्रि, इण्डो–जापानीज एसोसिएशन, इष्टर्न कल्चरल सोसाइटि आएण्ड बुद्धिष्ट युनियनबाट आएको नोट रु. | ३००० | |
| जम्मा– | ८८५५ | १५ |

* १६८० सालको त्यहाँको 'भूकम्प-रीलिफ-फण्ड' मा हाम्रो देशबाट पनि करीब रु. ५००० को चन्दा गएको थियो ।

# चौथा परिशिष्ट

"भूकम्प–सेवक"

तिनीहरूको प्रशंसनीय निश्वार्थी काम-को छोटो वर्णन सातौं भागमा केही लेखी सकेको छु। सो दुःखमय वखतमा मेरो सन्चालकित्त्वमा वसी दुःखीहरूको राम्रो सेवा टहल गर्ने-हरूको नाम तल लेख्दछु:—

गो. द. वा. हेडमाष्टर रुद्रराज पाँडे एम्. ए. प्रो. खडानन्द शर्मा एम० एस्-सी.

| | |
|---|---|
| पं. प्रेमराज | सिद्धिचरण |
| शेषराज | जगदीश प्रसाद |
| देवीविक्रम राणा | शाम्वदेव |
| अनन्त चन्द्र | दिग्विजयराज |
| महावीर प्रसाद | कृष्ण प्रसाद श्रेष्ठ |
| विरेन्द्र प्रसाद शाह | गङ्गाविक्रम |
| चुडा प्रसाद | गोकुलकृष्ण |
| वसन्त वहादूर | राम प्रसाद तन्दुकार |

| | |
|---|---|
| पूर्ण बहादूर श्रेष्ठ | जीवनाथ लोहनी |
| मा. ईश्वरी प्रसाद | हिरण्य भक्त |
| यज्ञ प्रसाद शाह | अम्बिका प्रसाद |
| पुस्कर नाथ | यज्ञ प्रसाद घिमिरे |
| गोपालजी | तीर्थराज |
| विष्णुदेव | गद्दी राम |
| टङ्कविलास | सिद्धिलाल |
| प्रेम प्रसाद तन्दुकार | क० मुक्तिनाथ |
| मा. चन्द्रलाल | बसन्तलाल |
| दिव्यदेव | मा. देववीर एम. ए. |
| गोपाल पाँडे | मा. चण्डिकालाल |
| शम्भू प्रसाद | गो. द. वा. पृ. नरेन्द्रमणि एम.ए., बी.एस्-सी |
| केदार बिष्ट | मा. खड्गमान |
| गोवर्धनलाल | मा. मोहन धोज |
| कृष्ण प्रसाद खत्री | मा. खड्ग धोज |
| गोविन्द बहादूर | मा. लाल बहादूर |
| गोकुलमान श्रेष्ठ | प्रो. बोधविक्रम एम.ए. |

| | |
|---|---|
| प्रो. आसुतोस सेन एम. एस्-सी. | मुकुन्दनाथ |
| प्रो. आसुतोस गांगुली एम. ए. बी. एल. | डिल्लीरमन |
| मा. रुद्रदास | तीर्थनाथ |
| प्रो. भैरव बहादूर एम. ए. | अमृत प्रसाद |
| मा. नेत्रनाथ बी. ए. | राम बहादूर थापा |
| कृष्णगोपाल वैद्य | केशरनर्सी जोसी |
| गोकुलमान | वृष बहादूर |
| राधाकृष्ण | जयानन्द |
| रामशरण | रामलाल |
| चन्द्रपूर्ण | केदारमान प्रधान |
| रत्न बहादूर मानंधर | ज्ञान बहादूर |
| हेम बहादूर | गोपाल मान |
| श्याम बहादूर | पदम बहादूर |
| रामप्रसाद श्रेष्ठ | सिद्धिलाल |
| रत्नलाल | रामेश्वरलाल |
| मित्रनाथ | भवानी प्रसाद |

| | |
|---|---|
| मा. ज्ञान प्रसाद | प्रेमलाल |
| तुलशीलाल | प्रो. नारायण बहादूर एम. ए. |
| तोत्रराज पाँडे | मा. पार्थमणि बी. ए. |
| यज्ञदेव | मा. तुलसी प्रसाद बी. ए. |
| मा. दुर्गा प्रसाद | ग्रिवाण विक्रम |
| चन्द्र बहादूर बस्न्यात | बलरामपाल |
| रामगोपाल वैद्य | बटुकृष्ण तेवारी |
| तारानन्द वैद्य | सुवर्णराज |
| लगत बहादूर | राम प्रसाद अमात्य |
| नन्दलाल | दुर्गामान प्रधान |
| रौनकमान | रोहिनीलाल |
| द्वारिका बहादूर | दिलराज उप्रेती |
| लक्ष्मणपाल वैद्य | गोपीमाधव |

## प्रथम संस्करण प्रकाश भए देखिको काम

प्रथम संस्करण छापिई सकेपछी भएको कामको केही विवरण यहाँ लेख्तछु ।

दुनियाँदारहरूको घर लगायत सरकारी घर देवा-

लयहरूको मर्मत र पुनर्निर्माण भइरहेको छ। तर अैले सम्मत राजधानी भित्रका धेरै जस्ता दुनियाँदारहरूको घरमा वास सम्मको केही न केही ठेगाना लागी सकेकोले पुराना-पुराना देवालय, इमारत र नया सडकहरू पट्टि विशेष काम हुन लागेको छ। देवालय, पाटि पौवाहरू आफ्ना-आफ्ना गुठियारहरूले गुठीको आयस्ता अनुसार मर्मत गर्न लागेका छन्। फेरि कोही मन्दिरमा पैले बनाउदा के के गरिएको थियो भन्ने बयानको लेख समेत पाइए-कोले अब बानाउदामा सजिलो हुने भयो। यति मात्र होइन कि सो मन्दिरले आफ्नै पुरानो स्वरूप केही न केही धारण गर्न शक्ने भयो औ लोप भै सकेका शिल्प-विद्याको समेत ज्ञान हुन शक्ने भयो। जस्तो पाटनको महा बौद्धको देवलमा सो देवल १६०८ सालमा बन्दा काममा लगाइएको ईँट बनाउने काठको साँचो र अरू बयान सहितको लेख पाइयो।*

---

* सो देवलको ईँट बहुतै राम्रो देखिन्छ। सो देवल देखेकाहरूलाई त्यसको बयान गर्नु पर्दैन। बरू पाठकहरूलाई चाहाहोला भनी ठानी सो लेखमा लेखिएको ईँट बनाउने काइदाको बयान यहाँ छोटकरीमा लेख्तछु।

भूकम्पमा भत्कँदा काठमाडौं, टुंडिखेल नजीकको धरहरा ४ तलासम्म अडेको थियो। त्यसको तल्लो तलासम्म भत्काई मजबूत साथ फेरि बनाउने काम भएको छ। त्यसको लागि बाँस, खट मात्रको खर्च पनि हजारौं रुपियाँ पुगेको छ। एउ ठूलो गौरवको कुरा काठमाडौं

---

सो देवल बनाउना लाई ईंट तयार पार्ने काइदा

"माटोर बालुवाको आधा-आधा भाग मिलाउनू। माटोको भागमा गिगिचा, झाकुवा, थकुरा, फिकिचा, गुंगुचा अन्न, किसिम-किसिमको माटो बराबर मिलाउनू औ चोटा, दैगल, अँध्यारो कोठामा राखी छायाले सुकाउनू। सूर्य पाकमा राख्न हुँदैन। सुकेको माटोको आधा तौल भए पछि मात्र सुकेको भनी जान्नु। अनि पछि मात्र अग्नि-पाक गर्नू। अमृतारम्भ भन्ने बुद्धको मूर्ति १३ तलासम्म खप्ट्याइ छाप्नू। अथाल चाहिने यस्तो हुनुपर्दछ।"





च्यासिङ्‌ देवल ( पाटन ) मर्मत हुनलागेको



सो नयाँ सडक बनलागेको वखत



धरहरा ( काठमाडौं ) मर्मत हुनलागेको



सो सडकमुनी पानीको ढल राख्नलागेको बखत

हनुमान ढोका देखि टुंडि-खेल सम्म एक नयाँ फराकिलो सडक बन्न लागेको छ र त्यसको दुवै तर्फ सुहाउदो घर बस्ति पनि बन्न लागेका छन्। सडकमा ढल राख्न आदि बन्दोवस्त भएकोले समय सुहाउदो सडक बन्ने भएको छ। पहिलेको घनो बस्ति भएको ठाउँमा यस्तो नयाँ बस्तिको उत्पन्न हुनु शहरको गौरव बढ्ने कुरा हो। शहर बाहिर अरू ठाउँ-ठाउँमा पहिलेको सडकलाई फराकिलो पारी पकडएडी 'फुटपाथ' समेत बन्न लागेकाछन्। भक्तपुरमापनि घर अगाडिका पालिहरू तोडी सडकहरू खुलार चौडा बन्न लागेका छन् जस वाट शहर खुला देखिएको छ।

देवल र पुराना-पुराना इमारतहरूको मर्मत र पुनर्निर्माणपनि हुन लागेको छ। तर त्यस पट्टि विशेष शिल्प कालिगढीको काम भएकोले केही समय लाग्ने कुराहो। कोही-कोही त तयार पनि भइसके। भादगाउमा (भक्तपुर) दरवार ५६ झ्याले र सो नजदीकको कृष्णको देवल र काठमाडौंमा ढुङ्गाको हात्ती समेत रानी पोखरी वरि परिका देवलहरू, हनुमान ढोका दर्वार तयार भइसके।

घर, दरबारहरू पनि धेरै जस्ता मर्मत भै सकेतापनि धेरै जस्तामा जगै सम्म भत्काई फेरी बनाइएकाले समय औ खर्चपनि धेरै लागेकोहो। जाउलाखेल दरबार, महाराज गञ्जको लक्ष्मीनिवास, भाट-भटिनिका र पुल-चोकका महलहरू पहिलेको भन्दा धेरै नै फरक गरी बनाइएका छन्। देखदा थोरै मात्र भत्केका महलहरूपनि ठाउँ-ठाउँमा धेरै कच्चा भएकोले कच्चा भागहरू भत्काई फेरी मर्मत गरिएकाछन्। यो खण्डमा बबर महल, सिंह महलहरू पर्दछन्। थापाथलिको गोल बैठक लगायेत अरू पुराना दर्बारहरू र कोही अरू भार्दारको घर समेत पुरै जगै सम्म तोडी भत्काएका छन्। यसरी भत्केका घरका धनीहरू मध्ये धेरै जस्ताले नञा जग्गामा आफ्नु घर बास बनाएका छन्। यसको परिणाम ठाउँ-ठाउँमा सुहाउदा घरहरू देखिन्छन्।

भूकम्प-पीडितोद्धारक-फण्डमा जम्मा मो० रू. १०७५१०४।६५ नोट रु० २५८४५ र कं०रू. १४८६॥ भएको छ।

राजधानी भित्र भूकम्पमा भत्केका घर बनाउनेहरूको लागि सुफत मोलमा माल सर्जाम पाऊन् भन्नाको खातिर सरकारबाट तपसीलको नञा बन्दोबस्त भएको छ।

## तपसील

( १ ) गोदावरी, नागार्जुन समेतका वनबाट दलिन थान १२००० सरकार तर्फबाट कटानी भई काठमाडौं, भादगाउँ र पाटनका दुनियाँहरू लाई बिक्रि हुने ।

( २ ) पहाड टुंखर्कका बन बाट ठेकदार मार्फत काठ दलिन थान १३००० कटानी भई भादगाउँ ब्रगेड मार्फत ठेकदार-ले नै दिएका दरमा बिक्रि हुने ।

( ३ ) भादगाउँ (भक्तपुर) का डकर्मी, सिकर्मी, बज्र-कर्मी र नकर्मी समेतका कालिगढहरूले ज्याला बढाई लिने गरेकोले सबै कालिगढ-हरूको कंट्रोल लगतगरी ३ खण्डको १ खण्ड कालिगढ सरकारी काममा र २ खण्ड दुनियाँको काममा दरकार अनुसार दुनियाँ-लाई कंट्रोल फाँटबाट खटाई दिनको देहाएका पैसाका दरले ज्याला दिलाउने औ सो भन्दा घटी वढी ज्याला लिन दिन नपाउने बन्दोवस्त भएकोछ।

| असामी | सरकारी कामके | दुनियाँको कामके |
|---|---|---|
| | कार्तिक १ गते देखि | वैशाख १ गते चैत्र देखि आश्विन के | सबै महिना मो. रू. |

| | मसान्त तकके | मसान्त तकके | |
|---|---|---|---|
| | मो. रु. | मो. रु. | |
| पहिला नम्बर सिकर्मी के | ।६० | ।७२ | ।६० |
| दोश्रा नम्बर ऐ. के | ।४८ | ।६० | ।४८ |
| तेश्रा नम्बर ऐ. के | ।३२ | ।४८ | ।३२ |
| पहिला नं. डकर्मी, नकर्मी, बज्रकर्मी, लोह-कर्मी के | ।६० | ।६८ | ।६० |
| दोश्रा नं. ऐ. के | ।४८ | ।५६ | ।४८ |
| तेश्रा नं. ऐ. के | ।३२ | ।४४ | ।३२ |
| पहिला नम्बर चित्रकारीके | ।६० | ।६४ | ।६० |
| दोश्रा नं. ऐ. के | ।४८ | ।५२ | ।४८ |
| तेश्रा नं. ऐ. के | ।३२ | ।४० | ।३२ |

यसरी कंट्रोल लगत गर्ने काम-को सुरू भादगाउँ (भक्तपुर) बाट भयोतापनि अवस्थाको विचार र काम-को नतिजा बाट त्यसो गर्नु आवश्यक देखियो।

भूकम्प गयो कत्रा-कत्रा घर कस्ता-कस्ता देवलहरू चूर भई भत्के। तर मानिसको परिश्रमले कति घर-हरू उठिसके। मेरो पैसा उसको खल्तीमा र उसको पैसा मेरो

खस्तीमा भयो, तर (विदेशी माल सर्जाम र विदेशी कामदार-ले लगेको पैसा वाहेक ) देशको पैसा देशमै अड्यो-यसको असल परिणाम हामीले देख्तैछौं। यो भूकम्पबाट मिलेको एक असल शिक्षा हो।

अब त काम-पनि क्रमैसंग हलुको हुंदै आएको छ। अब केही वर्ष बाद भूकम्पको घाउ पूरा टालिन जालाकि भन्ने आशा पनिछ। र सोही दिन-लाई चाँडै निमन्त्रणा गर्दै यो कलम लाई यहाँ थाम्दछु।

[ वि. सं. १९९२ ]

# ाल राज्यको नक्सा



भूकम्प बाट कडा मार परेको इलाका

भूकम्प बाट कम मार परेको इलाका

## काठमाडौं उपत्यका लगायत पूर्वी नेपालमा महाभूकम्पको घटना ✪
### र तात्कालिक नव–ग्रहका गतिविधि एक झलक




वि.सं. १९९० माघ २ गते, सोमवार (माघ कृष्ण औंसी) दिउँसो १४।२४ बजे

**( on Monday, 15 January 1934 A.D. )**

| | | | | |
|---|---|---|---|---|
| × बु | : | पूर्वास्त | बुध | १९९०।९।९ – १९९०।१०।१० गतेसम्म |
| शु → | : | वक्री | शुक्र | १९९०।९।२६ – १९९०।११।०६ गतेसम्म |
| × मं | : | पश्चिमास्त | भौम (मङ्गल/अङ्गार) | १९९०।९।२९ – १९९१।०३।०८ गतेसम्म |
| (श) | : | स्वगृह | शनि (मकर : राशि स्वामी, राशि अधिपति) | |
| ↑ मं | : | उच्चस्थ ग्रह | भौम (मङ्गल/अङ्गार) | |

✪ असह्य खप्की पाएका तात्कालिक भविष्यवक्ता : ( न्ह्योखा, तर्धचोक, काठमाडौं निवासी ) ज्यो. छविलाल देवकोटाद्वारा (प्रात:कालमा) ज्योतिष विषयक सबै ग्रन्थहरू जलाएर पासो लगाई आत्महत्या ।